कृति : सिक्काका दुवै पाटा
विधा : लेख/निबन्धसङ्ग्रह
लेखक : डा. नवराज सुब्बा
आवरण : Canva
माध्यम : ई–बुक
प्रकाशक : हाम्रो आइडिया (प्रा. लि.) विराटनगर, नेपाल
सर्वाधिकार : लेखकमा सुरक्षित
प्रथम संस्करण : सन् २०२२ (वि.स. २०७९)
मूल्य: रु. २००।–

**ISBN: 978-9937-1-3014-1**

'SIKKAKA DUVAI PATA,' Essays
- Dr. Nawa Raj Subba.

**Copyright © 2022 Nawa Raj Subba**
**All rights reserved.**

# प्राक्कथन

दिनलाई कोही रात देख्छन्, कोही रातलाई दिन । हुन पनि मानिसलाई कहिले उज्यालो त कहिले अँध्यारो चाहिँदो रहेछ । मान्छेका तिनै नजर र कलमले समयलाई चित्रित गर्दा हामी पाठक अल्मलिन्छौँ । मान्छे तथ्य र मिथ्या दुवैमा विश्वास गर्दछन् भन्ने कुरा लेखकहरूलाई थाहा छ । केही सत्य र केही झूट वा रोमान्सले हामीलाई चाँडो प्रभावित पार्दछ भन्ने पनि तिनीहरूलाई थाहा छ । काटिएको यलम्बरको शिर भिरेर महाभारत युद्ध हेरेको हेर्यै छु । रणमैदान देखेर यलम् ब्यङ्ग्यात्मक हाँसेझैँ यो कलम आज जुर्मुराएको छ । जीवनका अँध्यारा भ्रमका तीता, टर्रा यथार्थ सारा छाम्दैछु । पढ्दा कतै तीतो वा टर्रो लाग्न सक्दछ । किनभने यथार्थ बढी तीतो नै छ । जेहोस्, म समयको तस्वीर कोरेर अभिलेखीकरणा गर्न चाहन्छु । सोही प्रयासकै एक प्रतिफल हो प्रस्तुत लेख, निबन्धसङ्ग्रह, सिक्काका दुवै पाटा ।

जीवन र जगत जसरी विषम अवस्थामा बाँच्दछ त्यसरी नै मानिसका मन, भावना र व्यवहार पनि खण्डित र बहुरुपका हुने गर्दछन् । विभिन्न अवस्थामा लेखिएका लेखमा एकरुपता नदेखिनु स्वभाविक हो । जगतका भोगाइलाई सर्जकले सकेसम्म सुन्दर ढङ्गले पस्कनु पर्दछ । यद्यपि, स्रष्टाको जीवन भोगाइ, अक्षरकोराइ निरपेक्ष भने हुदैनन् । मान्छेका दिन, रात, समय काल र परिस्थिति फरक फरक हुन्छन् । त्यसैले नियमित तथा आकस्मिक परिवेशले रचनामा पनि विविधता ल्याइदिएका छन् । यो लेखकले सोही महसुस गरेको छ ।

कालक्रमानुसार म बालक, युवा हुँदै वृद्धावस्थामा आइपुगें । अब संसार हेर्ने, सोच्ने, विचार गर्ने मेरा दृष्टिकोण क्रमस: फरक हुँदै गए । जीवन र जगत सजाउने फ्रेम पनि पहिले भन्दा बेग्लै हुँदै गएको छ । त्यसैले विभिन्न पल र परिवेशका विचार र टिप्पणीमा फरक स्वाद आउन सक्छन् । जे भए पनि, मानवीय जीवनचक्रमा सबैले भोगेका, चाखेका स्वादभन्दा मेरा फरक पक्कै छैनन् । मैले पनि पाठकहरूका जीवनलाई नै भोगे। सबैका मनभित्र गुञ्जने ध्वनि समान हुन् केवल हेराइ र लय मात्र यहाँ फरक परेका होलान् ।

सायद, म एक भएर पनि बहुरूप, बहुविचार, बहुपरिवेशलाई प्रतिबिम्वित गर्न खोजिरहेछु । आफ्नै लेखाइ देखेर कहिलेकाहीँ आफैलाई असजिलो, अनौठो लाग्छ । योजनाअनुसार जीवन चलाउन जतिसुकै खोजे पनि व्यवहारिक जीवनमा मान्छेको जीवनमार्ग, भोगाइक्रम र लेखनयात्राले निर्धारित रेखामा हिड्न मान्दैन । नियतिको ताल, सुरमा हामी सर्जकले पनि डोरिनु पर्ने वाध्यता छ । फलस्वरुप, जानेका, देखेका, भोगेका कुरा छलफल गर्न, केलाउन र देखाउन कलम रोजें ।

हिजो विद्यालयमा प्रतियोगितामा पुरस्कार जिलका लागि मैले विद्यालयमा निबन्ध लेख्न सिकेँ । त्यसबेला निबन्ध लेखेर एकदिन लेखक बनिएला भन्ने हेक्का थिएन ।

एकजना सहपाठीले उसबेला भन्दथे – यसरी नै निबन्ध लेखिस् भने तँ एकदिन लेखक बन्लास् । ती साथी अहिले यो भौतिक दुनियाँमा छैनन् । यद्यपि, उनले गरेको भविश्यवाणी भने मेरा लागि आज गह्रौं भारी बनेको छ । लेख, निबन्धलाई जब आफ्नै जीवनसित नचुडिने गरी नाता गाँसिएको पाउँदा मलाई ती दिवंगत मित्रको याद आइरहन्छ । हो, उसबेला पुरस्कार जिललाई मैले कागजकापीमा अक्षार कोरेथें । अब त मलाई कुनै पुरस्कार जित्नु पनि छैन, किन अक्षर कोर्नु पर्‍यो र ? आफैलाई प्रश्न गर्छु । आफ्नै मनले फेरि जवाफ दिन्छ– लेख केटा लेख्, तेरो भारी मन हलुका हुन्छ, लेख्दालेख्दै कतै राम्रो लेखिस् भने पाठकको मनमा बास पाउलास् । घरिघरि उत्पन्न यही अन्तर्ध्वनीले गर्दा घोत्लिन्छु र पोखिन्छु, पानामा ।

मूल्य र मान्यतामा रहेर अक्षर कोर्न खोजेको अब त निकै भयो । पाठकको मन जित्नु पक्कै बहादुरी नै हो, यद्यपि, लेख्दै जाँदा कुनै लेखोट कसैलाई मन पर्ला कसैलाई मन नपर्ला । लेख्न थालेपछि हजार मित्र बनाइएला भन्ने सोचेँ तर साहित्यिक बजारमा प्रतिस्पर्धी भेटिनु स्वभाविक भए तापनि अस्वस्थ वातावरण चुनौती देखेँ । यद्यपि, कलम रोकिएन, किनकी सार्थक र अर्थपूर्ण लेखन मेरो लक्ष्य हो । यही आशाको त्यान्द्रो एक हातमा र अर्को हातमा कलम समातेर साहित्यिक फाँटमा बामे सर्दैछु । मलाई स्वस्थ प्रतिस्पर्धामा विश्वास लाग्दछ ।

मैले लेखनलाई जीवनका विविध आयाममा डोर्‍याएँ । लेखक परम्परागत छन्, पूर्वीय वाङ्मयमा हुर्केको नाताले म पनि परम्परागत ज्ञानलाई  माया गर्दछु । तापनि कतिपय सवालमा आलोचनात्मक भएर कलम चलाउँदैछु । विचार वा लेखनको तीव्रतालाई आदिभौतिक ज्ञान र शास्त्रीयताको जडशुत्रमा अड्काएर प्रवाह रोक्न चाहन्न । जीवन र जगतलाई वैज्ञानिक चश्माले हेर्न र लेख्न तम्सिएको छु । यसरी युगानुकूल साहित्य जन्माउन खोज्दैछु ।

जीवनलाई सरल बनाउने कि जटिल बनाउने भन्ने सवालमा मैले जटिल जीवनलाई सरल भाषाामा बुझ्ने र बुझाउने बाटो खोजेँ । साहित्यकारले जीवन जगतका कुरा गर्दा अलङ्कार र विम्वकापछि पाठकलाई दौडाएर सारमा अल्मल्याउने वा दिग्भ्रमित पार्ने काम उचित लागेन । त्यसो गर्नु एक प्रकाको लेखकीय बेइमानी हो भन्ने मान्दछु । धेरै सर्जक सौन्दर्य र रोमाञ्चका पछि आफूसंगै पाठकलाई दौडाएर सत्य, तथ्य उद्घाटन गर्न नसकेर अल्मलिएका छन् । परिपक्व विचार र अनुभूति हासिल भएपछि पस्केका रचना उपयोगी हुन्छन् । साहित्यिक पुस्तक वा रचना पढ्नु भनेको समय काट्ने माध्यम मात्र होइन । लेखकको सम्प्रेषण पाठकलाई मार्गदर्शक कोसेढुङ्गा बन्नुपर्दछ भन्ने मेरो मान्यता हो ।

समग्रमा जीवन भोगेर मात्र साध्य हुँदैन, जगतलाई राम्ररी पढ्नु पनि जरुरी हुन्छ । विषयवस्तु वा घटनालाई राम्ररी केलाउन नसकी लेखिएका सिर्जना अधुरा लाग्छन् । अक्षर खिप्नु मात्र सिर्जना होइन । सुन्दर सिर्जना बनाउनलाई पहिले स्रष्टाको मन सफा हुनुपर्दछ । स्रष्टाको मन स्वच्छ हुनु भनेको कुरो सत्य देख्नु, भोग्नु हो । सत्य र तथ्य सहितको अनुभव सर्जकलाई भएपछि पाठकले सुन्दर सिर्जना पढ्न पाउँछन् ।

यसकारण विना अध्ययन केवल भावनामा बहकिएर खिपिएका पाठ पढ्दा सुन्दा मीठो लागे पनि ती सामग्रीले पाठकका जीवनलाई उज्यालो पार्ने गरी जीवनोपयोगी मूल्य थमाउन सक्दैनन् । आज मनोरञ्जक साहित्यभन्दा सद्‌गुणयुक्त युगानुकूल जीवनोपयोगी साहित्यको खाँचो छ ।

लेखकले वर्तमानमा अडेस लागेर लेख्छ । कलमले वर्तमानका पाठकलाई सम्बोधन गर्दछ । हिड्दा हिड्दै आफै हराउने साहित्यले हामीलाई अघि बढाउँदैन । यसकारण मैले मेरा पाठक आजका आँखा मात्र नभएर भोलिका पुस्तालाई समेत दृष्टिगत गरेको छु । भविश्यप्रति जिम्मेवार बन्दै लेख्न खोजेको छु । किनभने मैले आजभन्दा पनि आगामी दिनप्रति धेरै भरोसा राखेको छु । लेखनलाई अबको १०० वर्षपछि ५०० वर्ष वा हजार वर्षपछि पढ्दासमेत सुन्दर होस् । मैले भनेको सुन्दर सत्य र जीवनोपयोगी पनि होस् । कहावत नै छ, सत्यम् शिवम् सुन्दरम् ।

नढाँटी भन्दा, सङ्ग्रहित लेख, रचना मैले पुस्तकलाई लागि भनी तयार पारेका सामग्री होइनन् । कुनै सन्दर्भमा कसैको आग्रहमा कतिपय समसामयिक लेख रचना लेखिएका हुन् । केही रचना कृति पढेर प्रभावित भएर स्वस्फूर्त रुपमा समीक्षाका रुपमा कोरिए । कुनै लेख चिनेका असल मानिसको मृत्युपछि सामाजिक सञ्जालमार्फत् श्रद्धाञ्जली दिने मनसायले गरिएका टिप्पणी हुन् । समाजका असल मानिस कमै संख्यामा भए पनि छन् । उनीहरूले मेरो जीवनमा सकारात्मक प्रभाव पारेका छन् ।

मान्छेका उज्याला विचार र व्यवहार उद्‌घाटनले पाठकलाई सहयोग पुग्ला भन्ठानेर आफ्ना अनुभूति लेखमा लिपिवद्ध गरेँ । जेहोस्, लेख्न बस्दा हृदय खोलेर कविताझैं अनुभूति हरर पोखिदिएँ । मनमा उर्लेका भावनालाई अक्षरमा पोखिदिएँ । कतिपय लेख लेख्दा दिमाग खियाए तापनि कुरा नचपाइकन बिना पूर्वाग्रह हृदय खोलिदिएको छु । यसरी आत्मा साक्षी राखेर लेखिएका पाठले पाठकीय मन स्पर्श गर्लान् भन्ने आशा राखेको छु ।

आजसम्म छरिएर रहेका लेख, निबन्धलाई जतनले पोको पारेर ‘सिक्काका दुवै पाटा’ शिर्षक दिएर पाठकलाई ई–बुक थमाइदिएको छु । सामाजिक सञ्जालमार्फत् प्राप्त प्रतिक्रियाका आधारमा कतिपय लेख, रचनालाई परिमार्जन गरेको छु । मेरा व्यक्तिगत अनुभूति, भावनात्मक अन्तरक्रिया अब साझा भएका छन् ।

कल्पन्छु, यसबेला एकातिर वर्तमानका हात मेरा अघि लम्किएका छन्, अर्कातिर आशाका किरण भविश्यका आकाशमा उदाइरहेका होलान् । तिनै आशाका दुई हत्केलामा उपहारस्वरूप दुई कर जोडेर ‘सिक्काका दुवै पाटा’ लोकार्पित गर्दछु ! धन्यवाद ।

**डा. नवराज सुब्बा**
विराटनगर, नेपाल

# विषय–सूची

# १ सहिदलाई सलाम

आज हामीले पाएको स्वतन्त्रता, नागरिक हक र अधिकार सजिलै पाएका होइनौं । विभिन्न किसिमका बन्धनबाट मुक्ति पाउन, मानव अधिकार स्थापित गर्नका लागि विश्वभरिका जनता निरङ्कुशताविरुद्ध लडेका छन् । फलस्वरुप अधिकार प्राप्तिको लागि विभिन्न कालखण्डमा भएका अभियानमा धेरै मानिस सहिद भएका छन् । सहिद त्यो हो जसले लोकहितमा बिना स्वार्थ आफूलाई समर्पित गर्ने गर्दछ । वीर मानिस मात्र देशको प्राकृतिक, सामाजिक, सांस्कृतिक उन्नयन खातिर स्वस्फुर्त निरन्तररुपमा लड्दछ ।

नेपालमा जहानीया शासनविरुद्ध धेरै सहिदले जीवन बलिदान दिए । फलस्वरुप हामीले जहानीया राणा शासनबाट छुटकारा पायौं । देशबाहिर उर्लेका स्वतन्त्रता तथा मानव अधिकार आन्दोलनका प्रकाशले नेपालमा पनि राजनीतिक परिवर्तन भए । आन्दोलनमार्फत् प्रजा नागरिक भएका हुन् । त्यसैले ज्ञात, अज्ञात सहिदलाई सम्झेर इतिहासप्रति कृतज्ञता जनाउन भुल्नु हुँदैन ।

हाम्रो देश नेपालमा प्रथम राणा प्रधानमन्त्री जङ्गबहादुर राणाले आफूविरुद्ध प्रचारप्रसार गरेको अभियोगमा वि. स. १९३३ फागुन २० गते लखन थापा मगरलाई मनकामना मन्दिर नजिकै जङ्गलको एक रुखमा झुन्ड्याएर सहिद बनाइदिए । स्वतन्त्रताको मूल्यखातिर राणाविरुद्ध लखन थापा मगरले विद्रोह गरेका थिए । उनले राणा शासनको अंग्रेजपरस्त नीति तथा निरङ्कुशताविरुद्ध जीवन बलिदान दिए । राणाशासनविरुद्ध यो पहिलो बलिदानी थियो ।

इतिहास र वर्तमान भन्छ, शाह,राणा नेपाललाई आफ्नो बपौती ठान्दछन् । राणा शासनले जनतालाई शासित प्रजाका रुपमा अत्याचारपूर्वक शासन गर्‍यो । देशलाई सधै अन्धकारमय बनाएर राखे । राणा शासनले लामो कालसम्म शिक्षा र स्वास्थ्य जस्ता आधारभूत सेवाबाट देश र जनतालाई वञ्चित तुल्यायो । फलस्वरुप देशमा राणाशासनविरुद्ध लहर उर्लियो । वि.स. १९९७ मा निरङ्कुश राणा सरकारले शुक्रराज शास्त्री, धर्मभक्त माथेमा, दशरथ चन्द र गंगालाल श्रेष्ठलाई काठमाडौं टेकु पचलीस्थित रुखमा झुन्ड्याएर तथा गोली हानेर सहिद बनायो । नेपाली प्रजातान्त्रिक आन्दोलनमा चारजना वीर सपूतहरूले ज्यान बलिदान दिए । उनीहरू जनताको हक र हितको खातिर प्रजातान्त्रिक आन्दोलनमा अमर सहिद बने ।

राणाहरूले शाह राजालाई पनि चङ्गुलमा परेका थिए । राणा प्रधानमन्त्रीले शाह राजालाई समेत प्रभाव पारेका थिए । राणाको नियन्त्रणविरुद्ध राजा त्रिभुवनले भारतीय

दूतावासमा शरण लिए । उनी सपरिवार भारतीय राजदूतावासमार्फत् भारतको नयाँ दिल्लीमा पुगे । राजा त्रिभुवन, राणा परिवार र प्रजातन्त्रिक शक्तिबीचमा भारतले दिल्लीमा राजनीतिक सन्धि सम्पन्न भयो । फलस्वरुप, राणा नै प्रधानमंत्री बने तापनि राणाले हडपेको राजाको शक्ति फिर्ता भयो । राजा त्रिभुवन राजगद्दिमा पुनः आसिन भए । यसरी नेपालमा २००७ सालमा प्रजातन्त्र आएको घोषणा भयो । आज हामी यही घटनालाई प्रजातन्त्र दिवसको रुपमा मनाउँछौं । यद्यपि यसलाई राजनीतिक क्षेत्रमा धोखापूर्ण दिल्ली सम्झौता मानिन्छ जहाँबाट नेपालमा भारतको हस्तक्षेप सुरु भयो ।

२००७ सालपछि राजा त्रिभुवन नेपालका राष्ट्रपिता बनेको पाठ पढाइयो । राजा त्रिभुवनले भारतमा लिएको शरण अपमानजनक रहेको र यसले नेपाललाई दीर्घकालीन प्रभाव परेको तथ्य, राजा महेन्द्र र वीरेन्द्रको डायरी युट्युब च्यानलबाट हालै नेपालको गुप्तचरले प्रकाशमा ल्याएको छ । जेहोस्, त्यसपछि राणाले पछिल्लो कालमा सहिद बनाएका चारजनालाई सहिद घोषणा गरियो । यही सन्देश दिन काठमाडौं टुँडिखेलमा सहिदगेट बन्यो । जहाँ राजा त्रिभुवन र चार सहिदको प्रतिमा राखियो । बिडम्बना, राणाविरुद्ध जंगबहादुरकै पालामा लडेका प्रथम सहिद लखन थापा मगरको सालिक भने त्यहाँ बनेन ।

सत्ताले सहिदमाथि खेलवाड गर्ने गर्दछ । देशमा राणा शासन समाप्त भएको औपचारिक घोषणा गरिए तापनि वास्तवमा नेपालको शासन प्रणालीमा राणाहरूको वर्चश्व कायम थियो । त्यसैले आफ्नाविरुद्ध लागेका प्रथम सहिद लखन थापा मगरलाई श्री ५ को सरकारले २००७ सालपछि तत्काल सम्मान गरेन । राणा शासन सकिएपछि पनि उनीहरूको प्रभावले त्यो भयो । जनचेतना र जनदवाका फलस्वरुप लखन थापा मगरलाई वि.स. २०५६ मा मात्र नेपालको पहिलो सहिद भनी घोषणा गरियो ।

लखन थापा मगर समग्र नेपालीका प्रतिनिधि पात्र हुन् । उनले आदिवासीका भावनालाई पनि सम्मान गरेका थिए । जंगबहादुरले जालझेल गरी सत्ता लिएको लखन थापा मगरलाई मन परेन । जंगबहादुरले सत्ता पाएपछि अंग्रेजसित अनावश्यक हेलमेल गरेर देश बेचेको कुरा उनलाई मन परेन । राणाशासनले सन् १८५४ को मुलुकी ऐनद्वारा जनजातिलाई तल्लो जातमा राखेको, राज्यले छुवाछुत र भेदभाव बढावा गरेको लखन थापा मगरलाई झन मन परेन । अन्यायपूर्ण नियम कानुन ल्याएको, शिक्षाको अवसरबाट जनतालाई बञ्चित राखेकामा अब राज्यविरुद्ध उठेनै पर्ने उनले सङ्कल्प गरे । अन्याय, अत्याचारका विरुद्धमा लखन थापा मगरले साहसिक कदम चाले ।

जंगबहादुरलाई सत्ताच्यूच गर्न मगरले मनकामना गढमा मानिस संगठित गरे । उनले वि.स. १९३२ मा चेतनाको दियो बालेर राँके जुलुस निकाले । यसरी सत्ताविरुद्ध उनले शङ्खघोष गरे । जनचेतना र विद्रोहको आगो सल्केकाले त्यसलाई निभाउन जंगबहादुर उत्रिए । अत्याचारी राणाशासनले लखन थापा मगरलाई वि.स. १९३३ मा सहिद बनायो । देशको मुहार फेर्ने सपना बोकेका एक वीर सुपुत्र देशले गुमायो ।

शाहकालीन निरङ्कुश राणाशासनले सामाजिक भेदभाव बढायो । राणाशासनले आदिवासीका भाषा लिपि र संस्कृतिलाई माथि पनि दमन गर्ने नीति लियो । तत्कालीन सत्ताले पूर्वी नेपालमा बसोबास गर्ने आदिवासी लिम्बूका भाषा र लिपिमाथि नियन्त्रण गऱ्यो । भाषा र लिपिमार्फत जातीय एकता गरेर राज्यविप्लव गर्लान् भन्ने त्रास शाह तथा

राणा शासकमा व्याप्त थियो । यही क्रममा गोरखा राज्य विस्तार गरेपछि तत्कालीन गोरखाली शासकले वि.स. १८४५ मा तेअङ्सी सिङ (सेन) थेबेलाई चैनपुरबाट लखेटिदियो । थेबेलाई लिम्बू भाषा, लिपि तथा संस्कृति प्रचारप्रसार गरेको आरोपमा तत्कालीन गोरखाली शासकले देशनिकाला गरिदियो ।

थेबे ज्यान जोगाउन त्यहाँबाट सिक्किम भागे । उनले त्यहाँ पनि लिम्बू भाषा, लिपि सिकाउने कामलाई निरन्तरता दिए । त्यसबेला सिक्किममा बौद्ध धर्मावलम्बी शासन गर्दथे । उनीहरू अन्य भाषा, लिपि र संस्कृतिको उपस्थिति सहदैनथे । फलस्वरुप लिम्बू भाषा र लिपिको प्रचारले बौद्ध परम्परामा असर पर्ने ठानेर त्यहाँका लामाहरूले तेअङ्सी सिङ (सेन) थेबेको उपस्थिति असह्य भयो । एकदिन लामाहरूले थेबेलाई पक्रेर अमानवीय तवरले हत्या गरिदिए । यसरी तेअङ्सी सिङ (सेन) थेबे लिम्बू भाषा र लिपिका निम्ति जीवन बलिदान गर्ने वीर सहिद बने । यद्यपि, नेपाल सरकारले उनलाई चिनेको देखिदैन । नेपालको संविधान २०७२ अनुसार नेपालमा बोलिने मातृभाषा नेपाली राष्ट्रभाषा भएका छन् । बिडम्बना, मूलधारको नेपाली खस भाषा साहित्य जगतले नेपालकै किरात लिम्बू राष्ट्रभाषाका सहिद थेबेबारे सोधखोज गर्ने औचित्य देख्दैन ।

नेपाल एकीकरण वा गोरखा विस्तार भएपछि पराजित आदिवासी लिम्बू भाषा र संस्कृतिलाई उसैको रैथाने भूमिमा हुर्कन, बढ्न दिइएन । लिम्बू भाषा र लिपिलाई नेपालमा मात्र हैन लिम्बू बहुल क्षेत्र रहेको सिक्किम, दार्जिलिङमा समेत राणामैत्री अंग्रेज शासनले तुषारापात गरिदियो । जनस्तरमा यदाकदा भित्रभित्रै भाषा, लिपि प्रयोग गरेको थाहा पाएमा जासुस लगाएर उसको खेदो खन्ने, लखेट्ने वा हत्या गरिदिने जस्ता जघन्य काम त्यसबेलाका शासकले गर्ने गर्दथे भनी बूढापाका घटनाक्रम सुनाउँछन् । त्यही डर, त्रासले गर्दा ज्यान जोगाउन आफ्नो परम्परागत भाषा र लिपि त्याग्नु परेको ब्यथा–वृत्तान्त बृद्ध किरात लिम्बूमाझ सुनिन्थ्यो।

फलस्वरुप, आज किरात लिम्बू भाषा, साहित्य मासिएको अवस्थामा छ । किरात लिम्बू भाषा साहित्यका पुस्तक, पाण्डुलिपि तत्कालिन शासकले जफत गरेर जलाइदिएको जनगुनासो समाजमा छ। यसर्थ, मानव संस्कृति, भाषा साहित्यको इतिहास खोतल्दा वा आदिवासी मन छाम्दा त्यसभित्र अत्याचारी शासकले पिल्स्याएका डाम यत्रतत्र भेटिन्छन् ।

सहिदको बलिदानीले नै नेपालको राजनीतिक स्वरूप र संरचना फेरिएको हो । नेपालमा लोकतान्त्रिक संघीय गणतन्त्र आएपछि आदिवासीका भाषा, लिपि र संस्कृतिले अवसर पाएका छन् । आज आदिवासीका मनका कुरा खुलेर आएका छन् । उनीहरूले गुनासो पोख्न पाएका छन् ।

मातृभाषा र लिपिको संरक्षण र विकासमा विभिन्न जाति जागरुक बनेका छन् । गाउँपालिकास्तरमा मातृभाषा पढाउने चलन चलेको छ । पाठ्यक्रम, पाठ्यपुस्तकसहित विद्यालयमा पढाइ हुन थालेका छन् । अब महाविद्यालय, विश्वविद्यालयका खोल्ने सपना आदिवासीले देख्न थालेका छन् । यसलाई पक्कै सकारात्मक मान्नुपर्दछ । हालको यो अवस्था पनि सहिदको कारणले नै आएको हो ।

नेपाली समाजमा सत्ताको सेप महिलालाई पनि लाग्यो । धर्मशास्त्रको आडमा राज्यले महिलालाई कानुनी रुपमै दोस्रो दर्जामा राखेको थियो । यस्तो अन्यायपूर्ण

परिबन्द मिलाउनमा स्वार्थ समूह, सत्ता र राजनीतिको ठूलो हात थियो । लिच्छवीकाल, मल्लकाल र राणाकालमा बालविवाह, बहुविवाह, सतिप्रथा जस्ता कुरीतिले महिलालाई अँठ्यायो । समाजमा नारी पशुतुल्य, वस्तुतुल्य भएका थिए । यसरी समाजले नारी अस्मिता र स्वतन्त्रताको चित्कारलाई लामो कालसम्म कुल्चिह्यो ।

पूर्वी नेपालमा महिलाविरुद्ध व्याप्त अन्याय अत्याचार, सामाजिक कुरीति र कुसंस्कारबिरुद्ध महिलाले नै विद्रोह गरे । भोजपुरमा जन्मेकी योगमाया न्यौपानेको नेतृत्वमा महिलाहरूले सामाजिक उत्पिडनबाट मुक्तिका निम्ति जीवन बलिदान गरे । वि.स. १९९८ सालमा योगमायालगायत ६७ जना महिलाले सामुहिक रुपमा कोशी नदीमा जलसमाधि लिए । उनीहरूले महिला अत्याचारविरुद्ध आफ्नो जीवन बलिदान दिए ।

पूर्वी पहाडी जिल्लामा महिलाहरूद्वारा गरिएको साहसिक सामाजिक अभियानबाट राणाविरुद्ध क्रान्तिको सूत्रपात भयो । फलस्वरुप रुढीग्रस्त समाजविरुद्ध सामाजिक आन्दोलनले उग्र रुप लिन गयो । नारीहरूको त्यो जीवनउत्सर्गबाट उत्पन्न भावनात्मक बलले समाज रुपान्तरणमा ठोस बल पुग्यो । नारीहरूको बलिदानी सन्देशले अन्यायविरुद्ध सामाजिक एकता निर्माण भयो, फलस्वरुप राणाशासन ढल्यो । समाजमा व्याप्त अन्धविश्वास, कुरीति, कुसंस्कारविरुद्ध सहिदका बलिदानले राजनीतिक तरङ्ग आयो ।

राजनीतिक तथा सामाजिक क्षेत्रमा मात्र नभएर वातावरण संरक्षणको क्षेत्रमा पनि नेपालमा सहिद जन्मिएका छन् । नेपालको वनजङ्गल नदीनालाका प्राकृतिक साधनस्रोतलाई दोहन गरेर वातावरणलाई विनास गर्न नाफाखोर पल्केका छन् । त्यस्ता गिरोहको संख्या दिनहुँ बृद्धि भएको छ । वातावरणविरोधी समूहसंग लड्दा आफ्नो ज्यान बलिदान दिने वीर नेपाली सपूत हामीले भरखरै पायौं ।

नेपालको चुरे क्षेत्रमा चलेको प्राकृतिक सम्पदादोहन रोक्न मिथिला नगरपालिका वडा न. ५ का दिलिप (ओमप्रकाश) महतोले भगिरथ प्रयत्न गरे । आफ्नो स्वार्थमा बाधा उत्पन्न भएपछि नदीजन्य स्रोतदोहनमा लिप्त नाफाखोरले २०७६ सालमा दिलिप महतोको हत्या गऱ्यो । दोहनस्थलमा रोक्न जाँदा उनलाई डोजरले कुल्चेर क्रूर हत्या गरियो । वातावरण संरक्षण तथा चुरेदोहन नियन्त्रण अभियानमा महतोले आफ्नो अमूल्य जीवन बलिदान दिए । यसरी दिलिप (ओमप्रकाश) महतो नेपालको वातावरण संरक्षण अभियानको पहिलो सहिद बनेका छन् ।

दिलिप महतोलाई सहिद घोषणा गर्न स्वार्थ समूहको पकडमा रहने सरकारले कन्जुस्याई गरेको छ । यद्यपि, इतिहासले उनको योगदानलाई उच्च सम्मान गर्नेछ । समयमा त्यसको मूल्याङ्कन हुनेछ । हामी आशावादी भएर जीवन र जगतलाई हेरौं । जहिले पनि सत्ता र स्वार्थी तत्वले बहुसंख्यक सहिदको रगत बिनामूल्य पिउँछन् । इतिहासले ओझेलमा परेका वा पारिएका सहिदको हिसाबकिताब राखेको हुन्छ । एकदिन समय आउँछ, किनभने समय वलवान हुन्छ ।

आज सहिद दिवसको दिन । राजनीतिक तथा सामाजिक क्षेत्रमा बिरलै उदाउने त्यस्ता वीर सपूत एकएकलाई चिनौं । सहिद दिवसको प्रातःकालमा उनीहरूको योगदान स्मरण गरौं । उनीहरूको योगदानलाई शिर झुकाएर नमन गरौँ । ज्ञात र अज्ञात सहिदहरूको सपना साकार होस् । जय सहिद ।

## सन्दर्भसूची

आले मगर, जीवन (२०२२) नेपालका प्रथम शहिद: लखन थापा मगर, शहिद लखन गाउँपालिका, गाउँ कार्यपालिकाको कार्यालय,गोरखा जिल्ला, नेपाल, https://shahidlakhanmun.gov.np/

चेमजोङ, इमानसिङ (२००३) किरात इतिहास, किरात याक्थुङ चुम्लुङ, ललितपुर

बुढाथोकी, ताराबहादुर (२०७५) योगमाया एक क्रान्तिकारी विराङ्गना, पूर्वेलीन्यूज, भाद्र २, २०७५ , https://purbelinews.com/246988

पन्त, शास्त्रदत्त (२०२१) विशाल नेपाल फर्किन्छ, भारतले नेपालसँग युद्ध लडे हार्छ, एमसिसी पास हुदैन, युट्युब भिडियो, https://youtu.be/DII_HLkx9hQ

वीरगञ्ज सञ्जाल (२०७६) दिलिपको हत्याराहरूलाई हदै सम्मको कारवाही गराउँने मुख्यमन्त्री राउतको भनाई, वीरगञ्ज सञ्जाल टिभी, माघ ३, २०७६, https://birgunjsanjal.com/2020/01/12120/

# २ मातृभाषा दिवस

मान्छे सपना वा विपनामा बोल्ने प्यारो भाषा मातृभाषा हो । त्यसैले विश्व मातृभाषा दिवसको महत्व बढ्दो छ । यद्यपि, नेपालमा यो दिवस थाहै नपाइकन सट्याक–सुटुक बित्दछ । यो दिवसको महत्वबारे मानिस खुलेर बोल्न अझै किन सकिरहेका छैनन् ! कतै यो खस नेपाली भाषाको प्रभावले त होइन? खस नेपाली भाषा सम्पर्क भाषा भएको बर्तमान नेपाली परिप्रेक्षमा यसले सबै आदिवासीको मातृभाषालाई उजागर गर्ने जिम्मेवारी पनि पाएको हुन्छ । हिन्दी, अङ्ग्रेजी वा कुनै भाषाको छायामा नेपाली राष्ट्रभाषा वा मातृभाषा ओझेल पर्ने चुनौति पनि खडा छ ।

तसर्थ, सबै जातजातिका स्थानीय भाषाको संरक्षण र प्रबर्द्धन गर्ने जिम्मा अब स्थानीय सरकारको काँधमा आइपुगेको देखिन्छ । बहुभाषिक, बहुसांस्कृतिक मुलुकमा सबै जातिका मातृभाषाले उचित सम्मान पाउन् भन्ने मनसाय विश्व मातृभाषा दिवसले लिएको छ ।

भाषासंगै लिपिको पनि सन्दर्भ गाँसिएर आउँछ । भारोपेली भाषा परिवारमा पर्ने नेपाली खस भाषा देवनागरी लिपिमा लेखिन्छ । नेपाली आदिवासीका भाषा प्रायः भोट–बर्मेली भाषा परिवारमा पर्दछन् । उनीहरूको लिपि पनि अझै जीवित अवस्थामा पाइन्छन् । साथै नेपालमा अष्ट्रोएसियाली तथा द्रविड भाषा परिवार पनि आदिवासीले बोल्दै आएका छन् । किरात लिम्बूको आफ्नो मातृभाषा भोट–बर्मेली भाषा परिवारको हो यसमा सिरिजङ्गा लिपि प्रयोग हुन्छ । नेपाल *(*नेवार*)* भाषा पनि भोट–बर्मेली भाषा परिवारमा पर्दछ । नेपाल भाषा रञ्जना लिपिमा लेखिन्छ । हेर्दा वा पढ्दा यिनीहरूको लिपि देवनागरी लिपिभन्दा अलग देखिन्छन् । यद्यपि देवनागरी लिपि, सिरिजङ्गा लिपिका मातृलिपि ब्राम्ही लिपि नै हो । भाषाशास्त्रीअनुसार ब्राम्ही लिपिबाटै आदिवासी भाषाका विभिन्न लिपि विकसित भएका छन् । भाषा र लिपि विकसित हुने क्रममा यिनीहरूले लामो सामाजिक र सांस्कृतिक जीवनकाल पार भएका हुन् । त्यसैले यिनीहरूका मौलिकता वा विशेषता अन्तर्निहत हुन्छन् । यही विशिष्ठताभित्र जातीय संस्कृति, साहित्य लुकेका हुन्छन् । त्यसैले मातृभाषा मानवसम्पदाको एक सुन्दर रुप हो । छोटकरीमा मातृभाषा जातीय पहिचानको एक कडी हो ।

कुनै भाषा अर्को भाषाको प्रतिस्पर्धी मात्र होइन बरु परिपूरक पनि हो । मातृभाषाले विभिन्न समुदायलाई नजिक ल्याउँछ । यसले समाज र राष्ट्रलाई बलियो बनाउँछ । भोट–बर्मेली भाषा परिवारको लिम्बू भाषा साहित्यले अन्य भाषा र साहित्यका मानिसलाई

समेत उपयोगी सन्देश दिने क्षमता राख्दछ । किरात सभ्यताका ज्ञान र मनोभावना मातृभाषाभित्र सुन्दर ढङ्गले अभिव्यक्त भएका हुन्छन् । त्यसको स्वाद पाउन पनि सोही मातृभाषामा छिर्नुपर्दछ ।

रमाइलो कुरो, नेपालका विभिन्न मातृभाषीलाई नेपाली खस भाषाले जोडिदिएको छ । खस नेपाली भाषा सम्पर्क भाषा र सरकारी कामकाजको भाषा बनेको छ । त्यसैले हामीले खस नेपाली भाषालाई आरिस गर्ने होइन, माया र सम्मान गर्नुपर्दछ । यो भनाइको अर्थ मातृभाषालाई बिर्सनु कदापि होइन ।

साङ्केतिक रूपमा म पनि आज मातृभाषा दिवसको दिन किरात लिम्बू मातृभाषामा रचिएको एक पङ्ति पालाम गीत साझा गर्दैछु । किरात लिम्बू लोकलय पालाममा आधारित एक पङ्क्ति नमूनास्वरुप प्रस्तुत गरेको छु । यो पङ्ति किरात लिम्बू मातृभाषा याक्थुङपानमा बोलिएको र सिरिजङ्गा लिपिमा कोरिएको छ । यसलाई नेपाली पाठकमाझ सहज तुल्याउन नेपाली भाषामा उल्था गरी देवनागरी लिपिमा प्रस्तुत गरिएको छ ।

केरेक्ले मेनिसु ताम्भुङ मिदिक्पा बे
कर हाल्ले निसु निङवा मिदिक्पा बे
ᤁᤧᤖᤧᤰᤗᤧ ᤔᤧᤏᤡᤛᤢ ᤋᤠᤶᤓᤢᤱ ᤔᤡᤍᤡᤰᤐᤠ ᤒᤧ
ᤁᤖ ᤜᤠᤗ᤺ᤗᤧ ᤏᤡᤛᤢ ᤏᤡᤱᤘᤠ ᤔᤡᤍᤡᤰᤐᤠ ᤒᤧ

(सबैले देख्छन् बन डढेको है
तर कसले देख्छ मन डढेको है)

जसरी बनमा लागेको डढेलो सबैले देख्छन् र सबैले मिलेर निभाउँछन् त्यसरी मानिसको मनभित्रको पीडा सबैलाई देखाउन सकिंदैन फलस्वरुप त्यो आफैले निभाउनु पर्दछ भन्ने शाश्वत सत्य लोकबोलीमा व्यक्त भएको छ ! एक किरात लिम्बूले व्यक्त गरेको उद्‌गार मातृभाषा र लिपिमा अलग सुनिए वा देखिए तापनि यसभित्र अभिव्यक्त भावले सबै जातिका मानिसको साझा ब्यथा बोक्दछ । आखिर यस्ता पीडायुक्त भाव सबैलाई उस्तै बोझिला हुन्छन् केवल अभिव्यक्त गर्ने बोली, भाषा र लिपि मात्र फरक हुन्छन् ।

अर्को महत्वपूर्ण कुरो, आफ्नो मातृभाषामा मानिस जति स्फूर्त ढङ्गले खुल्दछ त्यो अन्य भाषामा असम्भवप्रायः छ । त्यसैले मातृभाषाले साहित्यको विकासमा विशेष योगदान गर्दछ । हामी कुनै जातिको लोकसाहित्य जानेर मात्र उक्त समुदायको संस्कृति, जीवन दर्शन बुझ्न सक्दछौं ।

समाजको यही विशिष्ठताले गर्दा कुनै पनि राष्ट्र निर्माणमा त्यहाँ बोलिने मातृभाषा तथा लिपिको विशेष स्थान रहन्छ । नेपाल संयुक्त राष्ट्र संघको सदस्य बन्ने बेलामा नेपालको प्रस्तावलाई सोभियत रुस र युक्रेनले नेपाल भारत प्रशासित एक राज्य हो भनेर विरोध गरेका थिए । हुन पनि, नेपाल र भारतको संस्कृतिक समानता छन् । यहाँ बोलिने भाषा, लिपि पनि समान भएकाले सुरुमा नेपालले आफ्नो मौलिक पहिचान देखाउन नसक्दा संयुक्त राष्ट्र संघको सदस्यताबाट बञ्चित रहने स्थिति देखा पर्‍यो । बर्माका

नागरिक ऊ थान्त त्यसबेला संयुक्त राष्ट्रसघको महासचिव थिए । उनले नेपालप्रति सद्भाव र सहानुभूति राखे । फलस्वरुप, नेपालले आफू स्वतन्त्र भएको प्रमाण पेश गर्ने अवसर पायो ।

त्यसपछि नेपालले १९५० को सन्धिलगायत आफ्नो मौलिक भाषा नेपाल (नेवारी) भाषा र लिपितर्फ रञ्जना लिपिलाई मौलिक प्रमाणका रूपमा अघि सार्‍यो । ती भाषा र लिपि भारतमा नभएकाले नेपाल अलग राष्ट्र भएको दावी पेश गरिएको हो । फलस्वरुप नेपालले संयुक्त राष्ट्र संघमा राष्ट्रको मान्यता पाउन सफल भयो । यसबाट थाहा हुन्छ, नेपाली आदिवासीका मातृभाषा, लिपिसमेतका आधारमा नेपाल एक स्वतन्त्र राष्ट्र बनेको छ ।

बिडम्बना, समय बित्दै जाँदा यहाँका शासकले आदिवासी सम्पदाको महत्वलाई कुल्चन थाले । नेपाललाई राष्ट्रको रुपमा विश्वमञ्चमा उभ्याउने आधार उही नेपाल भाषा र रञ्जना लिपीलाई राज्य वा सरकारले महत्व दिन छाड्यो । त्यसलाई कमसेकम काठमाडौं उपत्यकामा मान्यता दिइयोस् तथा सरकारी स्तरमा व्यवहारमा ल्याइओस भनेर जनताले बारम्बार माग गर्दा पनि राज्य उदासिन छ । आज देश संघिय भए तापनि मातृभाषा र लिपिसम्बन्धी सवालको उचित सम्बोधन हुन बाँकी नै छ ।

नेपालको संविधानले नेपालमा बोलिने सबै मातृभाषालाई राष्ट्रभाषा र नेपाली खस भाषा र देवनागरी लिपीलाई सरकारी कामकाजको भाषा बनाएको छ । फलस्वरुप लोकतन्त्रपछि गोरखापत्रमा विभिन्न मातृभाषालाई स्थान दिने प्रचलन आरम्भ भएको छ । सरकारी पत्रिकामा त्यसरी गैर–खस नेपाली भाषा र गैरदेवनागरी लिपि देखेर शिक्षित वर्ग नाक खुम्च्याउने गर्दछन् । कोही त गोरखापत्रमा गरिएको मातृभाषा प्रकाशनलाई अनावश्यक भनेर विरोध नै गर्दछन् । राज्य संचालित पत्रिकामा बल्ल मातृभाषाले स्थान पाएकामा कमसेकम शिक्षित समुदायले स्वागत गरिदिए कत्ति राम्रो हुन्थ्यो । भाषिक र सास्कृतिक सहिष्णुता जनाइदिए अझ राम्रो हुन्थ्यो ।

राज्यले खस नेपाली भाषा, साहित्य लगायत अन्य मातृभाषा र साहित्यलाई समान द्दष्टिले हेरोस् भन्ने आदिवासी समाजको द्दष्टिकोण छ । देशभित्र बोलिने लेखिने आदिवासी मातृभाषामाथि राज्यले भेदभाव नगरोस् भन्ने सम्बन्धितको माग छ । लुप्त हुन लागेका मातृभाषा र लिपिलाई राज्यले विशेष ध्यान देओस् भनी भाषाशास्त्रीहरूले पनि आवाज उठाएका छन् ।

त्यसैले मातृभाषाको महत्वबारे सबैले गम्भीर भएर सोच्नै पर्दछ । कुनै जाति वा भाषा लोप हुनु भनेको अन्त्यमा एक दिन आफू पनि लोप हुनु हो भनेर सबैले बुझ्न जरुरी हुन्छ । स्मरण रहोस् राष्ट्रिय जनगणना २०६८ अनु◌ुसार नेपालमा १२३ मातृभाषा बोलिन्छन् । उक्त जनगणना अनुसार नेपालमा नेपाली भाषा ४४.६ प्रतिशत, मैथिली ११.७ प्रतिशत, भोजपुरी ६ प्रतिशत, थारु ५.८ प्रतिशत, नेवार ३.२ प्रतिशत, मगर ३ प्रतिशत, उर्दू २.६ प्रतिशत, लिम्बू १.३ प्रतिशत, गुरुङ १.२ प्रतिशतले मातृभाषा बोल्दछन् ।

हाल देशमा जनगणना २०७८ संचालन भइरहेको छ । यसले स्थानीय स्तरका सूचना उपलब्ध गराउने आशा गरिन्छ । संघियताको मर्म बमोजिम मातृभाषा र लिपि प्रबर्धनमा प्राप्त सूचनाले बल पुर्‍याउने आशा छ । वस्तुगत तथ्याङ्कका आधारमा स्थानिय सरकारले मातृभाषाको हक, हितमा निरन्तर काम गरोस् । मातृभाषा प्रबर्धनले नेपाल

राष्ट्रको एकता कायम राख्न तथा मुलुक सुदृढ तुल्याउन बल पुगोस् हामी यही आश गर्दछौँ ।

सबैलाई आ–आफ्नो मातृभाषा र लिपि प्राणभन्दा प्यारो लाग्दछ । त्यसैले एक अर्काको मातृभाषालाई सम्मान गरौं । समाजमा सद्भाव व्यक्त गरौं । मातृभाषा भनेको मानिसलाई अलग्याउन होइन जोड्ने साधन हो भनेर बुझ्न जरुरी छ । एक अर्काको भाषा बुझेमा आपसी मनोभाव बुझिन्छ, नजिक भइन्छ । अरुलाई बुझेपछि सामाजिक बन्धन बलियो हुन्छ । भाषा र साहित्यले भावना गाँस्ने काम गर्दछ । फलस्वरुप समाज, देश र विश्व शान्ति दिगो हुन्छ ।

हरेक वर्ष फरवरी २१ का दिन मनाइने विश्व मातृभाषा दिवसलाई सन् १९९९ देखि मनाउन थालिएको हो । यो दिन युनेस्कोले विश्वभरका जनतालाई आ–आफ्ना मातृभाषामा मन खोलेर बोल्न, लेख्न आव्हान गरेको छ ।

लौं, अब हामी पनि आफ्ना मनका कुरा खोलौं । समाजमा बस्ने विभिन्न समुदायबीच आपसमा विचार र भावना साटासाट गरौं । सामाजिक सद्भाव, सहिष्णुता र एकता अभिवृद्धि गरौँ ।

अन्त्यमा, विश्व मातृभाषा दिवसको अवसरमा मातृभाषाप्रेमी जनमा हार्दिक शुभकामना ।

# ३ मुन्धुम र लोकसाहित्य

ज्ञानलाई किरात जातिले 'मुन्धुम' तथा आर्य जातिले 'वेद' भन्दछन् । मुन्धुमको कतिपय सवालमा ब्याख्या गर्दा फेदाङ्बा/माबीच मतभिन्नता पाइन्छ । उनीहरू आ–आफ्नै ढङ्गले दर्शनको ब्याख्या गर्ने गर्दछन् । लामो कालखण्ड जनजिब्रोमा झुन्डिएर रहेको ज्ञान विभिन्न पुस्ता र स्थलमा आइपुग्दा अनेक किसिमका परिवारसित घुलमिल हुँदा मुन्धुमी ब्याख्या वा भावार्थमा विविधता आउँनु स्वभाविक छ । त्यसैले मुन्धुमको वस्तुगत तथ्य जान्न वा जिज्ञाशा शान्त पार्नलाई साहित्यिक दृष्टिकोण पनि चाहिन्छ ।

मुन्धुमी काव्यभित्र अविधा, लक्षणा, व्यञ्जनायुक्त पङ्क्ति हुन्छन् । त्यहाँ प्रतीक, विम्ब र अलङ्कारको प्रयोग हुन्छ । कतिपय सन्दर्भमा भावार्थ, ब्यङ्ग्यार्थ निकाल्न फरकपना सुनिन्छ । त्यसमाथि ब्याख्या गराइ वा बुझाइ आ–आफ्नै खालका हुनसक्छन् । त्यसैले मुन्धुम दर्शनउपर अन्त्यहीन व्याख्यान र शास्त्रार्थ हुने गर्दछन् ।

मुन्धुम, वेद श्रुति र स्मृति परम्परामा आधारित लोकगाथा हुन् । यो लेख्यरूपमा आउनुपूर्व लामो कालखण्डसम्म सयौं–हजारौं पुस्ता मुखमुखमा झुण्डिएर आएको हो । त्यसले अनगिन्ति भूगोल नाघेर लामो कालसम्म निरन्तरता पाएको छ । वेदले एक–दुई हजार वर्षपूर्व लेख्य स्वरूप पायो । मुन्धुमको लेखन कार्य करिव एक हजार वर्षअघि मात्र आरम्भ भयो । श्रुति र स्मृति परम्परामा आधारित परम्परागत ज्ञान र साहित्य क्रमसः लिपिवद्ध हुने क्रम निरन्तर जारी छ ।

परम्परागत ज्ञानले धार्मिक मान्यता र संस्कृतिको आकार पाएपछि मुन्धुम वा वेदलाई लोकसाहित्य भनिदिँदा धेरैलाई नपच्न सक्दछ । तर, ती परम्परागत आख्यान लोकसाहित्यकै कोटीमा राखिन्छन् । तसर्थ, विवरण बोधगम्यताका लागि लोक साहित्यसम्बन्धी सिद्धान्तको चर्चा गरिन्छ ।

'लोक' संस्कृत भाषा भएर आएको शब्द हो । कोइरालाअनुसार संस्कृतको 'लोक दर्शन' धातुमा 'धञ' प्रत्यय लागेर बनेको शब्द हो 'लोक' । जसको अर्थ हुन्छ देख्नेवाला, प्राणी, संसार, जनता आदि । लोक कल्याणकारी भावनाले अभिप्रेरित अभिव्यक्ति वा साहित्य नै लोकसाहित्य हो । यो शब्द ऋग्वेददेखि नै संस्कृत साहित्यमा प्रचलित भएर आएको हो । यसले विश्वव्यापी मान्यता र महत्व बोकेको छ ।

प्रसिद्ध नृतत्वविद् फ्र्यान्ज बोआसअनुसार लोकसाहित्य भनेको लोकको आत्मजीवनी हो । लोकसाहित्यबारे डा. कृष्णदेव उपाध्यायको भनाइ यस्तो छ– प्राकृतिक परिवेशमा निवास गर्ने आधुनिक सभ्यतादेखि टाढा रहेका आचार, विचार एवं जीवन परम्परायुक्त नियममा नियन्त्रित तथाकथित अशिक्षित एवं असंस्कृत जनतालाई 'लोक' भनिन्छ र तिनीहरूको सुख–दुखको साहित्य नै लोकसाहित्य हो ।

डा. वासुदेव त्रिपाठीका अनुसार सारांशमा जीवनको बहुमुखी सेरोफेरोको तीव्रतर

अभिव्यक्ति नै लोक साहित्य हो । योगी नरहरिनाथका अनुसार लोक व्यवहारमा, लोकहितका लागि, लोकभाषामा, लोक विचारलाई प्रवाहमय शैलीमा लोकले प्रस्तुतगर्ने साहित्यलाई लोकसाहित्य भनिन्छ । माधव घिमिरेले लोकसाहित्यको चरित्रको बारेमा काव्यात्मक शैलीमा भन्छन्– 'सर्छन् भाका अनि यस गलाबाट अर्को गलामा' ।

धर्मराज थापा र हंसपुरे सुबेदी लोकसाहित्यबारे भन्छन्– लोकले सजिलै बुझ्न र अनुभव गर्नसक्ने भाषा र भावनामा निर्मित मानव मुटुको स्पन्दनबाट निस्केको मीठो आकर्षणमय मौखिक साहित्य नै लोकसाहित्य हो । यसबारे तुलसी दिवस भन्छन्– सही अर्थमा लोकसाहित्य लोकजीवन तथा संस्कृतिको प्रतिबिम्व मात्र नभएर सम्बाहक पनि हो । सरस्वती घिमिरे भन्छिन्– वेद भन्नु नै लोकसाहित्य हो ।

माथिका परिभाषाअनुसार मुन्धुम, वेद लोक साहित्यका कोटीमा पर्दछन् । लोक साहित्यको रुप र सार बुँदागत यसप्रकार छन् ।

१. यो युगौं युगदेखि श्रुति परम्परामा जीवित रहेको हुन्छ ।
२. यो सरल वाणीमा लोकानुभूतिको अभिव्यक्ति हो ।
३. यो लोकजीवन तथा संस्कृतिको सम्बाहक हो ।
४. यो आदिमता र नवीनताको संगम पनि हो ।
५. यो लेख्य साहित्य पूर्व पीठिका हो ।
६. यो शास्त्रीय बन्धनविहीन परिवर्तनशील हुन्छ साथै सहजानुभूतियुक्त मौखिक साहित्य हो ।

लिखित वस्तु मात्र साहित्य होइन । लिपिको आविष्कार हुनुपूर्व संसारका हरेक भाषामा अलिखित लोक साहित्य थिए र ती समृद्ध अवस्थामा थिए । यसबाट लोकसाहित्यको मूल सम्बन्ध लिपिसंग नभई भाषासंग भएको देखिन्छ । लोकसाहित्यको सार्वकालिक मुख्य विशेषता यसप्रकार छन्–

१. लोकसाहित्यको रचयिता अज्ञात हुन्छ । २. यो मौखिक एवं परम्परागत हुन्छ । ३. यसले सर्वाङ्गीण सामाजिक परम्पराको उद्वोधन गर्दछ । ४. यसमा सचेत अलङ्करणबाट मुक्त प्राकृतता रहन्छ । ५. यसमा कोरा औपदेशिकताको अभाव रहन्छ, तथा ६. यो ऐतिहासिकता र लोकसंस्कृतिको बाहक पनि हो ।

पूर्वी नेपालमा बसोबास गर्ने किरात लिम्बू जातिका परम्परागत ज्ञानलाई मुन्धुम भनिन्छ । उनीहरू यो ज्ञानलाई शाश्वत, सत्य र पवित्र धर्मग्रन्थको रुपमा मान्दछन् । इतिहासकार इमान सिङ चेमजोङअनुसार मुन्धुमको शाव्दिक अर्थ 'ठूलो बलको शक्ति' हो । चेमजोङअनुसार मुन्धुम यस्तो महाकाव्य हो जसलाई विद्वान फेदाङ्बा÷मा साम्बाहरूले मुन्धुम फलाक्छन् । कुनै सांस्कृतिक कार्यमा उनीहरूले मुन्धुम गीत मुखाग्र गाउँछन् । गीतमा दखल भएका 'साम' (गीत) 'बा' (गाउने) लाई 'साम्बा' भनिन्छ । साम्बा वा फेदाङ्बा/मा किरात लिम्बूका पण्डित/पुरोहित हुन् ।

युगौंयुग मौखिक परम्परामा आएको मुन्धुमलाई 'थुङ्साप मुन्धुम' भनिन्छ । लेख्य रूपमा रहेको मुन्धुमलाई 'पेसाप मुन्धुम' भनिन्छ । लिम्बू भाषामा 'पे' भनेका जानु र 'साप' भनेको लेख्नु हो । लेखेर छरिएको ज्ञानलाई पेसाप मुन्धुम भनिन्छ । यो चार भागमा बाँडिएको छ । १. सकसक मुन्धुम, २. येहाङ मुन्धुम, ३. सापजी (साम्जिक) मुन्धुम र ४. साप मुन्धुम । सकसक मुन्धुमले विश्व ब्रम्हाण्ड निर्माणका कथाहरू, मानव उत्पत्ति, पाप,

धर्म तथा मानवीय रिस, राग, ईर्ष्या, घृणा आदिको चर्चा गर्दछ । येहाङ मुन्धुमले आध्यात्मिक शिक्षा, सभ्य मानव जीवनको बाटो देखाउँछ । अन्य मुन्धुमहरूमा पूजाआजा, जन्म, मृत्यु आदि कर्मकाण्डका विधि र सामग्री आदि छन् ।

किरात इतिहासअनुसार प्रथम किरात राजा यलम्बरहाङले नेपालमा मुन्धुम प्रचलनमा ल्याएका थिए । सोही क्रममा बाग्मति किनारस्थित गौरीघाट श्लेष्मान्तक वनको छेउमा आफ्नो इष्टदेवता किरातेश्वर महादेवको देवालय बनाएर शिवलिङ्ग स्थापित गरेका थिए । किरात इतिहासअनुसार उनले त्यहाँ नित्यपूजाको लागि फेदाङ्बा/माको व्यवस्था गरेका थिए । उनले हिमहाङ साम अर्थात् इन्द्रदेवको स्थान आफ्नो महलको माथिल्लो तलामा थापना गरेका थिए । उक्त थानमा उनले अन्न, अनाज पाक्दा चसुपा अर्थात् न्वाँगी चढाउने गर्दथे । किरातेश्वर महादेव, इन्द्रदेवको नित्य धुपबत्ती गर्नलाई किरात पूजारीको व्यवस्था गरिएको थियो । किरातकालमा मानिस अत्यन्त भक्तिभावले थेबा साम्माङ शिव र इन्द्रको आराधना गर्ने गर्दथे भनी इतिहासकार राजबहादुर पन्धाक लिम्बू किरातले 'विश्वको इतिहास तथा धार्मिक अभिलेख' पुस्तकमा जनाएका छन् ।

पन्धाकले किरातका भ्राता, रक्तअनन्याका आधारमा एक हाँगो किरातपूर्वज मुनातेम्बेदेखि लिम्बूवान आइपुग्यो । त्यहाँसम्म आइपुग्दा थेबासाम्माङ किरात धर्मको जयन्ति १०,१०६ वर्ष पुगेको उनले अनुमान गरेका छन् । उनले मानव जातिको व्यापक आयामलाई समेटेर लेखेअनुसार किरातबाट उदविकास भएका आस्थाहरू यहाङ धर्म, सत्यहाङमा धर्म, पारूहाङ सुम्निमा धर्म, हिन्दू सनातन धर्म, वैष्णव धर्म, प्रणामी धर्म हुन् । त्यसै गरी साइबाबा धर्म, रोमन क्याथोलिक धर्म, येशुक्रिष्ट धर्म, मुसलमान धर्मसंग किरात पूर्वजको सम्बन्ध थियो । प्राचीन वर्षगणना पद्धति वर्तमानको भन्दा पृथक थियो त्यसैले उल्लिखित जयन्तिमा वर्षान्तर हुनसक्दछ । यद्यपि, माथि विभिन्न मूलभूत आस्थाबीच जुन किरात सम्बन्ध देखाइएको छ, त्यो महत्वपूर्ण छ । समष्ठिमा उनको भनाइको गहिराइ भने स्थापित मानवशास्त्रीय मान्यताअनुरुपकै छ । उनको उल्लिखित भनाइलाई म विचारणीय ठान्दछु ।

जेहोस्, लोकसाहित्यका धरातलमा विकसित मुन्धुम र वेदलाई वैज्ञानिक दृष्टिले विश्लेषण गर्नुपर्दछ । यसमा लोकसहित्यका सिद्धान्तहरू सहयोगी हुनेछन् । मुन्धुम वा वेदलाई आध्यात्मिक ज्ञान मानेर आस्था वा विश्वास गर्नु जीवनको अहम् पाटो हो । जनआस्थालाई सम्मान गर्दै एक्काइशौं शताब्दी अर्थात् वैज्ञानिक युगानुकूल परम्परागत ज्ञानको सही विश्लेषण र ब्याख्या गर्नु पनि उत्तिकै महत्वपूर्ण काम हो ।

परम्परागत ज्ञानलाई विश्वास गर्न सकिन्छ तर कहिल्यै पनि विवेकको बिर्को बन्द गर्नु हुँदैन । मेरो तात्पर्य, परम्परागत ज्ञानमा विश्वास गरौं तर अन्धविश्वासी नबनौं । हामी जन्मेपछि कुनै संस्कृतिक परिवेशमा हुर्कन्छौं, जुन हाम्रो आफ्नो वशको कुरो होइन । यद्यपि आफू बाँचेको सांस्कृतिक क्षितिजबाहिरका आकाश, प्रकाश र ज्ञानलाई नियाल्न चुक्नु हुँदैन ।

**सन्दर्भ सामग्री**

कोइराला, शम्भु प्रसाद (२०५६) लोक साहित्यः सिद्धान्त र विश्लेषण, धरणीधर पुरस्कार प्रतिष्ठान,

घले, भद्राकुमारी (२०६७) घलेको इतिहास, काठमाडौँ, भद्राकुमारी घले प्रतिष्ठान,

पन्धाक लिम्बू किरात, राजकुमार (२०६४) विश्वको इतिहास तथा धार्मिक अभिलेख, ईन्दिरा लिम्बू,

पोखरेल, बालकृष्ण (२०५५) खस जातिको इतिहास, विराटनगर, उदात्त अनुसन्धान अड्डी,

हेमिल्टन, फ्रान्सिस् (१९८६) एन एकाउन्ट अफ दि किङडम अफ नेपाल, दिल्ली, एसियन एजुकेसनल सर्विसेज, १८१९ पुनः संस्करण १९८६

# ४ मुन्धुममा झल्किने सौन्दर्य

**(क) पृष्ठभूमि**
मुन्धुम भनेको किरात जातिको श्रुति परम्परामा आधारित जीवनदर्शन तथा मार्गदर्शक ज्ञान हो । मुन्धुममा सृष्टिकथा, यात्रागाथा, विधि–विधान, आचारसंहिता, उपचार विधि आदि पाइन्छन् । यो एक बौद्धिक, काव्यात्मक एवम् सङ्गीतबद्ध मौखिक परम्परा हो । किरात लिम्बूले यो परम्परागत ज्ञानलाई मुन्धुम, राईले ‘मुन्दुम’, मुदुम’, दिउला’, सुनुवारले ‘मुक्दुम’ र याक्खाले ‘मुन्तुम’ भन्दछन् ।

अनादिकालदेखि पुस्ताबीच हस्तान्तरण हुँदै आएको मुन्धुम लोकसाहित्य हो । मुन्धुमभित्र साहित्यिक अनगिन्ति अलङ्कार र रुपक हुने भएकाले यसलाई काव्यको कोटीमा राखिन्छ । यो काव्य गीतिलयमा वाचन गर्दा तीन देखि १२ दिन रात लाग्दछ, जसलाई तङसिङ अनुष्ठान भनिन्छ । यति लामो श्रव्यकाव्यको पूराकथालाई लिपिवद्ध गर्नु स्वयम्मा चुनौतिपूर्ण कार्य हो । जसलाई यति सानो लेखमा समेट्न सम्भव हुँदैन । यद्यपि, आजको भागदौडले भरिएको जीवनमा करिव चिया खाने समयमा पढेर भ्याइने छोटो लेख कोर्दैछु ।

इतिहासकार इमानसिंह चेमजोङ तथा आसमान सुब्बाले सङ्कलन तथा सम्पादन गरेका किरात मुन्धुममा आधारित पूराकथाको सारसंक्षेप यसप्रकार छ ।

**मुन्धुमको परिचयः** मुन्धुमलाई ज्ञानी तथा विद्वानहरूले विभिन्न दृष्टिकोणबाट परिभाषित गर्ने गरेका छन् । किरात लिम्बूले मुन्धुमलाई धार्मिक ग्रन्थको रूपमा मान्दछन् । फेदाङ्बा/मा, साम्बा, येबा/माहरूले मुन्धुम फलाक्दा त्यो सुन्ने समुदायले देवता उत्रेको वा देउताको बोली उत्रेको ठान्दछन् । लिम्बू भाषामा बाच्यार्थको हिसाबले ‘मु’ भन्नाले मौखिक र ‘थुम’ भन्नाले बलियो बुझिन्छ । अर्थात् ‘मुन्’ भन्नाले हल्लिने वा घुम्ने अर्थ पनि लाग्दछ । इतिहासकार इमानसिंह चेमजोङले मुन्धुमलाई ‘ठूलो बलको शक्ति’ बताएका छन् । उनले किरात मुन्धुमलाई हिन्दूको वेदसित तुलना गर्दै किरातको वेद मानेका छन् । अत: वेद वा मुन्धुम भनेको ज्ञान हो । मुन्धुममा तागेरा निङ्वाःभू माङलाई सर्वव्यापी उज्यालो शक्तिको रुपमा चित्रित गरिएको छ । सामान्य प्रकाश सबैतिर पुग्दैन, छेकिन्छ । सबैतिर छाउन सक्ने प्रकाश भनेको प्रकाण्ड परम्परागत ज्ञानलाई मानिएको छ ।

लोकसाहित्यको तात्पर्य पनि लोकलाई ज्ञानको किरण छर्नु नै हो । यद्यपि यसको रचयिता अज्ञात रहन्छ । यो मौखिक र परम्परागत हुन्छ । यसले सर्वाङ्गीण

रुपमा सामाजिक परम्पराको उद्बोधन गर्छ । यसमा प्राकृतता, औपदेशिकता, ऐतिहासिकता पाइन्छ । त्यसैले मुन्धुम लोकसंस्कृतिको बाहक हो ।

तम्बरखोला निवासी सिरिजङ्गा नामक सन्त तथा राजाले नवौं–दशौं शताब्दीमा पहिलो पटक मुन्धुमलाई सिरिजङ्गा लिपिमा लिपिबद्ध गरे । त्यसपछि मात्र मुन्धुम लेख्य परम्पराको रुपमा आएको अनुमान गरिन्छ । किरात लिम्बू भाषाका शोधकर्ता मोहनकुमार तुम्बाहाङअनुसार मुन्धुमको दोस्रो संस्करण अठारौं शताब्दीमा तेअङ्सी सेनले थेबेले सम्पादन गरे । मारोहाङ लिम्बूअनुसार हालको तेस्रो संस्करण बीसौं शताब्दीमा लालसोर सेन्दाङ तथा इमानसिंह चेमजोङद्वारा सङ्कलन तथा सम्पादन भएको थियो ।

**मुन्धुमका प्रकारः** मुन्धुम मौखिक परम्परामा चलेको हुनाले जनजीब्रोमा यसलाई 'थुतुरे वेद' भनिन्छ । किरात लिम्बू भाषामा यसलाई 'थुङसाप मुन्धुम' भनिन्छ । यही 'थुङसाप' मुन्धुम नै प्राचीन कालदेखि चलिआएको हो । किरात लिम्बू भाषामा 'थुङ' भनेको खानु र 'साप' भनेको पाठ हो । अर्को शब्दमा 'थुङसाप' भनेको कण्ठस्थ गरी मौखिक रुपमा वाचन वा गायन गर्ने काव्य परम्परा हो ।

लिखित रुपको मुन्धुमलाई 'पेसाप मुन्धुम' भनिन्छ । लिम्बू भाषामा 'साप' भनेको पाठ 'साप्मा' भनेको लेख्नु र 'पे' भनेको 'जानू' हो । यसर्थ, पेसाप भन्नाले लेखिपठाइएको पाठ भन्ने बुझिन्छ । पेसाप मुन्धुम मुख्यतः चार किसिमका हुन्छन् । पहिलो हो, सक्सक् मुन्धुम, जसले सृष्टिको वर्णन गर्दछ । दोस्रो हो, साम्जिक मुन्धुम, यसले किरात दर्शनको ब्याख्या गर्दछ । तेस्रो हो, साप्जी मुन्धुम, यसले आध्यात्मिक दर्शनको ब्याख्या गर्दछ । र, चौथो साप् मुन्धुमले किरात इतिहासबारे बताउँछ ।

**दर्शनका तत्वहरुः** मुन्धुमले व्रम्हाण्डको उत्पत्ति, चराचर जगत, जीवजन्तु र मानिसको सृष्टिबारे बताउँछ । मानव समाजको विकास, मानवीय स्वभाव जस्तै रिस–राग, क्रोध, ईर्ष्या, छलकपट, व्याभिचार, पाप, धर्म, अधर्म उत्पत्तिबारे ज्ञान दिन्छ । यस्ता ज्ञान, दर्शन, जनधारणालाई फेदाङ्बा/मा, साम्बाले गायन परम्पराद्वारा पुस्तास्तरण गर्दै आएका हुन् । यो मौखिक परम्परा आजसम्म पनि निरन्तर जारी छ । मौखिक मुन्धुमलाई सङ्कलन गरेर लिपिवद्ध गर्ने काम धेरै अघि आरम्भ भइसकेको छ । बीसौं शताब्दीमा इमानसिंह चेमजोङले सङ्कलित तथा प्रकाशित गरेको किरात मुन्धुमको थालनी ओःम् शब्दबाट भएको छ ।

**ब्रम्हाण्ड उत्पत्तिः** मुन्धुमले सर्वव्यापी उज्यालो आत्मा अर्थात् तागेरा निङ्वाःभू माङलाई आरम्भमा सम्बोधन गर्दछ । उनलाई उज्यालो आत्माको प्रकाश अर्थात् ज्ञानमय शक्ति मानिन्छ । उनकै इच्छानुरुप सृष्टि तथा पूराकथा अगाडि बढेको छ । मुन्धुमअनुसार आरम्भमा केही थिएन । स्वयम्भू वा ज्ञानले नै ब्रम्हाण्डको रचना गर्‍यो । आकाश उँभो भ्वाँङ परेको अँध्यारो ठूलो फाँट शुन्य थियो । उँभो भ्वाँङबाट भुँवरी हावा निस्केर उठेर आठ फन्को मार्दै खडा भयो ।

त्यहाँबाट मसिनो बालुवाका कण निस्किए । त्यसपछि क्रमसः देव, आकास, माटो, हावा, नदी, चन्द्र, सूर्य, पहाड, बनजङ्गल, पशु, पंक्षी, माछा आदि सृष्टि भए ।

**देवताको सृष्टिः** मुन्धुममा तागेरा निङ्वा:भू माङले विभिन्न देवतालाई आमन्त्रण गरे । उनले सर्वप्रथम पोरोक्मी याम्फामी देवको रचना गरे । त्यसपछि दस र चार अरु देवगणको सृष्टि गरियो । निङ्वाःभू माङको आदेशमा पोरोक्मी याम्फामीले सर्वप्रथम समुन्द्र रचना गरे । त्यसको सबैभन्दा तल मुसेखा सेखाना र समुन्द्रको अलि माथि मुजिङना खियङना नामका ठूल्ठूला माछाहरू रचना गरिए । ती माछालाई उनले समुन्द्र बोकेर थाम्ने शक्ति दिए । तिनीहरूलाई मुरुप्ली खेरुप्ली नाम दिइयो जसले भूकम्प थाम्ने शक्ति प्रदान गरियो ।

तागेरा निङ्वा:भू माङसित ज्ञान लिएर पोरोक्मी याम्फामीले पृथ्वीलाई ठेकी र सूर्य तथा चन्द्रलाई मदानी बनाएर घुमाए । त्यसरी मन्थन गर्दा टुक्रिएका चोइटाहरू ग्रह बने । पोरोक्मी याम्फामी मुनिका १० र ४ चौध देवताहरूले पनि विभिन्न सृष्टिको रचना गरे । पाजोमाङ देवले तीस र तीन गरी तेत्तीस देवगण रचना गरे । फक्ताङमाङ देवले सावायेत बेल्बोबन नामक दानव रचना गरे । सुसुम्बुमाङ देवले पानीमा बस्ने आठ किसिमका जलदेवता रचना गरे । बेसुम्बुमाङ देवले आठ हजार तारा र विजुली सृष्टि गरे ।

**पृथ्वी उत्पत्तिः** मुन्धुम अनुसार बेबेसोमाङ देवले हंस देवता, भुईका देवता, घाम, जून र देवगणको सृष्टि गरे । बेलासोमाङ देवले चन्द्रदेवको र बेनाम्सोमाङले सूर्यदेवको रचना गरे । कुम्फामाङ देवले पृथ्वीलाई ठूला नौ देश, सात ठूला टापु र आठ अग्ला पहाड र सात ठूल्ठूला समुन्द्र र बनजंगलको सृष्टि गरे । त्यसै गरी विभिन्न देवताहरूले बादल, सुन, चाँदी, ताँबा, फलाम, ढुँगा, हीरामोती, माछा, पशुपंक्षी, किराफटेङ्ग्रा र यमराजको सृष्टि गरे ।

**विभिन्न लोकः** मुन्धुमअनुसार यो पृथ्वी लोकमाथि आत्माहरू बस्ने आत्मा लोक छ । आकाशमाथि हँसाउने, रुवाउने, बिरह चलाउने, पृथक शक्ति भएका देवताहरू बस्ने आकाश लोक छ । त्यसमाथि हंसहरूद्वारा नियानिसाफ हुने खारालोक छ । त्यसमाथि दश र चार देव बस्ने चन्द्रमाको प्रकाश पुग्ने घाम जस्तै उज्वल लोक छ । त्यस लोकमाथि चौध देवगणले हात जोडेर बसेका छन् जहाँ सर्वव्यापी परमात्माको भक्ति गर्ने तपलोक छ । त्यसमाथि पोरोक्मी याम्फामीले हात जोडि भक्ति गर्ने पवित्रलोक छ । मुन्धुमअनुसार त्यसमाथि सर्वव्यापी परमात्मा तागेरा निङ्वाःभू माङ बस्ने बैकुण्ठ अर्थात् साङ्ग्राम् पेदाङ तेन लोक रहेको छ ।

मुन्धमअनुसार यो पृथ्वीलोक मुनि मुरोपलुङ खेरोपलुङ ढुङ्गालोक छ । त्यसमुनि मुगुपलुङ थेगुपलुङ नामक अर्को ढुङ्गालोक छ । त्यसमुनि मुरुप्ली खेरुप्ली लोक छ, जुन हल्लियो भने भुकम्प आउँछ, पृथ्वीमा विनास ल्याउँछ । त्यहाँ अक्वाना नामक कछुवाले यो सबै थामेको हुन्छ । त्यसमुनि मुजिङ्ना खियङ्ना नामक ठूलो माछाले थामेको लोक छ । त्यसमुनि मुसेखा सेखाना नामक अझ ठूलो माछा बस्दछ । त्यसमुनि आदिकालमा बनेको सिमसार, हिलो पानी

भएको त्रिवेणीलोक छ । मुन्धुम भन्छ, त्यसमुनि कहिल्यै ननिभ्ने आगोले घेरिएको नरककुण्ड छ जहाँ यमराज बस्दछन् ।

पृथ्वीको चारदिशामा चार महासमुन्द्र छन् । उत्तर दिशामा थोसिम (माथिल्लो) अर्थात् चीन छ, दक्षिण दिशामा तेमेन (हिन्द) महासागर छ । पूर्व दिशामा पोसनथार (प्रशान्त) महासागर र पश्चिम दिशामा पुरानिला अर्थात् अन्टार्टीका क्षेत्र छन् । पृथ्वीका सात द्वीपहरू जम्बुद्वीप, सालमलीद्वीप, कुशद्वीप, सिंहलद्वीप, पुष्करद्वीप, शकद्वीप र ताईद्वीप हुन् । त्यसै गरी मुन्धुममा ठूला आठ देशहरू थोसिङ (माथिल्लो चीन) देश, तेमेन देश (दक्षिण), ताईदेश, तहे देश, चीन देश, भोट देश, भारत देश, कुश देश उल्लेख्य छन् ।

**मानिसको सृष्टिकथाः** मानिस बिनाको संसार तागेरा निङ्वाःभू माङलाई नरमाइलो लाग्यो । उनले पोरोक्मी याम्फामीलाई मानिस बनाउन अह्राए । पोरोक्मी याम्फामीले पहिलो पटक सुनको र दोस्रो पटकमा चाँदीको मानवमूर्ति बनाए । त्यसलाई सेतो चमरले हम्काउँदै "ए घामको छोरा तँ घाम भइस्, ए जूनको छोरो तँ जून भइस्, तरुणीबाट जन्म हुने मानिस पनि तँ नै भइस, अब उठ्" भनी बोलाए । तर, ती सुन र चाँदीका मूर्तिहरूले जवाफ फर्काएनन् । त्यसले उनी दुःखित् बनेँ ।

पोरोक्मी याम्फामीले तागेरा निङ्वाःभू माङसित पुनः ज्ञान मागे । ज्ञान पाएअनुसार उनले फेरि मालिङ्गो वा देवनिगालोको खरानी र पहेंलो माटोको लेऊको थुप्रोमा ढुङ्गाको टोड्कामा रहेको आकाशको पानी मिसाएर माटोमा मुछे । त्यस गिलो माटोलाई मानव मूर्ति बनाए । यसपटक त्यसमा सातो हालेर बोलाउँदा "हुँ के भनेको" भन्दै मानवमूर्ति चट्पटायो । यसरी मिश्रणबाट बनेको मानिस बेल्दा पोरोक्मी याम्फामी खुशी भए ।

मुन्धुमअनुसार तागेरा निङ्वाःभू माङलाई पत्नी बिनाको एक्लो लोग्ने मानिसले मात्र चित्त बुझेन । उनले पोरोक्मी याम्फामीलाई पुनः स्वास्नी मानिस बनाउन अह्राए । पोरोक्मी याम्फामीले पनि निङ्वाःभू माङबाट ज्ञानवुद्धि लिएर स्वास्नी मानिस बनाए । लोग्ने मान्छेसित भेट हुँदा ती युवति लजाइन्, बोलचाल भएन ।

पोरोक्मी याम्फामीले ढुङ्गाको टोड्काको पानी झिकेर त्यसमा मर्चा दवाई मिसाएर खुवाएपछि युवा युवतिको लाज हट्यो । त्यसपछि उनीहरू आपसमा बोलचाल गर्न लागे । ती दुई जनालाई तागेरा निङ्वाःभूमाङले आशिर्वाद दिँदै तिमीहरू अब मेरा छोराछोरी हौ भनी सम्झाए । उनले ती छोराछोरीमा बैंश पनि हालिदिए । त्यसपछि उनीहरूबाट सुसुङ्गे–लालुङ्गे सन्तानहरूको जन्म भयो ।

एकदिन सुसुङ्गे–लालाङ्गेले आफ्नी आमालाई धनुकाँण मागे । तिम्रा बाबु नभएकोले म त्यो दिन सक्दिन भनेर आमाले जवाफ दिइन् । उसोभए तब हामी कसरी जन्मियौँ त? भनि छोराले जिज्ञाशा राख्दा आमाले हावा, वतासको संसर्गबाट तिमीहरू जन्मिएको भनी जवाफ दिइन् । त्यसपछि तिनीहरू आठ वर्षका भएपछि चराको सिकार गर्न थाले ।

**पापको जन्मः** किरात मुन्धुमअनुसार सुसुङ्गे–लालुङ्गे नौवर्षको उमेर नाघेपछि तन्देरी उमेरमा प्रवेश गरे । उनीहरू माथि चीन, भोट र तेमेन, भारत, औल, मदेश क्षेत्रमा सिकार खेल्न जान थाले । सिकार खेल्दै जाँदा एकदिन उनीहरूको लाहादोङ्नासित भेट भयो । उनीहरूबीच विवाह भयो ।

लाहादोङ्ना पनि आफ्नै आमाका सन्तान रहिछन् । त्यो कुरा विवाहपछि मात्र थाहा भयो । अन्जानबश हाडनातामा बिहेवारी भएको पछि थाहा भयो । यो कुरा तागेरा निङ्वाःभू माङलाई पाप कर्म लाग्यो । त्यसप्रकारको विकृति रोक्न उनले एउटा थिति बाँधिदिए । उनले आठ–नौ पुस्तासम्म चेली–माइती पक्षमा बिहेवारी गर्न नहुने थिति बाँधिदिए । यदि कसैले यो रीत तोडेमा उसको चट्याङ लागेर मृत्यु हुने सजाय ब्यवस्था भएको जानकारी गरियो ।

जेहोस्, मुनातेम्बेमा सुसुङ्गे, लाहाङ्गे र लाहादाङ्नाका कोखबाट मुहाम्फेवा, मुसाङनिना, अन्य भाइबैनीहरूको जन्म भयो । फलस्वरुप उनीहरूबाट क्रमसः दरसन्तान बृद्धि भयो । मुन्धुमअनुसार उनीहरूकै दरसन्तान किरात लिम्बू हुन् ।

**नाहेन अर्थात् डाहीः** मुन्धुम भन्छ– मरेका आत्माहरूले आँखी, डाही बनेर ज्यूँदा मानिसलाई सताउने गर्दछन् । यसकारण मान्छे मरेपछि मृतात्माको सही ढङ्गले मृत्यु संस्कार गर्नुपर्दछ । मुन्धुमअनुसार यही आँखी, डाहीकै कारणबाट मानिसको मृत्यु हुन्छ ।

**रिसको जन्मः** मुन्धुमअनसार तिगेन्जङ्ना मुनाखाम्ना भन्ने स्थानमा पुगे । उनका केसामी र नाम्सामी नामका दुई छोरा थिए । उनीहरूमा आँखी, डाहीको विकास भयो । फलस्वरूप उनीहरू आपसमा झगडा गर्न थाले ।

एक दिन जङ्गलमा दाजु केसामीले आवेशवश भाई नाम्सामीलाई मार्न खोजे । प्रतिरक्षा गर्दा भाइ नाम्सामीको प्रहारबाट दाजु केसामीको मृत्यु हुनगयो । त्यो घटनाको सङ्केत यता आमाको फूलमार्फत् पाइन् । बारीको डिलमा रोपिएको केसामीको चिन्ह बाबरी फूल एक्कासी ओइलायो । फूलको ओइलाएको अवस्थालाई आमाले छोरा केसामी मरेको सूचना बुझिन् ।

भाइ नाम्सामीको चिन्ह सेक्मारी फूल भने जस्ताको तस्तै फुलिरहेको थियो । त्यसबाट भाइ नामसामी ज्युँदै रहेको सङ्केत आमाले पाइन् । किरात लिम्बू संस्कृतिमा सेक्मारी अर्थात् अजम्बरी फूललाई नाम्सामीको नओइलिने फूल मानिन्छ । त्यसैले उनीहरू यो फूललाई विशेष महत्व दिनेगर्दछन् । यही मुन्धुमकै आधारमा अजम्बरी फूललाई पवित्र फूल मानिन्छ ।

**उपचार विधिः** किरात मुन्धुम समुदायमा शिशुलाई बचाउने विधि छन् । यदि कसैलाई आगोले पोलेको डाह हटाउने विधि पनि मुन्धुममा पाइन्छ ।

**उपदेशमूलक सन्देशः** येहाङ मुन्धुमका आधारमा येहाङ एक प्रशिक्षित ज्ञानी सन्त थिए । उनलाई देवताका अवतार मानिन्छ । येहाङ मुन्धुममा सामाजिक व्यवस्था तथा रीतिथितिको बन्दोबस्त गरिएका छन् । विवाह रीति, अशुद्धलाई शुद्ध गर्ने रीति, निया–निसाफको थिति, येहाङ उपदेश मुन्धुमले गरेको छ । यसभित्र

स्वच्छ न्याय प्रणाली तथा असल शासनबारे जानकारी दिइएको छ ।

यसै गरी किरात मुन्धुममा लेप्मुहाङको प्रलय–कथा, लेप्मुहाङको भजन, लेप्मुहाङको उपदेश छन् । मुन्धुममा अन्नबाली लगाउँदा पूजा गर्ने विधि, न्वाँगी पूजा गर्ने विधि, कर्मकाण्डको विधि, सुत्केरी शुद्ध हुने विधि, बालकको नाम राख्ने विधि, मराउ परेको घरमा शुद्ध गर्ने विधि, विवाह गर्ने विधि, विवाह कर्मकाण्ड गर्ने विधि, लगन गर्ने विधि आदि उल्लेखित छन् ।

**मुन्धुम लोककथा सङ्ग्रहः** मुन्धुमभित्र भाषा नमिलेको कथा, यासोकेनी महारानीको कथा, कान्देन हाङको उपदेश, मुक्केगुबा राजाको कथा, लासाहाङको कथा, माबोहाङको कथा, माबोहाङको देववाणी, वेदो राजाको कथा, बाजे देवताको कथा, घरदेवताको कथा, खाने–पिउने बेलाको प्रार्थना, बेलुकाको प्रार्थना आदि वर्णित छन् ।

**देवीदेवताः** मुन्धुममा धेरै प्रकारका देवीदेवताहरू हुन्छन् । यिनीहरूलाई मुलतः दुई भागमा बाँड्न सकिन्छ– घरभित्र पुजिने देवीदेवताहरू र जङ्गली देवीदेवताहरू । घरभित्र पूजिने हिमसाम्माङ र घरबाहिर पुजिने देवतालाई ताम्फुङसाम भनिन्छ ।

**पूजाः** मुन्धुममा नश्वर शरीरको बारेमा चर्चा छ । पाप र नर्कको अवधारणा पनि मुन्धुममा पाइन्छ । त्यतिमात्र होइन पापबाट मोचन हुने उपायको पनि चर्चा छ । धार्मिक थितिको प्रबन्ध मुन्धुममा गरिएको छ । मुन्धुमअनुसार उधौली, उभौली पूजा गर्नुपर्ने, अन्नबाली पाकेपछि न्वाँगी पूजा गर्नुपर्ने बताइएको छ । स्त्री गर्भवती हुँदा पेटभित्रको बालक समेतको रक्षार्थ साप्पोक चोमेन पूजा गर्नुपर्दछ । परिवारका रक्षाका लागि वर्षमा एकचोटी सबैले माङगेना र पाप्झेङ गर्नुपर्दछ । हरेक तीन वर्षमा परिवारको जेठोपाको व्यक्तिको नेहाङ्गा पूजा गर्नुपर्दछ । त्यसो गर्नाले शरीरको रक्षा हुन्छ ।

**चाहनाः** मुन्धुमको चाहनाभित्र सामुहिक भावना पाइन्छ । यही मुन्धुमी सिद्धान्तको आधारमा किरात समुदायमा पञ्च भलाद्मीको चुम्लुङ भेला बस्ने चलन छ । भलाद्मीहरू मिलेर प्रजातात्रिक विधिले विवाद मिलाउने गरिन्छ । तलमाथि परेमा दुबो–ढुङ्गो छुवाएपछि सबै पूर्वाग्रह बिर्सने चलन छ ।

मुन्धुममा स्थानियता पनि घुसेको छ । मुन्धुमभित्र किरात लिम्बू पुर्खा चरेका स्थलहरू उल्लिखित छन् । कैलाश पर्वत, मानसरोवर तालदेखि चन्जनलुङ्मा (सगरमाथा हिमाल), फक्ताङलुङ (कुम्भकर्ण हिमाल) को चर्चा मुन्धुममा पाइन्छ । पैत्रिक स्थल सम्झने परम्परा आत्मवाद, जीववाद मान्ने बोन धर्मको परम्पराले भएको हो । तसर्थ, किरात लिम्बू संस्कृति बोन र शैव दर्शनबाट प्रभावित छन् ।

मुन्धुममित्र आदिभौतिक ज्ञान हुन्छन् । जसलाई हामीले सङ्केतका रुपमा लिन सकिन्छ । मुन्धुमको भाषा केवल वाच्यार्थ वा अभिधा नभएर यसका लाक्षणिक अर्थ तथा ब्यङ्ग्यार्थ पनि बुझ्नुपर्दछ । साहित्यमिश्रित तथ्य र ज्ञानलाई वस्तुपरक ढङ्गले वैज्ञानिक विश्लेषण गर्नु पर्दछ । हाम्रो सामु आध्यात्मिक ज्ञान ब्याप्त छ । जसका

लागि हामीले पुर्खालाई धन्यवाद दिनुपर्दछ । यद्यपि, एक्काइशौं शताब्दीमा मिथकको बैज्ञानिक विश्लेषण गर्नुपर्दछ । जेहोस्, लोकसाहित्यको ब्याख्या र बुझाइ चुनौतिपूर्ण छ ।

**सन्दर्भ–सामग्री**

चेमजोङ, इमानसिंह (२०५९) किरात मुन्धुम (किरातको वेद), ललितपुर, किरात याक्थुङ चुम्लुङ,

चेमजोङ, इमानसिंह (२०५९) किरात दर्शनको सारांश, ललितपुर, किरात याक्थुङ चुम्लुङ

चेमजोङ, इमानसिंह (२०२२) किरात मुन्धुम खाहुन, आठराई हाङपाङ, खगेन्द्रसिंह आङबुहाङ,

तुम्बाहाङ, मोहनकुमार (२०१३) अ लिङ्गुइस्टिक स्टडि अफ लिम्बू मुन्धुमः विद्यावारिधि शोधपत्र, , त्रिविवि मानविकी तथा समाजशास्त्र अध्ययन संस्थान,

लिम्बू, मारोहाङ (२०१७) डिलिङकिङ, रिलिङकिङ एण्ड लिङकिङ मेथडोलोजीजः अ ग्लिम्स अफ किरात याक्थुङ लिम्बू लेङग्वेज, राइटिङ एण्ड लिटरेसी, जर्नल अफ ग्लोबल लिटरेसिज, टेक्नोलोजीज एण्ड इमर्जिङ प्याडागोगिज, ४(१) ५६०–५९३

सुब्बा, आसमान (२०४५) किरात साम्यो नु येच्छामथिम, काठमाडौ, लिला सुब्बा

# ५ पाथीभरा देवी मुक्कुमलुङ

पाथीभरा उच्च स्थानमा रहेको एक हिन्दू तीर्थस्थल हो । यो स्थान पूर्वी हिमाली जिल्ला ताप्लेजुङमा पर्दछ । यो नाम लिनासाथ तिर्थालुको मन कुम्भकर्ण हिमाल नजिक पुग्दछ । उक्त हिमालको काखमा पाथीभरा बसेको छ । टाढाबाट हेर्दा, धान भरिएको पाथीझैं देखिने उच्च डाँडामा उक्त पाथीभरा माताको मन्दिर छ ।

पाथीभरा मन्दिरमा जाने तीर्थालुको प्रायः भीड लाग्दछ । त्यहाँ जानलाई भाद्र, असोज–कार्तिक तथा फागुन–चैत–बैशाख महिना उपयुक्त हुन्छ । पहिले त्यहाँ जाने तीर्थालुमा प्रायः स्थानीय आदिवासी हुन्थे । आजकल त्यहाँ विभिन्न जिल्ला र भारतबाट हिन्दू तीर्थालुको लर्को लाग्दछ । चिताएको कुरा पुग्ने मान्यता भएकाले श्रद्धालु हिन्दूका लागि पाथीभरा एक शक्तिरुपा देवी मानिन्छिन् ।

आदिवासी किरात लिम्बू जातिले पाथीभरालाई मुक्कुमलुङ साम्माङ शक्तिमाताको रूपमा पूजा गर्ने चलन छ । कुम्भकर्ण हिमाललाई किरात लिम्बू भाषामा फक्ताङलुङ भनिन्छ । उक्त हिमालको फेद अघि किरातेश्वर महादेवको क्रिडास्थल रहेको जनविश्वास पाइन्छ । किरात लिम्बू मुन्धुममा यो भूभाग किरात लिम्बूका विभिन्न पारिवारिक नाम गाँसिएको थरहरूको उत्पत्तिस्थल मानिन्छ । त्यसैले कुम्भकर्ण, पाथीभरा क्षेत्रलाई आदिवासी किरातले आफ्ना पितृदेवको पवित्रस्थलको रुपमा आस्था प्रकट गर्दछन् ।

पाथीभराको धार्मिक तथा आध्यात्मिक महिमा सांस्कृतिक जगतमा चारैतिर फैलिएको छ । किंवदन्तिअनुसार त्यहाँ अद्दश्य शक्तिको वास छ । जनश्रुतिअनुसार स्थानीयवासी गोठानाहरूले आरम्भमा आफ्ना गाईवस्तु र गोठालाका रक्षार्थ देवीको प्रतिमा स्थापना गरेका थिए । सोही स्थानमा हाल पाथीभरा मन्दिरको भव्य मूर्ति स्थापना गरिएको हो ।

त्यहाँ टाढा टाढाबाट मानिस दर्शनार्थ आउँदाको दृश्य रमाइलो देखिन्छ । बाटामा तीर्थालुका हात हातमा देवीलाई भोग दिन वाख्राका पाठा डोर्‍याउँदै गरेको पाइन्छ । देवीलाई दर्शन गर्न जानेका मनमा अनेक चाहना हुन्छन् । आफूले चिताएको कुरा पुगोस् भनेर शक्ति माग्दा त्यहाँ भाकल गर्दछन् । कोही आफ्नो भाकल गरेबमोजिम इच्छा पूरा भएपछि देवीलाई भोग चढाउँन आउँछन् । जेहोस्, त्यहाँ मानिसको हाउभाउ रमितालाग्दो देखिन्छ ।

भौगोलिक हिसाबले यो तीर्थस्थल ३७९४ मीटरको उँचाईमा छ । यति अग्लो डाँडा चढ्दा बाटोमा रमाइला प्राकृतिक दृश्य देखिन्छन् । उकालो चढ्दा बेलाबेला मानौं आकाशतिर लम्केजस्तो भान हुनसक्दछ । मन्दिर परिसरमा पुगेपछि बेग्लै आनन्द आउँछ । त्यहाँबाट देखिने प्राकृतिक शुन्दरता अनुपम् छ । कुम्भकर्ण हिमालको दृश्य अलग देखिन्छ । कुनै किरात बेहुला सेतो पहिरनमा सजिएर उभिएको सादृश्यता झल्कन्छ । धार्मिक चेतनाले हेर्दा मानौं किरातेश्वर महादेव सेतो भेषमा आशिर्वाद दिन ठिङ्ग उभिएको प्रतीत हुन्छ ।

त्यहाँ बहने चिसो हावा र हिमालको सेतो छायाले तीर्थालुको मनमा बेग्लै आनन्द छाउँछ । एकछिनलाई भोकतिर्खा हराएझैं लाग्नसक्दछ । त्यसैले आजकल पाथीभरामा धार्मिक तीर्थालुका अतिरिक्त प्राकृतिक सुन्दरतामा रम्न चाहने पर्यटकहरूको पनि उत्तिकै भीड लाग्ने गर्दछ । उत्तरतर्फ फर्केर हेर्दा कुम्भकर्ण, कन्चनजङ्गा अनि अलिपर जलजला हिमाल श्रृङ्खलावद्ध भएर बसेका छन् । तिनीहरूले क्षितिजलाई शोभायमान बनाएको देख्दा कसको मन प्रफुल्ल नहोला र ! विहानको सूर्योदय र बेलुका सुर्यास्तमा देखिने हिमालका पहेंला, राता रङ्गले यात्रुका मनमा उमङ्ग छाउँछ । जति नै अँध्यारो रात किन नहोस् सामुन्नेको कुम्भकर्ण हिमाल भने जुनताराको टहकले निक्खर सेतो पहिरनमा सदा ठिङ्ग उभिएको देवताजस्तो लाग्दछ ।

फेदमा आँखा डुलाउँदा अग्ला पहाडका डाँडाकाँडा फैलिएर बसेका देखिन्छन् । हरियो धरती गलबन्दीझैं फैलिएका छन् तिनको सुन्दरता हेर्दा आकासलाई छुन खोजेजस्ता लाग्दछन् । पाथीभरा परिसरबाट वरिपरि हेर्दा साँच्ची प्रकृतिको अनौठो रुप देखिन्छ । अन्यत्र कतैबाट नदेखिने प्राकृतिक परिदृश्यले सबैको मन छुन्छ । मानिसलाई स्वर्गीय आनन्दको प्रत्याभूति गराउँछ । त्यसैले यो स्थान तीर्थस्थलको अतिरिक्त सुन्दर पर्यटकीय स्थल तथा पदयात्रा पनि हो ।

पाथीभरा जानपूर्व ध्यान दिनुपर्ने केही कुरा छन् । यो स्थान हिमाली भेकमा पर्दछ । भौगोलिक स्थिति, दूरी र बाटोको अवस्थाको हिसाबले त्यहाँ पुग्न सजिलो छैन । अर्को, यो स्थान उँचाइमा रहेकाले पदयात्रामा तीर्थालुलाई लेक लाग्ने संभावना रहन्छ । फलस्वरुप कोही तीर्थालु बीच बाटामै टाउको दुखेर, रिङटा लागेर, उल्टी आएर विरामी हुने गर्दछन् । त्यसैले त्यहाँ जाने यात्रुले साथमा मकै भटमासको सातु बोक्ने गर्दछन् । उकालोमा मकै सातु खाँदै हिड्ने मानिस त्यहाँ भेटिन्छन् ।

केही दशकअघि त्यहाँ जान पैदलबाहेक अन्य सुविधा थिएन । उसबेला यात्रा गर्दा राती गोठमा वा पाटीमा बास बस्नुपर्दथ्यो । आफै खाना पकाएर खानु पर्दथ्यो । आजकल यातायातमा सुविधा भएको छ । पाथीभरा पदयात्रामा अहिले होटल सुविधा उपलब्ध छ । बाटामा होटल खुलेका छन् । मोटरबाटोले लामो यात्रालाई छोट्याएर सहज तुल्याइदिएको छ । बेलाबखत विराटनगर, इटहरी तथा तराईबाट तीर्थालु बोकेर हेलिकप्टर पाथीभरा परिसरमा उतारेर उतारेर देवी दर्शन गराउने

व्यवस्था पनि हाल सुरू भएको छ ।

यद्यपि, पाथीभरा दर्शन वा पदयात्रा गर्नु सबैका लागि सहज छैन । सायद यही चाहना पूरा गर्न तथा शक्ति मातालाई आराधना गर्न अन्यत्र अग्ला पहाडमा पनि बैकल्पिक पाथीभरा, मानाभरा देवी स्थापना गरिएका छन् । कुम्भकर्ण हिमालको फेदमा अवस्थित पाथीभरामा जान नसक्ने तीर्थालु आफूलाई पायक पर्ने स्थानीय पाथीभरा, मानाभरामा जाने गर्दछन् ।

पाथीभरा अग्ला थुम्कामा मात्र नभएर तराई क्षेत्रका समथरमा पनि स्थापित भएका छन् । ताप्लेजुङको पाथीभरा पहाड उक्लन नसक्ने, नभ्याउने मानिसले त्यहाँबाटै पाथीभरा माताको दर्शन र भाकल पूरा गर्ने चलन चलेको छ । उदाहरणका लागि विराटनगरको कुशलटोलमा एक पाथीभरा मन्दिर शक्तिपीठको स्थापना गरिएको छ ।

अन्त्यमा, मानव जातिको असीम मनोकांक्षा पूरा गर्ने शक्तिरूपा पाथीभरा माता / मुक्कुमलुङलाई म हृदयदेखि प्रार्थना गर्दछु ।

# ६ नेपाल संवत्

नेपाल संवत् नेपाल राष्ट्रको मौलिक संवत् हो । यो संवत् कार्तिक शुक्ल प्रतिपदाका दिन आरम्भ हुन्छ । काठमाडौं उपत्यकामा एक व्यक्तिले सर्वसाधरणको ऋणमुक्त गरिदिएपछि शासकको सहमतिमा यो संवत् चलाइएको थियो । नेपाल संवत्को प्रारम्भ शक संवत् ८०२ तथा विक्रम संवत् ९३६ को कार्तिक शुक्ल प्रतिपदामा भएको थियो । नेपाल संवत् चन्द्रमास तथा विक्रम संवत् सूर्यमास पद्धतिमा गणना गरिन्छ ।

नेपाल संवतको प्रयोग प्रज्ञापारमिता, गोपाल वंशावली, मानव न्यायशास्त्र, नाटक, कविता, टिपोट जस्ता प्राचीन ग्रन्थहरूमा पाइन्छ । यो संवत् काठमाडौं उपत्याकाभित्र, उपत्यका बाहिर, कुचबिहारसम्म चलेको प्रमाण पाइन्छ । लिच्छवी काल, मल्ल काल, शाह काल, राणा कालमा नेपाल संवत् प्रयोग भएका छन् । पृथ्वीनाराण्यण शाहले काठमाडौं उपत्यका जितेपछि नेवार समुदायमा प्रचलित संस्कृतिलाई मान्दछु, वाचा यदि उल्लङ्घन गरेमा देवीदेवताले नाश गरुन् भनी कसम खाएका थिए । त्यसपछि उनले जीवित देवी श्रीकुमारीको हातबाट टीका थापेर ढोग गरे । त्यसैले नेपाल संवत्को मान्यता शाहकालसम्म चलेको थियो । उदाहरणका लागि नेपालको संविधान २०४७ बन्नअघि मुलुकभर दिइने सार्वजनिक विदा नेपाल संवतकै आधारमा दिने प्रचलन रहेको संस्कृतिविद् चुन्दा वज्राचार्यले बताएकी छन् । प्रधानमंत्री कृष्णप्रसाद भट्टराईले नेपाल संवत् ११११ मा शंखधर साख्वालाई नेपालको विभुति घोषित गरे । तर, २०४७ सालपछि सरकारहरूले नेपाल संवतलाई ध्यान दिन छाडे ।

जानकारीको लागि वि. स. २०७८ कार्तिक १९ अर्थात् सन् २०२१ नोवेम्वर ५ को दिन नववर्ष ११४२ नेपाल संवत् पर्दछ । तिहार पर्वताका नेवार समुदायमा म्हपूजा गरिन्छ सोही दिन नयाँ नेपाल संवत् आरम्भ हुन्छ । यसबाट स्पष्ट हुन्छ कि यो नेपाल संवत् काठमाडौं उपत्यकाका आदिवासी नेवारको सांस्कृतिक महोत्सव हो ।

शंखध्वर साख्वाले काठमाडौं उपत्यकाका गरिव दुःखीलाई ऋणमुक्त गरी दिएको करिव एकहजार एक सय ४२ वर्ष भयो । एक महान परोपकार गरिएको दिनको सम्झनामा नेपाल संवत् चलेको थियो । यो संवत् जनस्तरबाट चलेको थियो

। नेपाल संवतले समाजसेवा सम्झाउँछ । हाल हामी नेपाल संवतको बाह्रौं शताब्दीमा छौं ।

उल्लेखनीय समाजपयोगी काम गर्नेको नाम अमर राख्ने चलन छ । आफ्नो नाम जीवित राख्नका लागि आफ्नो धनदौलतको सदुपयोग गर्ने मानिस विरलै पाइन्छन् । शंखधर साख्वा एक व्यापारी थिए । उनले गरिब मानिसको दुरावस्थालाई मध्यनजरमा राखेर उनीहरूको ऋण तिरी दिए । व्यक्तिगत सम्पत्ति गरिव दुःखीलाई उदारतापूर्वक बाँडिदिएबापत त्यस्ता दानवीर मनकारीको नाम अमर राख्ने चलन लिच्छवीकालीन नेपालमा थियो । असाधारण समाजसेवा गरेबापत समाजले उनलाई सधै सम्झिओस् र यस्ता सत्कार्यमा अरूलाई पनि हौसला मिलोस् भन्ने चाहना त्यसभित्र लुकेको थियो । उक्त शुभकार्यबाट कैयौं गरिब ऋणमुक्त भएका थिए । लोकोपकारीको कार्य र व्यक्तिको सम्झना गर्नु भनेको समाजमा त्यस्ता पात्रको पुनरागमनको चाहना प्रकट गर्नु पनि हो ।

विश्वमा पूँजीवाद, नवपूँजीवादको प्रभावले साधनस्रोत मुठ्ठीभर धनाढ्यहरूको हातमा सोहोरिएको छ । अमेरिका, बेलायतमा मात्र नभएर भारत र नेपालमा धनि र गरिवबीचको खाडल वर्षेनी बढ्दो क्रममा छ । यसरी विश्वमा आर्थिक विषमता बढिरहेको बेला शंखधरको दृष्टान्त समय सान्दर्भिक हुनआउँछ । शंखध्वर रातारात जन्मदैनन् । त्यस्ता महान कार्य गर्नलाई मनमा पहिले मानवीय भावना उम्रनु पर्दछ । त्यस्ता भावनालाई बल पुऱ्याउनलाई आदर्श पात्रको दृष्टान्त र वातावरण हुनुपर्दछ ।

अजकल परोपकार शब्दको प्रयोग हराउँदै गएको छ । हरेक चीजको मूल्य हुन्छ भनेर पूँजीवादले संसारलाई सिकाएको छ । निस्वार्थ भावले निःशुल्क सेवा दिने भन्ने कुरा भलै दिगो नहोला तर असम्भव भने छैन । गच्छेअनुसार जसले जतिञ्जेल सक्छ त्यतिञ्जेल योगदान गर्ने अनि उसको भार अरुले उठाउँदै लगे परोपकार अवश्य सम्भव छ ।

परोपकारले असमानता घटाउन र शान्ति ल्याउन मद्दत गर्दछ । सहयोगी भावनाले मानवता हुर्काउँछ । नेपाल सम्वत् त्यही मानवोपयोगी सन्देश र उत्प्रेरणा बोकेको मौलिक सांस्कृतिक सम्पदा हो ।

विश्वमा चलेका सम्बत् कुनै राजवंश, सत्ता, सभ्यता, धर्मसंग सम्बन्धित पाइन्छन् । जनस्तरबाट उठेर राष्ट्रमा चलेको सम्बत् नेपाल संवत् मात्र हो । नेपालको माटोमा जन्मेर हुर्केको यो मौलिक संवत् हो । यसलाई नेपाल सरकारले मान्यता दिएको त छ तर यो संवत् सरकारी प्रचलनमा भने अझै आउन सकेको छैन । सरकारी कागजपत्रमा नेपाल सवत् उल्लेख गर्ने चलन अझै चलेको छैन ।

नेपालका पुराना कागजपत्र तथा बैंक नोटमा नेपाल संवत् लेख्ने चलन थियो । नेपालमा प्रजातन्त्र वा लोकतन्त्र आएपछि त्यसको महत्वप्रति वेवास्ता भएको छ । छिमेकी मुलुक भारतको रुपैँयाको नोटलाई हेरौं । भारतीय नोटमा भारतमा प्रचलित सबै भाषा हुन्छन् । त्यहाँ सम्बत्लाई पनि समावेशी बनाइएको देखिन्छ ।

नेपालमा गणतन्त्र, संघीयता आए पनि देशको मौलिकतामा उचित ध्यान पुगेको छैन । संविधानमा लेखिए पनि नेपालमा अझै पनि एकै भाषा र एकै संस्कृतिको दबदबा छ ।

नेपाली संस्कृति शक्ति पूजामा विश्वास गर्दछ । हामी नेपाली लामो समय राजाद्वारा शासित प्रजा हौं । त्यसैले हामीलाई जनताको महत्व दर्शाउने सम्पदाको महत्व हेक्का रहेन । हामीले सुन्ने दन्त्यकथामा पनि कुनै राजा वा राजकुमारकै चर्चा बढी हुन्छ । त्यसैले कुनै राजा वा धर्मसित गाँसिएका संवतलाई हामी महान र सहज ठान्दछौं । हामी कोही ईस्वी संवत् चलाउने तर्क गर्दछौं, कोही विक्रम संवतको वकालत् गर्दछौँ । तर, हाम्रो मौलिकता यहीको माटोसित गाँसिएकोआफ्नै माटोमा उम्रेको नेपाल संवत्लाई हामी बेवास्ता गर्दैछौं।

नेपाल बहुसांस्कृतिक मुलुक हो । पृथ्वीनारायण शाहले उपत्यकाका संस्कृतिलाई आफ्नो संस्कार बनाए । नेपाललाई एक बनाउने अभियानको त्यो एक महत्वपूर्ण सूत्र थियो । संस्कृतिविद् जगमान गुरुङअनुसार पृथ्वीनारायण शाहले उपत्यकामा चलेको नेपाल संवत् तथा उपत्यकाबाहिर चलेको शक संवत्लाई जोड्नका लागि विक्रम संवत् चलाए । शाह नेपाल राष्ट्र एकीकरण अर्थात् एकै भाषा, एकै भेष र हिन्दू संस्कृतिका अभियन्ता थिए । यद्यपि, विविधतामाथि एकता हुन नपाएर करिव २०० वर्षपछि पनि उनले राखेको नेपाल राष्ट्र निर्माणको जग अझै किन कमजोर छ?

काठमाडौं उपत्यकालाई जब हामी नेपालको राजधानी मान्दछौं तब त्यहाँका रैथाने नेवार संस्कृतिको सम्पदा नेपाल संवतलाई हामीले सबैको साझा मान्न किन संकोच गर्ने? नेपाल शब्दको व्युत्पत्ति र नेवार शब्दबीच अन्युन्याश्रित सम्बन्ध रहेकोबारे इतिहास पर्याप्त बोलेको छ । नेवार समुदायको नामबाट बनेको नेपाललाई हामीले हाम्रो देश मानेपछि त्यहाँ हुर्केको नेपाल संवत् हाम्रो पहिचान र गौरव हो । नेपालले संयुक्त राष्ट्र संघमा सदस्यता दावी गर्दा नेपाल वा नेवार भाषाको रञ्जना लिपिलाई नेपालको मौलिक भनी प्रमाण पेश गऱ्यो । सोही आधारमा नेपाल आज अन्तर्राष्ट्रिय जगतमा एक राष्ट्रको रुपमा परिचित छ ।

हामीले सबैका सांस्कृतिक निधिलाई उचित सम्मान गर्नुपर्दछ । कुनै समुदायको संस्कृति र जनभावनालाई रणनीतिक लाठीमुङ्ग्राले हिर्काउनु हुँदैन । सत्ता र स्वार्थ समूहको चाहनालाई उच्च ठान्ने प्रवृत्ति ठिक होइन । नेपाल र भारत मुलुकबीच सांस्कृतिक समानता हुँदाहुँदै पनि धेरै कुरामा विशिष्ठता छन् । आफ्नो देश नेपालको नेपाल संवतलाई छिमेकी मुलुकको विक्रम संवतभन्दा पाखे सम्झनु राष्ट्रिय भावना प्रतिकूल हुन्छ । स्मरण रहोस्, विक्रम संवत् स्वयम् भारतमा लोप हुँदैछ ।

नेपाल संवतले नेपाल राष्ट्रको अस्तित्व र पहिचान बोकेको छ । यो कुरालाई हामी नेपालीले मनन गर्न जरुरी छ । नेपालले स्वतन्त्र देशको रुपमा संयुक्त राष्ट्र संघमा आवेदन गर्दा धेरै देशले नेपाललाई चिनेनन् । त्यसबेला नेपाललाई भारतको

एक प्रान्त ठान्ने मुलुक विश्वमा थिए जसले नेपालको सदस्यताको विरा ेध गरे । किनभने त्यसबेला नेपाल र भारतमा मुद्रा, भाषा, लिपि, सम्बत् आदि समान थिए । इतिहास साक्षी छ, नेपालले संयुक्त राष्ट्र संघमा सदस्यता लिन खोज्दा भारतको इसारामा सोभियत संघ र युक्रेनले अवरोध गरेका थिए ।

देश बन्नलाई चाहिने मूलभूत तत्वहरू जस्तै अलग भाषा, संस्कृति, लिपि, सम्बत् आदि देशभित्र विद्यमान हुनुपर्दछ । तत्कालीन नेपालले सुरूमा रैथाने मौलिकता देखाउन मानेन । मुलुकको शिशिष्ठता वा मौलिकता नदेखिएपछि राष्ट्र पहिचानमा चुनौति सिर्जना भएपछि मात्र नेपालले आफ्ना सांस्कृतिक निधिको खोजी गऱ्यो । फलस्वरूप नेपालले काठमाडौं उपत्यकाका रैथाने नेपाल भाषा, रञ्जना लिपि तथा नेपाल संवतलाई आफ्नो मौलिकता भएको दावी गऱ्यो । त्यसपछि मात्र नेपालले संयुक्त राष्ट्र संघको सदस्यता पाएको थियो । त्यसबेला नेपालको संयुक्त राष्ट्र संघ सदस्य प्रस्तावमा बेलायत र अमेरिकाले सहयोग गरेका थिए । यसरी आज हामीले नेपाललाई विश्व मञ्चमा एक राष्ट्रको रुपमा उभ्याउन पाएका छौं । अत: 'खोला तऱ्यो लौरो बिर्स्यो' भन्ने उखानझैं चरित्र हामीले कदापि देखाउनु हुँदैन ।

पञ्चायत कालसम्म श्री ५ को सरकारले म्हपूजा, नेपाल संवतको दिन संयुक्त राष्ट्र संघ दिवस मनाइने गरिन्थ्यो । काठमाडौं खाल्डोमा बोलिने नेपाल भाषा र रञ्जना लिपिको आधारमा नेपालले सदस्यता पाएको सम्झनामा उक्त दिन संयुक्त राष्ट्र संघ दिवस मनाउने गरिन्थ्यो । नेपालको राजदरवारमा रञ्जनराज खनाल प्रवेश गरेपछि त्यो चलन हटेको तथ्य बाहिर आएको छ । उक्त कुरा मल्ल के सुन्दरले २०७८ साल कार्तिक १९ गते प्रशारित एपी–वान टेलिभिजन अन्तर्वार्तामा बताएका हुन् । देशलाई अन्तर्राष्ट्रिय जगतमा उभ्याउने नेपाल भाषा, नेपाल सम्बत् र रञ्जना लिपिप्रति पञ्चायती कालमै तुषारापात भएको थियो । राजदरवारमा आर्य नश्लवादी सोंच भएका, एक भाषा एक संस्कृतिका पृष्ठपोषकको प्रवेशपछि उपत्यकाका आदिवासीका सांस्कृतिक गरिमालाई मेट्ने काम गरियो ।

पञ्चायत कालपछि नेपालमा ठूल्ठूला राजनीतिक परिवर्तन भए । तर, पञ्चायतकालीन सोच र शैली बोकेका नेता र नोकरशाहीले सामाजिक, सांस्कृतिक अवस्था सुधार हुन दिएनन् । सबै दलमा आर्य नश्लवादी चिन्तन भएका नेताको पकड छ । आदिवासी जनजाति नेताहरू उनीहरूकै अरौटे भरौटे बनेका छन् । फलस्वरुप नेपाल भाषा, नेपाल संवत् र रञ्जना लिपि लगायतका आदिवासी सवाललाई हेर्ने राज्यको दृष्टिकोण सकारात्मक बन्न सकेन । देशमा हालिमुहाली गर्ने जातिले आदिवासीका यावत सवाललाई पश्चिमेली चाल भएको हौवा पिटेर विषयान्तर गरी निस्तेज पारिदिएका छन् ।

दुनियाँलाई थाहा छ, काठमाडौं उपत्यकालाई उहिले नेपाल भनिन्थ्यो । यही नेपाल नाम आज समग्र राष्ट्रको नाम बनेको छ । नेपालमा बोलिने सबै रैथाने भाषा नेपाली राष्ट्रभाषा भएका छन् । खस भाषा सम्पर्क भाषा बनेको छ । यद्यपि, नेपाल

भाषा, रञ्जना लिपी र नेपाल संवतले आफ्नै माटोमा सौतेनी व्यवहार सहनु परेको छ । विभिन्न जिल्ला छाडेर काठमाडौंलाई राजधानी मानेर घरबार बसाल्नेको संख्या उच्च छ । उनीहरूले ऐतिहासिक उपत्यकामा जन्मेका एकजना दानवीर भूपिपुत्रलाई अब चिन्नुपर्दछ । रैथाने सम्यता र सम्पदालाई नेपालीले अब आफ्नो मान्नुपर्दछ ।

आज नेपाल संवत्, नेपाल भाषाको अवस्था देखेर रैथाने मन दुखेको छ । आदिवासी संस्कृतिलाई अवमूल्यन गर्दा नेपाली संस्कृतिमाथि अन्याय भएको ठहर्छ । संयुक्त राष्ट्र संघमा देशको अस्तित्व राख्न महत्वपूर्ण औजार बनेका नेपाल भाषा, नेपाल संवत्, रञ्जना लिपि जस्ता संस्कृतिका धरोहरलाई लात हान्ने जुन काम भएको छ, के त्यो जुन थालमा खायो उही थालमा चुठ्ने काम भएन र !

हाम्रो राजधानी काठमाडौं उपत्यकामा जन्मेका जनताका छोरा शंखध्वरले इतिहासमा देवदूतझैं पराक्रम गरे । यसको साक्षी नेपालको इतिहास छ । हो, हामीले उनलाई उचित सम्मान गर्न सकेनौं । जब नेपाल संवत् सम्झना गरिन्छ तब हामी शंखधरलाई सम्झन्छौं । त्यसबेला उनले गरेको ऋणमुक्तिको सन्दर्भ सम्झना आउनेछ । मनमा आउने यस्ता सकारात्मक भावले भविश्यमा कुनै रुपमा अरु शंखधर जन्माउने सम्भावना राख्दछ । त्यसैले नेपाल संवतले मानिसभित्रको परोपकारी दृष्टि उघारिदिन्छ ।

हामीले परिवर्तन साँच्चै खोजेका हौं भने इतिहासका गुणात्मक पक्षको जगेर्ना गर्नुपर्दछ । नेपाल संवतको विशेषता, गरिमा परिवर्तित समयको चाहना अनुरुपकै छ । यो समय शासकमुखी नभएर जनमुखी लहरको हो तर, देशमा समाजवादी संविधान तथा कम्युनिष्टको सरकार आए पनि गरिबी निवारणमा ठोस सुधार हुन सकेन । जनताको अवस्था होइन दलका नेता र कार्यकर्ताको आर्थिक अवस्था मात्र सुधार भएको छ । यस्तो विषम परिस्थितिमा गरिबीलाई निवारण गर्नुपर्दछ भन्ने भावनालाई कसरी जगेर्ना र विकसित गर्ने भन्ने चुनौति चुलिएको छ ।

अतः एक्काइशौं शताब्दीको अग्रगामी सोंचलाई साकार तुल्याउनमा नेपाल संवत् एक उपयुक्त ऐतिहासिक तथा मनोवैज्ञानिक साधन बन्नसक्दछ । मातृभूमिमा उदाहरणीय काम गरेका एक नेपालीलाई सारा नेपालीले सम्झनु पर्दछ । अब, मानवोपयोगी भावनाको बीज लुकेको जनताको नेपाल संवतलाई उचित स्थान दिने जिम्मेवारी अब नेपालीको काँधमा आएको छ ।

## सन्दर्भ सामग्री

गुरूङ, जगमान (२०२२, जनवरी १०) पृथ्वीनारायण शाहको एकिकरण गोरखा राज्यको विस्तार कि नेपालको ? हिमाल अनलाइन टिभी, https://youtu.be/IbKq2sxf8Uw

रेग्मी, जगदीशचन्द्र (२०५३) लिच्छवि इतिहास, नेपाल र एशियाली अनुसन्धान केन्द्र, कीर्तिपुर, नेपाल,

रेग्मी, डिल्लीरमन (१९५२) एन्सियन्ट एन्ड मिडिएभल नेपाल, काठमाडैँ, नेपाल
वज्राचार्य, चुन्दा (२००९) नेपाल संवत्, नेपाल येले संवत् अध्ययन समन्वय समिति, कार्यपत्र, २००९

# ७ गाईजात्रा

गाईजात्रा आदिवासी नेवार समुदायको एक मौलिक तथा विशिष्ठ सांस्कृतिक परम्परा हो । नेपाल भाषामा यो परम्परालाई 'सापारु' भनिन्छ । यो पर्व वर्षेनी भाद्र शुक्ल प्रतिपदाको दिन मनाइन्छ । सडकमा पङ्तिवद्ध भएर मृत व्यक्तिका तस्वीर सहित गाईजात्रा परिक्रमा गरिन्छ । यस क्रममा ढोल, झ्याम्टा बजाउँदै सङ्गीतमय वातावरणमा आकर्षक लाखे नाच पनि नाचिन्छ । नेवार जाति बसोबास गर्ने नेपालका हिमाल, पहाड, तराई क्षेत्रमा पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म यो पर्व मनाइन्छ ।

गाईजात्रालाई अन्य समुदायले पनि आफ्नै ढङ्गले मनाउने वा हेर्ने गर्दछन् । नेपालमा पञ्चायती निरङ्कुश शासन व्यवस्था भएको बेलामा कलाकारहरूले यो पर्व विशेष रूपमा मनाउँथे । यो दिन शासकहरूका काला–कर्तुत तथा कार्यशैलीउपर हाँस्य–ब्यङ्ग्यले प्रहार गर्ने गर्दथे । कलाकारहरूका आकर्षक अभिनयले व्यङ्ग्य–वाँण हान्दा एकातिर शासकवर्ग मुर्मुरिन्थे, अर्कातिर जनता आनन्दित हुन्थे । त्यसैले यो पर्व वौद्धिक जगत एवम् जनमानसमा रमाइलो चाडको रूपमा स्थापित भयो । आज पनि धेरै मानिस गाईजात्रा भन्नेबित्तिकै मदनकृष्ण श्रेष्ठ, हरिवंश आचार्य, सन्तोष पन्त आदि कलाकारलाई सम्झन्छन् ।

हास्य कलाकारहरूका घतलाग्दा प्रहशनले मनोरञ्जन मात्र दिएनन् जनतालाई सचेत र जागरुक पनि बनाइदियो । उनीहरूका प्रस्तुतीले दर्शकलाई हँसाइ–हँसाइ ज्ञानको आँखा खोलिदियो । समाजमा ब्याप्त राजनीतिक तथा सामजिक वेथितीका चाङलाई त्यसले छरपस्ट पारिदियो । फलस्वरुप जनताको हौसला बढ्यो । भ्रष्टाचार, अत्याचारका लिप्त शासकलाई खबरदारी गरियो । बेरितिमा बेरिएको समाजलाई गाईजात्राले सचेत बनायो ।

यो परम्परालाई हाल साहित्यकार र कलाकारहरूले कायम राखेका छन् । उक्त दिन मञ्चहरूमा ब्यङ्ग्यात्मक प्रहसन कार्यक्रम मञ्चन गरिन्छन् । नेपाल एकेडेमीमा पनि यो दिन विशेष कार्यक्रम आयोजना गर्ने परम्परा बसेको छ । कलाकार तथा साहित्यकारहरूले जनतासितको नातालाई त्यस दिन पुनर्ताजगी गर्ने गर्दछन् । गाईजात्रामा हाँस्य–ब्यङ्ग्य गर्न पाइन्छ । स्वतन्त्र भएर लेख्न, बोल्न पाइन्छ । पत्र–पत्रिकामा गाईजात्रा परिशिष्टाङ्क पढ्न पाइन्छ । यो बेला जीवन र

जगतका उज्याला भन्दा पनि अँध्यारा पक्षहरू उजागर हुन्छन् । त्यसैले साहित्यकार तथा कलाकारले यो पर्वलाई सिर्जनात्मक अवसर मान्दछन् ।

अब हामी यसको सांस्कृतिक पक्षतिर लागौं । नेवार समुदायमा वर्ष दिनभित्र घरको कुनै सदस्यको मृत्यु भएमा परिवारबाट एउटा गाई वा गाई नभए बालकलाई गाईको भेषमा सिंगारेर गाईजात्रा निकाल्ने चलन छ । गाईको प्रतीकको रूपमा बालकलाई सिंगार्दा पटुका भुईमा लत्रनेगरि बाँधिन्छ । उसको एकजना साथीलाई पनि जोगीको भेषमा सिंगारिन्छ । दुवैलाई श्रृङ्गार गरिसकेपछि सबै परिवारका मानिस एक ठाउँ भेला हुन्छन् । भेला भएर पङ्तिबद्ध एक वा दुई लाइनमा मिलेर अघि हिंड्दै निर्धारित स्थानहरूको परिक्रमा गर्ने गर्दछन् ।

बाटो परिक्रमा गर्ने क्रममा जोगी भेषधारी बालकले भिक्षाग्रहण गर्दै हिंड्ने चलन छ । परिक्रमा सम्पन्न भएपछि भेला भएर रमाइलो नाचगान गरिन्छ । यो पर्वलाई नेवार समुदायका सबै उमेर समूह र वर्गले उत्तिकै चाख मानेर हेर्ने र रमाइलो मान्दछन् । यस पर्वमा बौद्ध सम्प्रदायका नेवारहरूले मृतकको नाममा सम्झना–वत्ती बाल्ने 'मत्था संस्कार' गर्ने गर्दछन् । उनीहरू सबैजना एकै पहिरनमा बौद्ध–चैत्य गएर धुप–वात्ती बालेर चैत्यको परिक्रमा गर्दछन् । अपरान्हतिर भेला भएर उनीहरू पनि रमाइलो प्रहसन कार्यक्रम गर्दछन् ।

भौगोलिक क्षेत्रका आधारमा भन्नुपर्दा गाईजात्रा पर्व नेवार समुदाय बसोबास गर्ने विशेषतः काठमाडौं उपत्यका, विराटनगर, धरान, धनकुटा, तेह्रथूम, ताप्लेजुङ, ईलाम, संखुवासभा चैनपुर, भोजपुर, खोटाङ, ओखलढुङ्गा, बनेपा, धुलिखेल, त्रिशुली, दोलखा, वीरगञ्ज, हेटौंडा, पोखरा आदि स्थान र जिल्लाहरूमा धुमधामले मनाइन्छ ।

गाईजात्रको ऐतिहासिक पृष्ठभूमितर्फ लागौं । यसको थालनी नेपालमा मल्ल कालमा भएको हो । यो चलन मल्ल राजाहरूको पालादेखि सुरू भएको मानिन्छ । मल्ल राजाहरूको दरबार हनुमान ढोकामा थियो । राजा प्रताप मल्लको पालामा उनकी रानी पुत्रशोकले अत्यन्तै भावविव्हल भइन् । राजाले रानीको शोक कम पार्न एउटा जुक्ति निकाले । राजाले रानीलाई पुत्रशोक अरुका घरमा पनि हुन्छन्, यो सबैलाई आइपर्ने दुःख हो भन्ने देखाएर सम्झाउन खोजे । रानीको दुःखित मन शान्त पार्न हेतु चाँजोपाँजो मिलाए । त्यसै क्रममा राजाले वर्ष दिन यता परिवारका सदस्य मरेका भए उक्त घरबाट गाईलाई सिंगारेर हनुमानढोकाको बाटो भएर नगर परिक्रमा गर्ने उर्दी जारी गरे ।

राजा प्रताप मल्लको उर्दीअनुसार मरेका प्रत्येक घरबाट गाईजात्रामा गाई सिंगारेर तथा गाई नभएको घरबाट बालकलाई नै गाईको भेषमा सिंगारेर अर्को एक बालकलाई साधुको भेषमा भिक्षा थाप्दै नगर परिक्रमा गर्ने आदेश दिए । रानीले पनि गाईजात्राको दिन निकालिएका गाई तथा सिंगारिएका योगी बालक सबैलाई झ्यालबाट हेरिन् । त्यतिले पनि उनको मन शान्त नभएपछि राजाले दरवारमा रमाइलो प्रहसन कार्यक्रम समेत् आयोजना गरिदिए । यसरी शोकाकुल

रानीलाई खुशी बनाउने अनेक प्रयत्न गरियो । त्यसपछि राजाबाट उक्त परम्परालाई हरेक वर्ष निरन्तरता दिने घोषणा भयो । यसरी राजा प्रताप मल्लको पालादेखि यो गाईजात्रा पर्व चलिआएको इतिहास छ ।

हिन्दू धर्मग्रन्थ पद्मपुराणमा पनि यो गाईजात्रा पर्वबारे उल्लेख गरिएको छ । उक्त पुराणमा यमराजको ढोका वर्षभर बन्द हुने र गाईजात्रा निकालेपछि मात्र ढोका खुल्ने भनिएको छ । गाईलाई नगर–परिक्रमा गरेपछि मात्र मृतक व्यक्तिहरू गाईको पुच्छर समातेर बैतरणी तर्ने पौराणिक कथन छ । गाईजात्रा पर्वमा परलोकमा रहेका आत्मा र पर्व मनाउने मानिसका आत्माबीच भावनात्मक सम्बन्ध स्थापित हुने जनविश्वास छ ।

गाईजात्रा पर्व महत्वपूर्ण हुनाका धेरै कारणहरू छन् । पहिलो कारण हो– यो पर्वले पितृलाई सम्मान गर्दछ । गाईजात्रा पर्वले मृतक आत्मासित परिवारजनको भावनात्मक सम्बन्ध कायम राख्दछ । पितृलाई सम्मान गर्ने परम्परा अन्य धर्म र जातिमा पनि विभिन्न रुपमा हुन्छन् । पितृसंग गाँसिएको यो गाईजात्रामा जनसहभागिता बढी हुन्छ । गाई र योगी पात्रका रमाइलो भेषभूषामा सार्वजनिक गरिन्छन् । विभिन्न धर्ममा आस्था राख्नेले यो गाईजात्रा पर्वलाई अभिरुचीपूर्वक हेर्दछन् ।

यो पर्व महत्वपूर्ण हुनाको दोस्रो कारण आकर्षक विधि–विधान हो । यसमा बालक चरित्रहरूको श्रृङ्गारसहितको भावभङ्गिमा देख्दा सबैलाई आकर्षक र मनमोहक लाग्दछ । ढोल, झ्याम्टाको तालमा नाचिने लाखेनाच हेर्न मेलापात, चोकचोकमा भीड देखिन्छ । पहाड, हिमाली भेकका गाउँशहरमा लाखेजात्रा मेला लाग्ने गर्दछ । नेवार समुदायको मौलिक पर्वले सबैलाई आकर्षित पारेको छ ।

गाईजात्रा लोकप्रिय हुनाको तेस्रो कारण– यो जात्रा काठमाडौं उपत्यकाका नेवार समुदायको महत्वपूर्ण पर्व हुनु हो । काठमाडौं उपत्यकामा यो जात्रा मनाउँदा देशभरिका विभिन्न जातजाति र धर्मका मानिसले पर्वलाई देख्ने र बुझ्ने अवसर पाउँदछन् । यो पर्वमा अन्य ठाउँमा छरिएर रहेका नेवार जातिले समेत काठमाडौंको विशिष्ठ शैली देख्दछन् । त्यो देखेर विभिन्न क्षेत्रमा बसोबास गर्ने नेवार समुदायले आफू बसेको क्षेत्रमा पनि त्यस्तै संस्कृति अनुकरण गर्ने वा आफ्ना शैली परिमार्जन गर्ने अवसर पाउँछन् । यसरी काठमाडौंले अरुतिर संस्कृति फैलाउन निरन्तर बल प्रदान गरेको छ । नेवार जाति र अन्य जातिबीचको भावनात्मक दूरी नजिक ल्याइदिएको छ । संचारमाध्यमले पनि यो पर्वलाई विशेष प्रचारप्रसार गर्दछन् । फलस्वरुप नेपाली पहिचान र राष्ट्रिय एकता बढाउन यो गाईजात्राले महत्वपूर्ण भूमिका खेलेको छ ।

गाईजात्रा लोकप्रिय हुनुको चौथो कारणमा– रमाइला एवम् बौद्धिक क्रियाकलाप गरिनु हो । गाईजात्रामा गाई वा गाईका रूपमा सिंगारिएका बालक र भिक्षुले निर्धारित स्थानहरूको परिक्रमा गर्दा ती मार्गमा पर्ने टोल–छिमेकले देख्छन् । यसले मानवीय दर्शनको भावनात्मक सन्देश प्रवाहित गर्दछ । नगर परिक्रमा

गरिसकेपछि रमाइलो कार्यक्रम आयोजना गरिन्छ । रमाइला हाँस्य–व्यङ्ग्यात्मक साहित्यिक तथा साङ्गीतिक कार्यक्रममा मानिस रमाउँछन् ।

अब गाईजात्रा पर्वले दिने सन्देशलाई बुझौं । गाईजात्रा पर्वभित्र सामाजिक, मनोवैज्ञानिक तथा दार्शनिक सन्देशहरू पाइन्छन् । यो पर्वले मनोरञ्जन र चेतना पनि दिन्छ । स्वतन्त्रता र स्वच्छन्दताको अनुभूति गराउँछ । मृत्यु अन्तिम अर्थात् अनिवार्य सत्य हो जसलाई सबैले स्वीकार गर्नुपर्दछ भन्ने सन्देश पाइन्छ । हरेक मानिसले मृत्यु लिएर आएको हुन्छ । घरका परिवारजनले मृतात्मालाई उचित सम्मान गर्नुपर्दछ । यो पर्वमा पितृको आस्थापूर्वक सम्झना गरिन्छ ।

आख्यानमा एक शोकाकुल आमाले आफ्ना मृत छोरालाई बचाइदिन एकपटक भगवान वुद्धलाई अनुनय–विनय गरिन् । भगवान वुद्धले उक्त आमालाई पहिले गाउँ घुमेर मृत्यु नभएको कुनै घर पत्ता लगाउन पठाए । आमाले सारा गाउँ डुल्दा पनि सबै घरमा कोही न कोही मरेका कुरा बुझिन् । उनले मानिस नमरेको कुनै घर भेटिनन् । सोही कुरा आमाले भगवान वुद्धलाई बताइदिइन् । आमाको कुरो सुनेपछि भगवान वुद्धले पनि त्यही तथ्यको आधारमा मृत्यु अनिवार्य सत्य हो, यो सबैलाई लागु हुन्छ भनेर सम्झाइदिए । कुनै सदस्यको मृत्युमा परिवारका अन्य सदस्यहरूले विचलित हुनु हुँदैन भन्ने सत्य सम्झाइदिए । भगवान वुद्धको त्यही जीवन दर्शनअनुरुप राजा प्रताप मल्लले पनि आफ्नी शोकाकुल रानीलाई कुरो सम्झाएका थिए ।

जीवन दुःखमय भनी भगवान वुद्धले चेलालाई बताएका छन् । आजको यो आधुनिक युगमा जीवन एक संघर्षशील मेसीन बन्दै गएको छ । सुखको खोजीमा मानिसले जीवन दुःखैदुःखमा बिताउँदै छ । जीवनको यस्तो कष्टमय यात्रामा एकदिन भए पनि हाँसखेल गरौं, रमाइलो गरौं भनी गाईजात्राले बताएको छ । यस अवसरमा आफूलाई सबैसामू अभिव्यक्त गरौं, अरूका कुरा सुनेर रमाइलो गरौं, जीवन र जगत चिनौं । यति मात्र होइन, मनभित्रका पीर व्यथाहरू भित्रैबाट पखालौं । जात्राले वर्षमा एक दिन रमाइलो गर्ने अवसर प्रदान गरेको छ ।

गाईजात्रामा प्रस्तुत हाँस्य–व्यङ्ग्यले नेपाली साहित्य र कलाको विकासमा योगदान पुगेको छ । आज नेपाली बाङ्मयमा हाँस्य–व्यङ्ग्य साहित्यको अभाव छ । भैरव अर्याल, केशवराज पिंडाली, रामकुमार पाण्डेजस्ता हस्तीको खाँचो छ । यो दिनमा हामी त्यस्ता प्रतिभा खोज्दछौं ।

गाई जात्राको सामाजिक सन्देश छ– सामुहिक र एकताको भावनाद्वारा हामी सार्थक जीवन जिउँनेछौं । सिंगारिएको गाई र बालक टोल–छिमेक–चोक हुँदै नगर परिक्रमा गर्दा सम्बद्ध परिवारजन तथा टोल–छिमेकबीच भावनात्मक एकता बढ्छ । यसले शोकाकुल परिवारमा मनोवैज्ञानिक रूपमा आत्मबल प्राप्त हुन्छ । यति मात्र हैन जात्राले नेवार, गैर–नेवारबीच सद्भावना अभिवृद्धि गराउँछ ।

अन्त्यमा, यो गाईजात्रा पर्वले काठमाडौं उपत्यकाको मात्र नभएर समग्र नेपालको साँस्कृतिक गरिमा बढाएको छ । नेवार समुदायको मात्र नभइ समस्त

नेपालीको पहिचान मौलाएको छ । संस्कृतिका धनि तथा सभ्यताका सम्बाहक आदिवासी नेवार जातिको मौलिक पर्व 'सापारु' अर्थात् गाईजात्रा अब नेपाली जातिको मौलिक पर्व हो । यसले समस्त मानव जातिको जीवन दर्शनलाई प्रतिविम्बित गरेको छ । यो पर्व मृतात्मालाई मुक्ति दिलाउने, परिवारजनलाई शुख, शान्ति दिने पर्वका रूपमा लिनुपर्दछ । यो पर्वले सबैलाई सार्थक जीवन जिउन सिकाउँछ ।

अतः गाईजात्राको दर्शन जीवन्त र गहन छ जसले जीवनपछिको बाटो देखाउँछ ।

# ८ मैवाखोलाले बगाएको दासीको प्रेमकथा

**परिचयः** यो सत्य घटनामा आधारित एक कथा हो । यसलाई नेपालको सामाजिक इतिहास भने पनि हुन्छ । नेपालको सुदूर पूर्वी हिमाली जिल्ला ताप्लेजुङको चाँगे मैवादोभानमा करिव एक शय वर्षअघि यो घटना भएको थियो । तम्बरखोला र मैवाखोलाको दोभान याङमानेमा बसोवास गर्ने एक नेवार परिवारमा घटेको घटना हो यो ।

घटनालाई संस्मरणात्मक लेखको रुपमा प्रस्तुत गर्दैछु । परिघटनाको विश्वसनीयता र आधिकारिकता कायम रहोस् भनी यसका पात्रहरूको परिचय, सन्दर्भ, परिवेश जानकारी दिएको छु । रचनागर्भका दृष्टिले यो लेख साहित्यिक भन्दा सामाजशास्त्रीय सामग्री हो । त्यसैले यो घटनाक्रम समाजशास्त्रका विद्यार्थी, अनुसन्धानलाई काम लाग्नेछ ।

**पृष्ठभूमिः** कुनै साहित्यकारका लागि यो घटनाक्रम एउटा प्रेमकथा बनाउन सकिने राम्रो प्लट नै हो । यसमा काल्पनिकता मिसाएर, बिम्व थपेर, अलङ्कारयुक्त एक सुन्दर प्रेमकथा कथ्न सकिन्छ । तर, घटनालाई मभित्रको अनुसन्धान चेतनाले त्यसो गर्न दिएन । स्थानीय भूगोल, प्रकृतिक अवस्था, समुदायको अस्तित्व जीवन्त बनाइराख्न घटनाक्रमलाई जस्ताको तस्तै राख्न उचित सम्झें । हुन त यसमा मैले मुख्य पात्रको बिम्व कल्पना गार्दागर्दै केही मात्रामा मेरो भावना मिसिन गएको छ । परिघटनालाई प्रभावकारी बनाउन साहित्यिक अचारको पित्का एक छेउमा पस्केको हो ।

कथाका मुख्य पात्रसित यो लेखकको भेट भएको होइन अर्थात् आफैले देखेको पनि होइन । उनको परिवारसित सम्बन्धित व्यक्तिसित मात्र यो कलमको साक्षात्कार भएको हो । पारिवारिक सन्दर्भमा कुरा चल्दा घटना चाल पाएको हो । यो कुरा लामो समय मनका कुनामा गाँठो परेर बसेको छ । त्यो घटनासंग जोडिएका परिवार जीवितै छन् । घटना घटेको स्थल पनि उस्तै छ तर कथा भने हराएको छ ।

**औचित्यः** दासप्रथा एक सामाजिक कुप्रथाका रूपमा नेपालको इतिहासमा कालो अक्षरले कोरिएको छ । यो सामाजिक–आर्थिक कुरीति थियो । त्यस्तो अँध्यारो दिन हटेको आज धेरै भएको छैन । नेपालमा दासप्रथा हटाउन राज्यले

चालेको अन्तिम कदम कम्लहरी प्रथा उन्मुलन थियो । यो प्रथा हटेको आज करिव दुई दशक भयो । आम रुपमा समाजमा चलेको दासप्रथा आजभन्दा करिव एक शय वर्षअघिसम्म व्याप्त थियो । त्यो कहाँ कुन समुदाय वा परिवारमा कसरी बसेको थियो भन्ने जानकारी हामीलाई कम छ । अतः पूर्वी नेपालको तम्बरखोला र मैवाखोलाका दोभानमा बसेका एक नेवार परिवारमा करिव एकशय वर्षअघि ब्याप्त दासप्रथाको एक मार्मिक घटना कोर्दैछु जसले मानवतालाई छुनेछ ।

**तात्पर्यः** आठराई चाँगे मैवादोभानको करिव एक शय वर्षअघिको एक दास दम्पत्तिको मार्मिक सामाजिक इतिहास नमरोस् । मानवताको पाठ सिकाउने उक्त सत्यकथा मैवाखोलाको भल पहिरोमा नबगोस् वा पहिरोमा त्यत्तिकै नपुरिओस् । एक दुर्गम स्थानको सांस्कृतिक विशेषता नमेटिओस् । शिर्षकमा कथा भनिए तापनि मैवादोभानमा घटेको यथार्थपरक सूचनालाई अभिलेखन गर्नु नै प्रस्तुत लेखको मूल तात्पर्य हो ।

**विधिः** यो जनश्रुति र अनुभवमा आधारित लेख हो । घटनाका प्रत्यक्षदर्शीसंग कुराकानी भएको थियो । उक्त घटनालाई कालान्तरमा थप सामग्रीको आधारमा विश्लेषण गरिएको छ ।

**घटनाक्रमः** यो घटना पाठकलाई कतै सुनेको वा पढेको कथा जस्तो लाग्न सक्दछ । त्यसैले सर्वप्रथम घटनास्थल र सम्बन्धित परिवारबारे जानकारी दिनेछु । मलाई यो परिघटना सुनाउने पात्रको परिचय दिनेछु । पात्रलाई मनमनै ब्यूँताउँदै छु ।

ताप्लेजुङ जिल्लाको आठराई हाङपाङबाट उत्तरतिर फर्कदा हिमालको फेद हुँदै तम्बरखोला र मैवाखोला बगेको रमाइलो प्राकृतिक छटा देखिन्छ । उत्तरका हिमश्रृङ्खलाबाट बग्दै आएका ती दुई नदी मिसिएको स्थानलाई याङमाने वा मैवादोभान भनिन्छ । उक्त सुन्दर दृश्य हेर्दा कता कता त्रिशूल आकृतिको झल्को आउँछ ।

अब त्यसलाई नजिक गएर हेरौं । मैवाखोला दक्षिणपूर्वको भूभाग याङमाने चाँगे गाउँमा पर्दछ । मैवाखोलाउत्तर र तम्बरखोलादक्षिणको समथल भूभागलाई महादेवटार भनिन्छ । महादेवाटारमा पहिले एउटा विशाल शिवालय थियो । शिवालय परिसरमा पाटी, पौवा तथा बगैंचा थिए । त्यसैले त्यो टार महादेवटार नामले प्रसिद्ध भयो । महादेवटारमा टाढाटाढाबाट साधु सन्त आउने गर्दथे । त्यहाँ बसेर आराधना गर्ने गर्दथे । हाल उक्त शिवालय, पाटी, पौवा, बगैंचा अतीतको गर्भमा भग्नावशेष बनेको छ । अव शिवालय इतिहास बनेको छ । धार्मिक स्थल हाल अतिक्रमित भएका छन् । यो ठाउँ अहिले मेरिङदेन खाम्लुङ गाउँमा पर्दछ । हाल ती स्थान स्थानीय व्यापारिक केन्द्रको रुपमा परिचित छन् ।

अहिले बताउन लागेको परिघटना आजभन्दा करिव एक शय बीस वर्षअघिको हो । घटना भोग्ने तथा बताउने मेरा ससुरा बुबा हुन् । ससुराली जाँदा मैले थाहा पाएँ, परिवारभित्र एउटा नमीठो घटनाले परिवारलाई पोल्ने गरेको छ ।

मेरा ससुरा बा स्वर्गीय रामबहादुर श्रेष्ठलाई म अहिले झल्झली सम्झिरहेको छु । उहाँ बाल्यकाल हुँदा घरमा दासदासी राख्ने चलन रहेछ । यही क्रममा मेरा ससुरा बाको परिवारमा पनि एकजना दम्पत्ति दासदासी रहन्थे । बाको भनाइबाट थाहा भयो त्यसबेला ती दासदासीको अवस्था घरमा पालेका गाईवस्तुझैं थियो । उनीहरूलाई घरमालिकले चाहेबमोजिम बेचबिखन गर्ने गरिन्थ्यो । मेरा ससुराबा त्यसबेला चार पाँचवर्षका बालक थिए । उनका अनुसार ती दासदासी आफ्ना घरमालिकलाई आफ्नो दम्पति नछुटाइदिन अनुनयविनय गरिरहन्थे ।

दुर्भाग्यवश, एकदिन घरधनीले नोकरलाई बेचिदिए । आफ्ना दास पतिलाई अन्यत्र बेचिदिएपछि दासी बिलाप गर्न थालिन् । उनलाई निकै दिन कोठामा थुनेर राखियो । कतै भाग्लीन भनेर उनलाई कोठाभित्रै खानेकुरा लगेर दिइन्थ्यो । घरछिमेकका बालबालिका नोकर्नीलाई झ्यालको च्यापबाट चियाएर हेर्ने गर्दथे । केही दिनपछि नोकर्नीको धैर्यको बाँध टुट्यो । एकदिन उनले आफूलाई झ्यालबाट चियाउनेमध्ये एकजना बालकलाई सुटुक्क नजिकै बोलाइन् । उनको पटुकामा राखेको थैलीबाट एउटा सिक्का देखाउँदै ढोकाको साङ्लो खोलिदिएमा बालकलाई आफ्नो सिक्का दिने प्रलोभन देखाइन् । फलस्वरुप एक बालक (मेरा ससुराबाभन्दा जेठो दाइ)ले दासी थुनेको ढोकाको साङ्लो बाहिरबाट सुटुक्कै खोलिदिए ।

यसरी ढोका खोल्नासाथ बालकको हातमा सिक्का थमाएर ती दासी महिला हावाको गतिमा हान्निदै रुँदै कराउँदै मैवाखोलातर्फ दौडिन् । दायाँबायाँ केही नहेरी बिछोड भएका आफ्ना पतिको नाम लिदैं खोलातिर कुदिन् । विक्री गरिएका पतिलाई अब यस जुनीमा भेट्ने उपाय कतै नदेखेपछि दासीले अब बाँच्नुको कुनै अर्थ देखिनन् । उनले तत्काल देहत्याग गर्ने निश्चय गर्दै कुदिन् ।

हेर्दाहेर्दै उनी मैवाखोला नजिकै रहेको झोलुङ्गेखेत छेउको बगरको ठूलो ढुङ्गामाथि उक्लिन् । एकफेर चारैतिर हेरिन् । आफ्ना घरमालिकलाई आत्मैदेखि सरापिन् । समाजलाई धिक्कारिन् । यो पापी समाजबाट विदा हुनअघि अन्तिम पटक निष्ठुरी दुनियाँ नियालिन् । अन्त्यमा आफ्नै जीवनलाई धिक्कारिन् । अलि पर देखिने महादेवको मन्दिरको गजुरलाई नमस्कार गरिन् । महादेवतुल्य आफ्ना पतिलाई अर्को जुनिमा पाउने दृढ चाहना भगवानसमक्ष प्रकट गरिन् । पग्लिएको मनलाई आत्माभित्र गाँठो पार्दै उनले मैवाखोलामा हाम फालिन् र पानीभित्र लिन भइन् ।

हेर्दाहेर्दै उनको भौतिक शरीर त्यहाँबाट सिधै तल मैवाखोलाको कालिदहमा छप्ल्याङ्ग ढुङ्गाझैं खस्यो । एकछिन पानीको फिँजसितै ज्यान छट्पटायो र केहीबेरमा शान्त भयो । लास बग्दै तम्बरखोलामा मिसियो । यसरी एउटा प्रेमीको बिना कालगतिले असामयिक अन्त्य भयो ।

मान्छे भएर पनि दासी दम्पत्ति पशुतुल्य नारकीय जीवन बिताउन बाध्य थिए । पतिको विछोडको रापमा छटपटाएकी दासीको लाससरी ज्यानलाई मैवाखोलाले

हात थापिन् । सायद, अघि सीता मातालाई पनि धरती माताले यसरी नै शरण दिएकी थिइन् । धरतीको काखझैं मैवाखोलाले एक दासीलाई मैवाखोला माताले आफ्नो अङ्गालोभित्र हालिन् । जीवनको अन्त्य खोज्दै समीप आएका एक प्राणीलाई नदीले शरण दिइन् । मैवाखोलाले दुष्ट दुनियाँको पापी नजर छल्दै दासीको शवलाई लुकाउँदै लगेर तम्बरखोलामा मिसाइदिइन् । उनको मृत शरीर गङ्गा नदीमा पुग्यो होला ।

आज पनि बेलाबेला उही दासीको बिलौनाको प्रतिध्वनिझैं मैवाखोला र तम्बरखोला सुसाउँछन् । उनका बिछोडिएका पति गोरुझैं जोतिन हारेको जुनी जिउन बाध्य भएका थिए । उनहरूका अतृप्त चाहना र अमर माया उनकी प्राणप्रिय पत्नीको मुहार खोज्दै आँशुको असारे भल बनेर मैवाखोला बगिरहेछ । आफ्नी जीवनसखीलाई नदेखेर दासको मन तम्बरखोलाको भेलझैं बेलाबेला बहुलाउँछ ।

टाढाबाट हेर्दा सुन्दरझैं देखिने मैवाखोला र तम्बरखोलालाई नजिक गएर हेर्दा अर्कै देखिने रहेछ । यो कथा सुनेपछि मैले ती खोलाहरूलाई अर्कै देख्न थालें । खोलामा छाल आएको देख्दा मेरो मन छिया–छिया भएर आउँछ ।

**परिवारमा परेको मानसिक प्रभावः** उक्त घटनाले मैवादोभान बजारका सम्बन्धित परिवारजनमा मात्र हैन सिङ्गो मैवाखोला थुमको मुटु पापले काँप्यो । घटनाले मानव जगतलाई स्तब्ध तुल्याइदियो । दासीको श्रापबाट मुक्ति पाउन सम्बन्धित परिवारले स्वस्तिशान्ति पूजाआजा गरे । उप्रान्त परिवारमा दासदासी नराख्ने सङ्कल्प पनि गरे । सम्बन्धित परिवारजनले पछिसम्म खोलामा गएर श्राप बगाउने धार्मिक अनुष्ठान गरे । नभन्दै, दासदासीले सरापेको घरपरिवारमा पछि अनेकन प्राकृतिक विपत्ति आए । कहिले बाढीपहिरो त कहिले आगजनीले दुःख दियो । त्यस्ता प्राकृतिक प्रकोपलाई पनि दासीको श्रापसित गाँस्ने धारणा जन्मियो । यसरी एक ताल्चा भण्डेल परिवार मानसिक दवावमा पऱ्यो फलस्वरुप दुर्घटना सांस्कृतिक उपचार गालीश्राप बगाउने अनुष्ठानसित जोडिन पुग्यो ।

**इतिहास तथा वंशावलीः** नेपालको इतिहास झल्काउने विवरण ईन्साइकोपिडिया ब्रिटानिकामा गोरखाका राजा पृथ्वीनारायण शाहले काठमाडौं उपत्यका विजय गर्दाको साङ्गोपाङ्ग रुपरेखामा उल्लेख छ । संक्षिप्तमा, उपत्यका हात पारेपछि सन् १७७५ देखि १९५१ सम्म गोरखा विस्तार गर्ने शाह तथा उनका भारदार र उपत्यकामा रैथाने मल्ल, सम्भ्रान्त नेवारबीच स्वार्थको द्वन्द्व चल्यो । सन् १७७७ देखि १८३२ सम्म शाह राजा राजगद्दीमा देखिए तापनि दरवारबाट भारदारहरूले शासन चलाउँने गर्दथे । यही क्रममा थापा परिवारले सन् १८०६ देखि सन् १८३७ सम्म र राणा परिवारले सन् १८४६ देखि १९५१ सालसम्म नेपालमा शासन गरे ।

यही घटनाक्रमले भक्तपुरका नेवार जाति पनि प्रभावित भएका थिए । ताल्चा भण्डेल थरका नेवार भक्तुपरका मूल बासिन्दा हुन् । ताल्चा भण्डेल वंशावली

(२०७२) अनुसार भादगाउँ अर्थात् भक्तपुरको भोलाछें र याछें टोलमा यिनीहरूको बसोबास छ । यिनीहरू जयस्थिति मल्ल (वि.सं. १४३७ देखि १५४२ सम्म) को दरबारमा भण्डारको जिम्मेवारी सम्हाल्थे । त्यही दरवारमा काम गर्दा उनीहरूले ताल्चा भण्डेल पदवी पाएका हुन् । हाल उनका दरसन्तानले आफ्नो थरका रुपमा त्यसलाई धारण गरेका छन् ।

भक्तपुरमा शाहकालीन शासन कालमा गोरखा र स्थानीय नेवार समुदायबीच चलेको द्वन्द्वका कारण ताल्चा भण्डेलको एक समूह भक्तपुर छाड्न बाध्य भयो । सन् १७९८ (वि.स. १८५५) मा ताल्चाभण्डेलको एक हाँगो उपत्यका नाघेर पूर्वतर्फ लागेको वंशावलीले बताउँछ ।

पृथ्वीनाराण शाहको गोरखा विस्तार क्रममा नेपाल (काडमाडौं) उपत्यकापछि पूर्वतर्फ खम्बुवान, लिम्बुवान क्षेत्रसमेत गोरखाली अधिनमा क्रमसः आयो । गोरखाली र लिम्बूवानबीच नुनपानी सन्धि सन् १७७४ (वि.स.१८३१) मा भएको थियो । त्यसपछि किरात लिम्बुवान क्षेत्रमा काठमाडौं उपत्यका तथा शाहअधीन क्षेत्रका मानिसलाई पूर्वी किरात लिम्बुवान प्रदेशमा बाटो खुल्यो ।

दरवारको भण्डारे भएकाले ताल्चाभण्डेल आर्थिक अवस्था राम्रै भएको अनुमान गर्न सकिन्छ । नेवार जाति स्वभावैले व्यापारमा निपूर्ण थिए । आफ्नो व्यवसायलाई अनुकूलको स्थानको खोजीमा ताल्चाभण्डेल परिवार आठराईको मैवाखोला दोभानमा पुगेर अडियो । तम्बरखोला र मैवाखोलाको संगमस्थलमा ब्यापारको लागि उपयुक्त थियो । त्यसबेला तिब्बतबाट ब्यापार हुन्थ्यो । यसैले ओलाङचुङ गोला भएर आठराई आउने मार्गमा दोभानलाई बासस्थल छानियो ।

पहाडी क्षेत्रका दुई नदीको संगमस्थललाई दोभान भनिन्छ । यो दोभान विभिन्न मूलबाटाहरू जोडिने केन्द्रमा पर्दछ । दुई खोलाका बीचमा परेकाले यहाँ बाढीपहिरोको जोखिम भने छ । वि.स. २०२५ सालको बाढीमा पहिलेको दोभान बजार प्रभावित भयो फलस्वरुप चाँगे गाउँको फेदमा पर्ने याङमानेमा उक्त दोभान सरेको थियो । प्राकृतिक विपदको जोखिम सहेर ताल्चाभण्डेल परिवार मैवा दोभानमा बसेको छन् । त्यहाँ उनीहरू स्थापित पनि भएका छन् ।

ऐतिहासिक पृष्ठभूमि हेर्दा ताल्चा भण्डेल मल्ल दरवारसित सम्बन्धित देखिन्छन् । फलस्वरुप उनीहरू उपत्यकाबाट बाहिरिदा उपत्यकामा रहेको दासप्रथा किरात लिम्बुवान क्षेत्रमा ल्याएको आधार भेटिन्छ ।

**विवेचनाः** आज हाम्रो पुस्ताले त्यस्ता दासदासी राखेको वा बेचविखन गरेको देख्न परेको छैन । इतिहास खोतल्दै जाँदा विभिन्न कालखण्डमा तत्कालीन सामाजिक अन्याय, अत्याचारमा परेर जीवनदेखि हारेका, समाजले लखेटेका, चीरहरणमा परेका असंख्य मानिसको आत्मिक पुकारका प्रतिध्वनि मैवाखोला, तम्बरखोला लगायत नदीका सुसेलीभित्र सुनिने गर्दछन् । त्यसैले होला पहाडका नदीनाला टाढाबाट हेर्दा जति सुन्दर र मनमोहक देखिन्छन् त्यसभित्र लुकेका कुरुप तस्बिरले भने समाजलाई केही न केही सन्देश दिइरहेका हुन्छन् ।

**उपसंहारः** दासदासीमाथिको अत्याचार मानवताविरोधी कलङ्क हो । त्यो दाग मेटिन असम्भवप्रायः छ । अब हामी यसबाट केवल पाठ सिकेर समाजलाई सही मार्गमा हिडाउन सक्छौं । समाजमा कैंयौं दास र दासीको नियति मैवाखोलाले झैं कैंयौं खोला र भीरपहराले चपाएका होलान् । आज इतिहासको कठघरामा समाज उभिएको छ ।

इतिहास दोहोरिन्छ पनि भनिन्छ । हो, सारमा दासप्रथाको स्वरुप, पात्र र परिवेश मात्र फेरिएका छन् । आज नेपाली जनता आफ्नै समाजमा दास नभएर के भो र⁄विदेशीका गुलाम र दलाल बन्न लाइनमा तँछाड मछाड गरिरहेका छन् ।

अब कथास्थलतर्फ फर्किऔं । वि.स. १९९० को महाभूकम्पमा मैवादोभान नजिक महादेवटारमा रहेको शिवालयमा क्षति पुग्यो । पुनरुत्थान तथा स्याहारसम्भारको अभावमा शिवालय र पाटीपौवा क्रमसः भत्किदै गए । सम्भवतः त्यहाँका तत्कालीन समाजले धार्मिक क्रियाकलाप भन्दा पनि स्थानीय सुरक्षा व्यवस्थालाई प्राथमिकता दिए । फलस्वरुप भत्किएका शिवालय र पाटीपौवाको जिर्णोद्धार गर्नुभन्दा त्यहाँका ढुङ्गा, ईटा तथा काठपात याङमानेस्थित मैवादोभानमा प्रहरी पोष्ट बनाउँदा प्रयोग गरियो । त्यसबेला शिवालय परिसरका ईटाढुँङ्गा वर्तमान प्रहरी पोष्ट भवनसम्म ओसार्ने हात अझै जीवित छन् ।

मैवादोभान आज व्यापारिक स्थलको रूपमा विकसित भएको छ । स्मरण रहोस्, इतिहासमा यो महादेवटार एक धार्मिक तीर्थस्थल थियो । यसको धार्मिक महत्वको गुनगान गाउने बुढापाका धेरै छन् । धार्मिक स्थल महादेवटारको मौलिकता, ऐतिहासिकता तथा पुरातत्विक अन्वेषण हुन आवश्यक छ । साथसाथै उक्त धार्मिक तथा सांस्कृतिक स्थलको संरक्षण र सम्बर्धनतिर सबैको ध्यान जानुपर्दछ ।

**सन्दर्भ–सामग्री**

इन्साइक्लोपिडिया ब्रिटानिका (२०२१, मार्च २६) हिस्ट्रीअफ नेपाल, https://www.britannica.com/place/Nepal/History

पलिखे, भागवत (२०७२) ताल्चाभण्डेल परिवारको वंशावली पुस्तिका, भोलाछें टोल र याछें टोल भक्तपुर, इटहरी, सुनसरी, ताल्चाभण्डेल परोपकार समिति ।

# ९ सम्झनामा आठराई चाँगे गाउँ

हामी जैविक, भौगोलिक आधारमा मात्र नभएर विचार, बिम्ब र स्वैरकल्पनाले एक अर्कासित गाँसिएका हुँदा रहेछौं । इतिहास र संस्मरण सामाजिक जीवन र मानवीय आयामका ऐना रहेछन् । मिथकीय खोटोले हामीलाई जोडिराख्दो रहेछ । यही बिम्वात्मक गुरुत्वर्षणका आधारमा म चाँगे गाउँको शब्दचित्र कोर्दैछु ।

एक दिन चाँगेबाट दीपेन्द्र आङबुहाङले चाँगे माद्यमिक विद्यालयको स्मारिकाका लागि शिक्षालाई छुवाएर एउटा लेख लेखिदिनोस् न ! भन्दा म झस्किएँ । स्मारिकामा तथ्याङ्कसहित चाँगेको शैक्षिक गतिविधि र प्रगतिबारे विज्ञ शिक्षकवर्ग तथा जानकारबाट आधिकारिक लेख अवश्य आउने नै छ । म भने आठराई त्रिवेणी अन्तर्गत हाङपाङ र चाँगे लगायतका सामाजिक तथा शैक्षिक पाटामा उम्रेका अतीतलाई केलाएर वर्तमानसित गाँस्दैछु । तथ्याङ्क भन्दा पनि गुणात्मक सूचना र इतिहासलाई आत्मगत शैलीमा आफ्ना विचार र विम्ब केलाउँदैछु । अघि त्यस क्षेत्रको एक विद्यार्थीले आफ्नो क्षेत्रको शिक्षा क्षेत्रलाई कसरी देखेको वा बुझेको रहेछ भन्ने कुरा यो लेखले जनाउनेछ ।

मेरा आँखा उघ्रेर परपरका दृश्य देख्न सक्ने भएपछि मैले राम्ररी ठम्याएका दृश्यमा चाँगे, नेसुम, गैरी, सोबुवा गाउँ, वस्तीहरू थिए । कहाँसम्म भने म उठेदेखि नसुतेसम्म नहेरुँभन्दा पनि सामुन्ने पर्ने गाउँ नै चाँगे, नेसुम, गैरी, ओख्रे, गोर्जाटार, सोबुवा गाउँ थिए । त्यसैले ती प्राकृतिक बिम्व मेरा मनभित्र कल्पना र यदाकदा सपनामा छाइरहन्छन् । थाहै छ, हाङपाङ र चाँगे गाउँ हेराहेर गरेर बसेका गाउँहरू हुन् । बीचमा सोबुवा खोला बगेको छ । यस खोलाबाट विजुली उत्पादन गरिएको छ । पानीबाट उत्पादित विजुलीले हाङपाङ, चाँगे, जिल्ला सदरमुकाम फुङलिङ लगायत वरपरका गाउँघर झलमल्ल बनाएको छ । यी दुवै गाउँको उत्तरमा तम्बरखोला र दक्षिणमा तेह्रथूम र संखुवासभाको सीमाक्षेत्र पर्दछन् । उत्तर र दक्षिण फैलिएका यी गाउँहरू किरातकालीन आठराई नामले चिनिन्छन् । यहाँ धान, मकै, कोदो, फापर, सुन्तला, हरिया तरकारी फल्ने कृषियोग्य भूमि र सिंचाइको व्यवस्था छ । यहाँ कृषि उत्पादनको अवस्था पनि राम्रो छ । प्राकृतिक रुपमा चाँगे र हाङपाङ ठूल्ठूला पहिरो नजाने भूक्षेत्रमा पर्ने सुन्दर गाउँ हुन् ।

चाँगे नेसुम गाउँमा बिहान घाम झुल्कनासाथ सूर्यको किरण पर्दछ अर्थात् यो पूर्व मुख फर्केको गाउँ हो । जहाँ १–२ जुवा घाम छँदै छाया पर्ने गर्दछ । यता हाङपाङ पश्चिम–उत्तर मोहडा फर्केको गाउँ हो, जहाँ विहान ८ बजेतिर मात्र घाम झुल्कन्छ तर घाम नअस्ताउन्जेल किरण पर्दछ । यी दुवै गाउँमा अन्नबालीमा धान, मकै, गहुँ, नगदेबालीमा अलैंची, सूर्ती र फलफूलमा सुन्तला, कागती आदि फल्दछन् । आलु लगायत अन्य हरिया सागपात, तरकारी लगाउनलाई यहाँ अनुकूलको हावापानी र माटो छ । यहाँबाट ताप्लेजुङ सदरमुकाममा अन्न, फलफूल र तरकारी निर्यात गरिन्छ ।

अब म मेरा अतीत झल्काउने शब्दचित्र कोर्दैछु । मैले बाल्यकालमा चित्र कोर्न सिक्दा चाँगे गाउँको माथि शिरमा लहरै देखिने वनजङ्गलका बाक्ला रुखहरूका टुप्पा र क्षितिज हेरेर मैले मनमा एउटा बिम्व बनाएँ । त्यही दृश्य पहिले आँखा र त्यसपछि मनमा भरेर कागजमा पेन्सिल घुमाएँ । निलो आकाश, हरिया जङ्गल र सेता, राता घरहरू कागजमा कोरें । मैले त्यसबेला चित्र कोर्न सिक्दा डाँडामा रुख बाक्ला थिए । हेर्दाहेर्दै सोवुवा, गैरी, नेसुम माथिका डाँडामा रुख पातलिए । वर्षामा बग्ने गैरी, नेसुमका खोला र छहरा पहिले सेता दाँत जस्ता चम्किला देखिन्थे ती वर्षेनी खिइँदै गए । हाङपाङबाट सोबुवा, गैरी, नेसुमका शिर हेर्दाहेर्दै बनजङ्गल मासिएर तालु खुइलिएको टाउका जस्ता भए । मैले देख्दादेख्दै जंगलमा महिनौं आगो लगाइयो, भस्मे फाँडियो । त्यहाँ हेर्दा डाँडामा रुख पातलिए र डाँडामा यत्रतत्र टुप्पी पलाएझैं रुख ठडिएका देखें । अहिले र उहिलेको प्राकृतिक वनोट र सुन्दरतामा कत्ति फरक भएछ, त्यो सोच्दा आफैलाई अनौंठो लाग्दछ ।

त्यो सम्झना आज मलाई सपनाजस्तो लाग्दछ । मेरो वाल्यकालमा त्यहीँ जंगलबाट बथानका बथान काग बिहानै हाङपाङमाथिको आकाशमा निकै उँचाइमा काग काग कराउँदै आउँने गर्दथे । हरेक दिन साँझ परेपछि सायद हाङपाङ शिरको जंगलमा भेला भएर पुनः ती चराहरू कराउँदै कराउँदै चाँगे शिरको जङ्गलमा फर्कने गर्दथे । त्यसबेला अहिले जस्तो समय थाहा पाउनलाई हातेघडी, मोवाइल आदि थिएनन् । ती चराले त्यसबेला गाउँघरमा घडीको काम गरेका थिए । त्यसरी काग लगायतका चरा पारिबाट वारि आउने र साँझ पारि जाने क्रममा चराका बथानले बनाउने कलात्मक लस्करको त्यो आकाशे दृश्य हेर्नु मजालाग्दो थियो । अझ तिनले निकाल्ने आवाज वा सङ्गीत सुन्नु मेरो बाल्यकालको मनोरञ्जन थियो । यसरी म हाङपाङे भुन्टे केटो बाल्यकालदेखि नै चाँगे गाउँका विभिन्न भूभागका परिदृश्य र चराचुरुङ्गीसित भावनात्मक रुपमै गाँसिएको रहेछु ।

राजनीति म त्यसबेला बुझ्दिनथें । हामी एकाएक तेह्रथूम जिल्लाबाट ताप्लेजुङ जिल्लामा पर्‍यौं भन्ने हल्ला चल्यो । किन, कसले त्यसो गर्‍यो भनेर सोधीखोजी गर्नुभन्दा पनि हामी विद्यार्थी आफ्नो एस.एल.सी.को सेन्टर आठराई सक्रान्तिबाट फुङलिङ ताप्लेजुङ भएकामा चिन्तित भयौं । प्रायः हप्तैपिछे हाटमेला गर्न शनिबार सक्रान्ति बजार जाने हामी गाउँलेलाई बानी परेको थियो । आठराईका

मानिससंग उठबस थियो । त्यहाँ बस्नलाई डेरा खोज्न सजिलो थियो । ताप्लेजुङ जिल्ला सदरमुकाम फुङलिङ बजार भए पनि त्यहाँ हाम्रो उति उठबस थिएन । आठराईबाट ताप्लेजुङ सदरमुकाम जान आउन त्यसबेला तम्बरखोलामा गतिलो पुलसम्म थिएन ।

अहिले थाहा पाउँदा तेह्रथूम फेदाप थूमले आठराई थूमलाई आफूबाट टुक्र्याएर अलग पारिदिएको रहेछ । पंचायत व्यवस्थालाई टिकाउने निहुँमा फेदापका निहित स्वार्थी राजतीतिक खेलाडीले सचेत र सबल आठराईलाई टुक्र्याएर कमजोर तुल्याइदिएका रहेछन् । कोयाखोला, फेदाप, म्याङलुङले पंचायतकालमा आफ्नो स्वार्थसिद्ध गर्ने गतिलो अवसर पाएछन् । आफ्नो औंला काटेसरि आठराईलाई टुक्र्याएर पंचायती व्यवस्थाको बैतर्नी गरिदिएछन् । संभवतः पंचायती व्यवस्थाको दीर्घायुका खातिर वि.स. २०३२ सालमा निघुरादिन उत्तर साँघुसम्मका आठराई गाउँवस्ती ताप्लेजुङ जिल्लामा हालियो । हामी विद्यार्थीले चिठी लेख्दा जिल्ला तेह्रथूम, अंचल कोशी लेख्दै आएकामा त्यसपछि जिल्ला ताप्लेजुङ र मेची अंचल लेख्न थाल्यौँ ।

दशदेखि चालिस दशकसम्म आठराई सक्रान्ति, चुहानडाँडा शिक्षाका केन्द्र थिए । तेह्रथूम जिल्लामा रहँदा आठराई क्षेत्रले तेह्रथूम जिल्लाको राजनीतिमा निर्णायक भूमिका खेल्ने गरेको थियो । त्यही कुरा फेदाप, म्याङलुङलाई सह्य भएन । आठराईवासीको जुन एकता र बल थियो त्यो तेह्रथूमलाई मन परेन । फलस्वरुप आठ गाउँलाई जिल्ला फेरबदल गराएर आठराई सक्रान्तिको मदनमेला, वीरेन्द्र इन्टर कलेज चुहानडाँडासित आठराईवासीको नाता खल्बल्याइदियो । आठराई सक्रान्ति, चुहानडाँडा, म्याङलुङसित उत्तरी गाउँवस्तीका लगाव र उठबस टुट्न गयो । अब यसलाई मीठो भनौं कि तीतो, सम्झनालाई सिरानीमुनि घुसारेर बेलाबेला चर्चा गर्नुबाहेक अरु बाँकी रहेन । आठराई विभाजनले तत्कालीन त्यस क्षेत्रको आर्थिक भन्दा पनि शैक्षिक, सामाजिक, राजनीतिक चेतना, एकतामा चोट पुग्यो । पंचायती राजनीतिमा जमेका तेम्बे साँघुका चन्द्रजित वनेम, चाँगेका लक्ष्मीप्रसाद आङबुहाङ र हाङपाङका कृष्णराज प्रसाईको राजनीतक सम्भावनालाई चपाइदियो ।

त्यसपछि विच्छेदित आठराई क्षेत्र निकै लामो कालसम्म ताप्लेजुङ जिल्लाको परम्परागत राजनीतिक ढर्रामा लोलायो । ताप्लेजुङ जिल्लामा नवप्रवेशी आठराई गाउँमा त्यसपछि गतिला जनप्रतिनिधि निस्केनन् तथा त्यस क्षेत्रमा विकासका गतिविधि पनि त्यत्ति भएनन् । यद्यपि, लामो समयपछि हाल निघुरादिन, फूलबारी, चाँगे, हाङपाङ, ढुँगेसाँघु, साँघु क्षेत्रले ताप्लेजुङको राजनीतिमा आफ्नो पकड जमाउन थालेको छ । ती गाउँहरूबाट हाल सदरमुकाम ओहोरदोहोर गर्न तम्बरखोलामा पक्कीपुल र मोटरबाटो बनेका छन् । नयाँ राजनीतिक लय हाङपाङ, चाँगेले समातिसकेका छन् । सघीयतापछि ती गाउँहरू आठराई त्रिवेणी नामले अघि बढिरहेका छन् ।

आठराईको शैक्षिक तथा सामाजिक पृष्ठभूमिलाई चाँगेसित तुलना गरौं । मैले चाल पाउँदा चाँगे गाउँ उसबेला तेह्रथूम जिल्लाको एक आदर्श गाउँ पंचायत थियो । यद्यपि, उसबेला हाङपाङमा हाइस्कुल थियो भने चाँगेमा मिडिल स्कुल थियो । विद्यार्थी चाँगेमा सात कक्षा पास भएपछि एस.एल.सी. पास गर्न हाङपाङको सरस्वती माद्यमिक विद्यालय धाउनु पदथ्यो । चाँगेबाट मात्र हैन त्यसबेला अध्ययन गर्न विद्यार्थी फूलबारी, ढुङ्गेसाँघु, मैवाखोला, मेवाखोला, तम्बरखोला क्षेत्रबाट समेत हाङपाङ आउने गर्दथे । कालान्तरमा हाङपाङबाटै एस.एल.सी. पास भएका धेरै विद्यार्थीहरू शिक्षक भएर आफ्नो क्षेत्रमा फर्केर शिक्षाको ज्योति फैलाए । उनीहरूले ताप्लेजुङका कुनाकाप्चामा खुलेका विद्यालयमा शिक्षक भएर गाउँघरको शैक्षिक उन्नति गरे । उनीहरूले गाउँ वस्तीमा चलाएका प्राथमिक तहको विद्यालयलाई क्रमसः स्तरोन्नति गर्दै माध्यमिक, उच्च माद्यमिक विद्यालयसम्म बनाइसकेका छन् । उदाहरणका लागि हाङपाङमा पढेका विद्यार्थी नै शिक्षक भएर गएपछि हेर्दाहेर्दै चाँगेको छातेढुङ्गा, सोबुवा गाउँमा जस्तापाता लगाएका विद्यालय टिलिक्क झुल्के । मेवाखोला, तम्बरखोला क्षेत्रमा पनि हाङपाङबाट प्रशिक्षित युवाहरूले शिक्षाको किरण फैलाए । यसरी आठराई क्षेत्रमा सक्रान्ति, चुहानडाँडापछि हाङपाङमा खुलेको हाइस्कुलले दुर्गम् गाउँहरूमा शिक्षाको प्रकाश फैलाउन ठूलो योगदान गरेको छ ।

यही हाङपाङ गाउँको विद्यालयमा चाँगे नेसुमका बमबहादुर आङबुहाङले शिक्षकको रुपमा सेवा दिए । उनले यो पङ्तिकारको सिँगान पनि पुछिदिए । म टुकुटुकु हिड्ने अवस्थाको त्यस्तै तीन चार वर्षको सिँगाने बालक थिएँ । एकदिन दिउँसो हाल गाउँपालिका भवनको पुस्तकालय भवन बन्नअघि मैदानमा तत्कालीन हेडसर गणेशबहादुर राई र उनै बमबहादुर सर बेन्चमा क्यारेमबोर्ड खेलिरहेका थिए । म पनि सायद खेलेको हेर्न त्यही क्यारेमबोर्डको छेउमा गएर उभिएँ । त्यहाँ म उभिँदा क्यारेमबोर्ड मेरो चिउँडोसम्म पुग्दथ्यो भन्ने अनुमान गर्दछु । कारण क्यारेमबोर्डको बोरिक पाउडर गोटी जोडले हान्दा उडेको धुलो मेरो नाकैमा पर्दथ्यो । एकछिन खेल हेरेपछि मलाई जोडले हाच्छिउँ आयो र बोर्डको बोरिक पाउडर र गोटी उडाइदियो । त्यत्ति मात्र होइन बोर्डभरि थुक, सिँगान छरियो । मलाई सम्झना यत्ति मात्र छ कि उनै बमबहादुर सरले 'हैट, यसले त खत्तम पाऱ्यो हौ' भन्दै उठेर नजिकैको कालोझार टिप्न लम्किए, त्यत्ति बिम्व मात्र याद छ । सायद म बालक डरले रुँदै घरतिर लागें होला । मेरो मानसपटलमा बमबहादुर सर बेञ्चबाट उठेर झारतिर लम्केको मात्र याद छ । मेरो बालसुलभ घटनालाई सरहरूले तत्कालै क्षमादिएर आफ्नो क्यारेमबोर्ड सम्हालेर खेल चालु गरे होला । म आज उनै स्वर्गीय बमबहादुर सर र गणेशबहादुर सरलाई हार्दिकतापूर्वक सम्झना र सम्मान प्रकट गर्दछु । पछि उनै गुरुहरूले यो कलमलाई अक्षर घोट्न सिकाए फलस्वरुप यो कलम आज यहाँ आइपुगेको छ ।

त्यसबेला मेरो घरमा चियापसल थियो । मैले धेरै गुरुलाई चिया ओसारेर

लगिदिएँ, सूर्ती सल्काउनलाई अगेँनाबाट बल्दै गरेका दाउरा पनि लगिदिएँ । मैले गरेको सेवा त्यत्ति नै हो तर मैले गुरुबाट धेरै कुरा सिकें । एउटा पारिवारिक वातावरण जस्तो माहौल थियो गाउँमा । एक दिन हाङपाङको सरस्वती हाइस्कुलमा कुनै कार्यक्रमको लागि माइक जोड्न थालियो । म भुराभुरी मान्छे माइक बनाएको, तार जोडेको, माइकमा बोलेको देखेर खूब रमाइलो मान्दथें । उनै बमबहादुर सर, बेनु चुडाल सर आदि भएर काममा लाग्दा दिनभरीमा पनि माइक चालु भएन । अबेर भएकाले अपरान्हतिर बमबहादुर सर आफ्नो घर पारी नेसुम लागे । यता सरस्वती हाइस्कुल हाङपाङमा स्थानीय बेनुसर साँझपख माइक चालु गर्न सफल भए । माइक बनेको खुसीयालीमा बेनुसरले त्यही माइक नेसुमतिर फर्काएर "माइक बन्यो है बमबहादुर सर" भनेर कराउँदा हामी भुराभुरीलाई कम मजा भएन । माइकमा ठूलो आवाज आएपछि त्यसै बेग्लै मज्जा आउँथ्यो । माइक टुइँ टुइँ चुइँकिदाको आवाज सुन्नपर्दा अहिले दिक्क लाग्छ, त्यही आवाज उसबेला सुन्दा आनन्द लाग्दथ्यो । उनै बमबहादुर सर र बेनु सरले पछि मित लगाए । त्यसपछि बमबहादुर सर चाँगे स्कुलमा घरपायक सरुवा भएर गए ।

चाँगेको निम्न माद्यमिक विद्यालयमा सात कक्षासम्म पढाइ हुन्थ्यो त्सपछिको पढाइ हाङपाङमा हुने गर्दथ्यो । यता हाङपाङमा म सात कक्षाबाट आठ कक्षामा चढ्दा सरस्वती मावि हाङपाङमा कक्षाको पहिलो विद्यार्थी थिएँ । चाँगेमा उनै बमबहादुर सरका कान्छा भाइ इन्द्रबहादुर आङ्बुहाङ सात कक्षा पास हुँदा पहिलो विद्यार्थी रहेछन् । तब आठ कक्षामा चाँगेबाट धेरै विद्यार्थी सरस्वती मावि हाङपाङ पढ्न आए । मेरा सहपाठीका रुपमा उनी लगायत जयन्द्र आङ्बुहाङ, गजेन्द्र आङबुहाङ, सुवास आङ्बुहाङ, ईश्वर आङ्बुहाङ, डम्बरबहादुर आङबुहाङ, विश्वराज आङबुहाङ, जर्मन आङबुहाङ, वीरेन्द्र तामाङ, गंगाराम दाहाल, तेजप्रसाद उप्रेति, टंक निरौला, अम्बिका चुडाल, लीला चुडाल आदि सरस्वती माद्यमिक विद्यालयमा भर्ना भएका थिए । यसै गरी फूलबारी मिडिल स्कुलमा सात कक्षा पास हुँदा पहिलो विद्यार्थी युवराज पौडेल, दोस्रो विद्यार्थी अग्निप्रसाद सिटौला लगायत आठ कक्षामा भर्ना हुन सरस्वती माविमा आए । नवागन्तुक साथी पाएर एकातिर म खुशी नै थिएँ अर्कातिर उनीहरूले पढाइमा उछिन्लान् कि भन्ने चुनौती भने थपिएको थियो । दृढताकासाथ पढाइमा तल्लिन रहें । यता मेरा दोस्रो नम्बरका विद्यार्थी साथी निधिनाथ भण्डारी मलाई बेलाबेला तर्साउँथे । चाँगेबाट आउने 'फस्ट ब्वाय' ले तलाई अब जित्छ–जित्छ, किनभने उसको अंग्रेजी राम्रो छ । नभन्दै इन्द्रबहादुरको अंग्रेजी बोलाइ, लेखाइ, अक्षर राम्रो थियो । युवराज पौडेल पनि घोक्नमा पोख्त थिए । यद्यपि, मैले उनीहरूलाई पढाइमा उछिन्न दिइन र एस.एल.सी. सम्म अग्रता कायम राखें । जेहोस्, मैले त्यसबेला सबै सहपाठीको माया, सम्मान पाएँ । हाल उनीहरू देशविदेशमा छन् तर सम्झना भने मनमा ताजै छ ।

यतिञ्जेल मैले मेरा मनका सम्झना र भावना व्यक्त गरें । अब म चाँगे गाउँको

इतिहास कोट्याउन चाहन्छु । मैले किरात लिम्बू इतिहास र संस्कृति तथा साँबाको वंशावली अध्ययन गर्ने क्रममा विविध ऐतिहासिक तथा मुन्धुम पनि अध्ययन गरें । सोही आधारमा निष्कर्ष निकालें र थप जिज्ञासा र परिकल्पना जन्मिएका छन् । त्यसमध्ये सान्दर्भिक केही टिप्पणी यहाँ राख्न चाहन्छु । स्मरण रहोस्, यो कुनै आग्रह वा पूर्वाग्रहबश गरिएको टिप्पणी नभएर विशुद्ध प्राज्ञिक मूल्य र मान्यतामा आधारित भनाइ हो । जसलाई मैले पुस्तक र विभिन्न लेखमा विस्तारपूर्वक उठाइसकेको छु ।

तुङदुङ्गे मुन्धुम, चङबाङ साँबा, फयङ साँबा मुन्धुमअनुसार कोशी बराहक्षेत्र, धनकुटा, संखुवासभा अरुण, बरुण क्षेत्र सभापोखरी, गोर्जाटार, मैवाखोला, मेवाखोला, तम्बरखोला, सोबुवाखोला, चुङ्वाखोला, खुवाखोला, खड्कुँडे पुल, नुबुघाट, सिम्राघाट साँबा पुर्खाका क्रिडास्थल थिए । त्यसैले मुन्धुमअनुसार ती स्थानमा साँबा जातिको रक्तअनन्या गाँसिएको छ । यस क्षेत्रको विशाल टार गोर्जाटार मुन्धुमीस्थल मात्र नभएर भौगोलिक विशेषतयायुक्त स्थान पनि हो । यही क्षेत्र भएर धनकुटा हुँदै ताप्लेजुङ बाटो जान्छ । त्यहाँ अघि ताप्लेजुङ सदरमुकाम नजिक सुकेटारमा विमानस्थल बन्नअघि ताप्लेजुङ, तेह्रथूम, मादी संखुवासभालाई पायक पर्ने गरी गोर्जाटार विमानस्थल बन्ने अरे भनेर हामी बाल्यकालमा हल्ला सुन्दथ्यौं । तर, त्यसको भौगोलिक विशिष्ठतालाई पैरवी गर्ने जनप्रतिनिधि नभएर वा कुरा बिक्ने मानिस नभएकाले गोर्जाटारको भाग्यमा विमानस्थल परेन । उता सुकेटारमा तत्कालीन राष्ट्रिय पंचायत सदस्य विष्णु मादेनको जग्गा पर्ने भएकाले तत्कालीन नोकरशाहीले पनि शक्तिकै तावेदारी गरेको तथा जिल्ला सदरमुकामवासीलाई पनि नजिक पर्ने जस्ता कारण देखाएर सुकेटारमा विमानस्थल बनाइयो । अनि सुकेटारको भित्तो वर्षौं खनेर सानो खाले विमानस्थल बनाइयो । यदि गोर्जाटारमा विमानस्थल बनाइएको भए सम्याउने वा माटो खार्ने त्यत्रो साधन स्रोत लाग्ने थिएन ।

भौगोलिक तथा प्राकृतिक रुपमा गोर्जाटारमा सुकेटारमा जस्तो जहिलेसुकै कुहिरो नलाग्ने स्थानमा थियो । मौसम खराबी भएर सुकेटारमा प्रायः उडान रद्द भइरहन्छ । दूरीकै कुरा गर्ने हो भने खोटाङ सदरमुकामबाट एकदिनको दुरीमा लामिडाँडा विमानस्थल छ । स्थानीय इन्जिनियरको पहलमा त्यहाँ विमानस्थल बनेको रहेछ । गोर्जाटारको भाग्य त्यस्तो रहेन । अहिले सुकेटार विमानस्थल फराकिलो पार्न उति नमिल्ने, भित्तो खारे पनि खर्चिलो हुने, कुहिरो लागेर प्रायः उडान रद्द भइरहने अवस्था छ । जे भए पनि उक्त सुकेटार विमानस्थललाई ताप्लेजुङवासीको हवाइयात्राको भाग्य सुम्पन विवश छौं । चुहानडाँडामा बिमानस्थल बनाउने आठराईवासीको ६ दशकभन्दा पुरानो सपना साकार हुँदैछ । आठराईमा जन्मेका केपी ओलीको प्रधानमन्त्रीत्वकालमा आठराईमा विमानस्थल शिलान्यास भएको छ । आखिर मानिसको चाहना र आवश्यकतालाई समयले पूरा गर्दो रहेछ ।

अब म चाँगे र हाङपाङका केही लिम्बू जातिको मुन्धुमी र ऐतिहासिक विश्लेषणतिर लाग्छु । चाँगे गाउँको दक्षिणमा सोबुवा खोलाको शिर छ । त्यो क्षेत्रमा हाल पनि साँबा र श्रेङ जातिका लिम्बू बसोबास गर्दछन् । यी जातिका लिम्बू सोबुवा खोला वारिपारि चाँगे र हाङपाङमा बसोबास गर्दछन् । किरात इतिहास अनुसार ती जातिका लिम्बू मैवाखोला, मेवाखोला, तम्बरखोला क्षेत्रमा दश लिम्बुवान गठनअघि अर्थात् छैटौ शताब्दीपूर्व मेवाखोला, तम्बरखोला क्षेत्रमा बसोबास गर्दथे । त्यसबेला तम्बरखोला क्षेत्रलाई लिम्बुवानको केन्द्र मानिन्थ्यो । किरात मुन्धुम तथा इतिहासअनुसार यी किरात जाति अघि कोशी बराहक्षेत्र मार्गबाट तम्बरखोला हुँदै तम्बरखोला, मेवाखोला, मैवाखोला वा आठराई क्षेत्रमा आएको मुन्धुम र इतिहासले बताउँछ । यो क्षेत्रलाई उसबेला नून लगायत लत्ताकपडा लिन पटना, बंगाल जानभन्दा खासा, ल्हासा तिब्बत जान सहज थियो । तराई क्षेत्रमा फैलने औलो रोगका कारण हिमालय क्षेत्र नेपाल र भारतको गंगामैदानबीच आवतजावतमा धेरै व्यवधान थिए । अहिले नेपाल र भारतको पश्चिम बंगाल, विहार, उत्तरप्रदेशबीच रोटीबेटीको सम्बन्ध भएझैं मध्यकालसम्म किरात लिम्बुवान र तिब्बतबीच रोटीबेटीको सम्बन्ध थियो । त्यसबेला तिब्बतबाट नून, सुन, लत्ताकपडा मात्र आयात गरिएनन् जनस्तरमा विहेवारीको चलन ब्याप्त थियो ।

किरात इतिहासअनुसार सोबुवा शब्दले समूहको सरदार भन्ने जनाउँछ । इतिहासकार इमानसिंह चेमजोङअनुसार यो शब्द अघि किरातका एक हाँगो पूर्वज बर्मामा रहँदा प्रयोगमा थियो । किरात लिम्बू समुदायमा सबा साम्माङ मुन्धुम छ । सबा भनेको किरात लिम्बूका पुर्खा हुन् । यसैले सोबुवा, सबा शब्द किरात मुन्धुमसित गाँसिएका शब्द हुन् । साँबा चङबाङ पोङ मुन्धुमअनुसार श्रेङ साँबाका पुर्खा हुन् । हुन पनि श्रेङ, साँबा लिम्बू छैटौं शताब्दीपूर्व किरातकालीन रैथाने जाति हुन् । चङबाङ त्यसपछि उद्भव भएका उपथर हुन् । अग्ला अग्ला ठाउँमा घर बनाएर बस्ने जातिलाई चङबाङ भनिन्थ्यो । उनका दरसन्तान तथा यस्तै स्वभावका मानिसको समूह विभिन्न चङबाङ भएका हुन् । साँबा वंशावली विश्लेषणका आधारमा यी मध्येका चङबाङ, फयङ लगायतका विभिन्न साँबाको उद्भव आजभन्दा करिव ३०० देखि ५०० वर्षअघि मेवाखोला साँबामा भएको थियो ।

हामी भोट र भोटे शब्दलाई तिब्बतबोधक पराय देख्दछौं वा बुझ्दछौँ तर मुदेन, भोटको शाब्दिक अर्थ मातृभूमि अर्थात् मूलवासी हो । आदिवासीलाई भोट–बर्मेली भाषामा मुदेन, मादेन वा भोट, भोटे भनिन्छ । उनीहरूलाई तिब्बती मूलका भनेर संस्कृत नजरले मात्र हेर्न मिल्दैन । त्यसैले मादेन विभिन्न थरका लिम्बूमा पाइन्छन् । यो शब्दले आदिवासी जाति झल्काउँछ । हाङपाङ र चाँगे गाउँका सोवुवा वारिपारि मादेन थरका श्रेङको बसोबास छ । किरात लिम्बू इतिहास तथा वंशावली अध्ययनको अधारमा चाँगे सोबुवा (वारिपारि) क्षेत्रका श्रेङ, साँबा त्यस क्षेत्रका रैथाने किरात जाति हुन् भन्ने बुझिन्छ ।

चाँगे गाउँमा बसोबास गर्ने किरात लिम्बू समुदायमा बहुसंख्यक रहेका आङबुहाङ परिवारको ऐतिहासिकता हेरौं । आङबुहाङ परिवारको चाँगे र हाङपाङ आगमन बारेमा किरातकालीन इतिहास बोलेको छ । इतिहासकार इमानसिंह चेमजोङको किरातकालीन विजयपुरको इतिहास (पृष्ठ ९६–१०३) अनुसार विजयपुरका राजा कामदत्त सेन (वि.स. १८१८–१८२६) को शासनकालमा पाँचथर याङरुपका सेच्छेने सेनेहाङका दरसन्तान किरात वंशी योङहाङले त्यहाँ शासक आङ्‌बोहाङका सुब्बा मुहाङ्गेपलाई लडाइँमा पराजित गरे । उक्त लडाइँ पाँचथर याङरुप हस्तपुर गढीमा भएको थियो । लडाइँमा बाँचेका आङ्‌बोहाङ कोही थेचम्बूमा गइबसे । त्यहाँ उनीहरू मेन्याङ्‌बो थरमा उदविकास भए । यही क्रममा कोही आङ्‌बोहाङ आठराई थूमको चाँगेमा आएर बसे, इतिहासकार चेमजोङ बताउँछन् ।

लडाईमा मारिएका मुहाङगेपहाङका टुहुरा बालक लाहाङ र हाङसामको विचल्ली भयो । तिनीहरूलाई कामदत्त सेनका रानी थाङ्‌सामाले विजयपुर दरवारमा लगेर टुहुरा भदैको नाताले संरक्षण गरिन् । इतिहासकार चेमजोङअनुसरा रानीले हाङबाङबासीसित समन्वय गरी ती दुई भदै आङबुहाङलाई हाङपाङमा पुनःर्स्थापना गरिदिइन् । यसरी हाङपाङ र चाँगेमा आङबुहाङ परिवारको आगमन भएको थियो । अतः किरातकालीन विजयपुरको इतिहासअनुसार चाँगे र हाङपाङमा आङबुहाङ परिवार १९ औं शताब्दीमा पुनःर्स्थापित भएका थिए ।

चाँगेमा हाल आङबुहाङ दरसन्तानले आफ्नो पुर्खाको चाँगे वा हाङपाङ आगमन विजयपुरका पहिलो राजा विजयनारायणको पालामा भएको दावी गरेका छन् । भरपर्दा ऐतिहासिक प्रमाण फेला परेमा उक्त इतिहासलाई सच्याउन सकिन्छ । त्यसका लागि इमानसिंह चेमजोङको भनाइ काट्ने भरपर्दो र विश्वासिलो प्रमाण आवश्यक पर्दछ ।

आङबुहाङ चाँगे आएर बनाएका भौतिक संरचना अझै जीवित छन् । तिनले बनाएका पुराना संरचनामा निर्मित साल कुँदिएका हुनसक्छन् । अथवा चाँगे आइपुगेको सबैभन्दा पुरानो लिखित दस्तावेज जस्तै शिलालेख, पाटी, पौवा चौतारा वा कागजपत्र, लालमोहर आदिमा साल उल्लेख हुनसक्छन् । पाँचथर याङरुप हस्तपुरको लडाईसम्बन्धमा योङहाङ वंशावली एक गतिलो स्रोत हुनसक्दछ । उक्त युद्धपछि आङबुहाङ दाजुभाइ व्यवस्थापन गर्न विजयपुरकी रानी थाङसाङमा आठराई ओहोरदोहोर गर्दा बनेका पाटीपौवा, चौचारा, पोखरीमा निर्मित शिलापत्रमा साल भेटिन सक्छ । कुनै ठोस प्रमाण भेटिएमा आङबुङ परिवारको चाँगे वा हाङपाङ आगमन सत्रौं शताब्दीमा भएको हो वा उन्नाइसौं शताब्दीमा भएको हो खुट्याउन सकिन्छ ।

सरल भाषाामा भन्नुपर्दा चाँगे र हाङपाङमा बसोबास गर्ने आङबुहाङ परिवारका पुर्खा पाँचथर याङरुप हस्तपुर युद्धमा योङहाङद्वारा पराजित भएका

थिए । उनीहरू त्यहाँबाट विस्थापित भएपछि दरसन्तान आठराई थूममा पुनःस्थापित हुँदै किरात लिम्बू थरले स्थापित भए । संभवतः ऐतिहासिक प्रभावले पनि आङबुहाङ परिवार हाल पनि राजनीतिक तथा सामाजिक क्षेत्रमा क्रियाशील छन् ।

चाँगे गाउँमा पर्ने एक महत्वपूर्ण व्यापारिक स्थल हो, मैवा दोभान । मैवादोभानबारे धेरैले सुने जानेका छन् । यो व्यापारिक केन्द्र तथा रणनीतिक दृष्टिले महत्वपूर्ण स्थान दोभान बजार चाँगे गाउँपालिकामा पर्दछ । यहाँ नेवार जातिको बसोवास छ । यहाँका नेवारमध्ये ताल्चा भण्डेल परिवार भक्तपुरबाट आएका हुन् । ताल्चा भण्डेल वंशावली (२०७२) अनुसार भादगाउँ अर्थात् भक्तपुरको भोलाछें र याछें टोल निवासी ताल्चाभण्डेल अघि जयस्थिति मल्ल (वि.सं. १४३७ देखि १५४२ सम्म) को पालामा दरबारको भण्डार सम्हादथे । त्यसैले उनीहरूलाई ताल्चावाला भण्डारे अर्थात् ताल्चा भण्डेल कहलिए । त्यसबेलाको चलनअनुसार त्यही दरवारिया जागिरलाई उनीहरूले कालान्तरमा थर धारण गरेका छन् ।

पृथ्वीनारायण शाहको पालामा गोरखा विस्तार तथा नेपाल निर्माण आरम्भ भयो । गोरखाले काठमाडौं उपत्यका धेरैपटकको आक्रमणपछि हात पारेको थियो । मल्ल राजा शाह राजाद्वारा विस्थापित भए । मल्ल दरवारका भारदारहरूको चिल्लीबिल्ली भयो । भक्तपुरमा शाह शासन आरम्भभएपछि रैथाने नेवार र आगन्तुक गोरखालीबीच तनाव र द्वन्द्व सिर्जना भयो । फलस्वरुप सन् १७९८ (वि.स. १८५५) मा भारदारको रुपमा रहेको ताल्चाभण्डेलको एक हाँगो उपत्यका नाघेर पूर्व लाग्यो । तिनीहरू घुम्दै सुदुर पूर्वको हिमाली जिल्लामा रहेको व्यापारिक केन्द्र मानिएको मैवादोभानमा पुगेर बसे । मैवादोभानमा कालान्तरमा ताल्चा भण्डेल परिवारमा कर्मठ सुपुत्रहररूको जन्म भयो । पूर्व प्रमुख निर्वाचन आयुक्त सूर्यप्रसाद श्रेष्ठ र प्रजातान्त्रिक नेता लक्ष्मीप्रसाद श्रेष्ठको जन्मस्थल यही दोभान हो ।

हाल चाँगेमा खस, आर्य समुदायको पनि बाक्लो उपस्थिति छ । यहाँ आदिवासी र जातजाति मिलेर बसेका छन् । गाउँ, ठाउँ र समाजको विकासमा जनता बिना पूर्वाग्रह जुटेका छन् । जिल्ला, प्रदेश र राष्ट्रको उन्नतिमा यो गाउँको पनि भूमिका छ । आठराई त्रिवेणीमा पर्ने चाँगेले आज सदरमुकाम हाङपाङलगायत फूलबारी र निघुरादिनसित हातेमालो गरेको छ ।

चाँगे शब्द व्युत्पन्नबारे नबुझे लेख अधुरो रहनेछ । त्यसैले आठराई चाँगेको मौलिक इतिहास र विशेषता झल्काउने शब्दार्थको संक्षिप्त चर्चा गरौं । चाँगेलाई किरात लिम्बू भाषामा चाङ्ग्या, चाँया भनिन्छ । किरात राई र लिम्बू शब्दकोशअनुसार चायुङले चामल जनाउँछ । किरात राई शब्दकोशअनुसार चायाङ्दिवा भनेको पितृस्थल हो । किरात लिम्बूको शब्दकोशले चाँया शब्दले कपालमा पर्ने चाँया (तघेक्) समेत जनाउँछ । यसरी भाषाशास्त्रले यो चाँगे गाउँलाई धान फल्ने स्थान, पितृस्थल तथा कपालमा चाँया परेझैं त्यहाँ विभिन्न कालखण्डमा जनसमुदाय आएर/पलाएर बसेको भूमि भन्ने सङ्केत गर्दछ । चाँगे नामैले धानको

उब्जनी राम्ररी हुने गाउँ भन्ने थाहा हुन्छ ।

जेहोस्, चाँगेको अतीत र वर्तमान सोबुवाखोला र तम्बरखोलाको प्रवाहझैं गतिशील छन् । चाँगेको भूगोल हेर्दा जति सुन्दर देखिन्छ, गाउँको भविश्य पनि उत्तिकै आशालाग्दो छ । मेरो मनको आकासमा सूर्यचन्द्रझैं झुल्किरहने चाँगे गाउँलाई धेरै धेरै माया छ, श्रद्धा र शुभकामना छ ।

**सन्दर्भसामग्री**

चङबाङ साँबा, वुद्धिप्रसाद (२००९) चङबाङ साँबा वंशावली (पहिलो संस्करण) ताप्लेजुङ, नेपाल, वंशावली सङ्कलन समिति ।

चेमजोङ, इमानसिंह (१९७४) किरातकालीन विजयपुरको इतिहास (प्रथम संस्करण) काठमाडौ नेपाल, त्रिभुवन विश्वविद्यालय, किरात भाषा र साहित्य ।

चेमजोङ, इमानसिंह (२००३क) हिस्ट्री एण्ड कल्चर अफ दि किरात पिपुल (चौथो संस्करण) ललितपुर, किरात याक्थुङ चुम्लुङ ।

चेमजोङ, इमानसिंह (२००३ख) किरात इतिहास, (पाँचौँ संस्करण) ललितपुर, किरात याक्थुङ चुम्लुङ ।

सेनेहाङ चबेगु, भीमविक्रम (२००७) किरात सेनेहाङ लिम्बू वंशावली, धरान, सुनसरी, किरात थेगिम वंशावली प्रकाशन समिति ।

# १० पहाडी यात्रा

उहिले हाम्रा पालामा पहाडी जीवन शुद्ध अर्गानिक थियो । जहाँ जाँदा पनि पैदल हिड्नु पर्दथ्यो । लामो दूरी तय गर्नलाई धेरै दिन लाग्दथ्यो । बाटामा जङ्गल, खोलानाला, भीरपाखा हुन्थे । कतै दिनभरी हिड्दा पनि जङ्गल छिचोलिदैनथे । बाटामा बाघ भालु लाग्लान् भनेर डराउँदै हिड्नु पर्दथ्यो । जङ्गलमा बाटो हिड्ने यात्रीको पदचाप नसुन्दा मन त्रसित हुन्थ्यो । त्यस्ता अनकन्टार स्थानमा यात्रुले मान्छेसितै डराउनु पर्ने स्थिति पनि हुन्थ्यो । एकान्तमा लुटिने घटना यदाकदा हुने गर्दथे । तै पनि, त्यस्ताबेला मन दह्रो राख्न, वन्यजन्तु भगाउन, साथीभाइ बोलाउन हामी गीत गाउँदै हल्ला गर्दै बाटो काट्थ्यौं । सम्झन्छु, त्यो सातपत्रे जंगलमा गोठाला राज थियो । उनीहरू ठूला स्वरमा गाईवस्तुसित बोल्दथे । हामी पनि उनीहरूझैं ठूलो र लामो स्वर निकालेर गीत गाउँदै जङ्गलको बाटो काट्दथ्यौं ।

हेर्दा सुन्दर लागे पनि खोलानाला, झरना आदि हाम्रा लागि चुनौति थिए । वर्षामा भेल आएको बेला खोलाले बगाउला भन्ने डर हुन्थ्यो । भीरपाखामा चिप्लेर लडिएला भन्ने पीर हुन्थ्यो । त्यसबेला खोला तरिसकेपछि लामो स्वास तानिन्थ्यो । कान खाने खोलाको आवाजलाई एकछिन थिच्ने गरी आनन्द मान्दै गीत गाइन्थ्यो । जेहोस्, जङ्गल, खोलानाला यात्रामा चुनौतिपूर्ण भए पनि ती स्थान मनका भावना पोख्नलाई निर्वाधस्थल थिए ।

त्यहाँ जति हाँसे पनि हुन्थ्यो । जति कराए पनि हुने बाटाभरि साथीहरूसंग इर्त्रिंदै हिड्न पाइने पहाडी यात्रा रमाइलो हुन्थ्यो । एकप्रकारले लाज पनि हराएझैं लाग्दथ्यो साथीभाइसंग मिलेर त्यसरी हिड्दा । त्यसबेला एउटा बेग्लै आत्मविश्वास लिएर हिडिन्थ्यो । यत्ति हो बाटामा बाघभालुसित जम्काभेट नहोस् । साँझ पर्दै जाँदा थाकेका बेला घर सम्झना आउँथ्यो । मनमा यदाकदा बिरह चल्दा मलिन स्वरमा गीत गाउँदै मन बुझाइन्थ्यो । यसरी उसबेला यात्रा र सङ्गीत जीवनयात्रामा परिपूरक जस्ता थिए । यात्रामा प्रायः गीत गाउँदै हिडियो । चौतारामा बसेर पनि गीत गाइयो अरुका गीत पनि त्यहीँ सुनियो । थकाइ मार्दामार्दै कहिले साथीभाइसित एक दुई सर्को नाचियो पनि । कुन लोकगीत, कुन आधुनिक गीत, कुन राष्ट्रिय गीत, वा भजन उति ख्याल गरिएन । हिँड्दा जुन गीतको ताल, सुर तान्न सजिलो छ त्यही गीत गाइयो । हो, खूब गाइयो ।

अतीतका ती भूस्थल अझै जीवितै छन् । तर त्यसबेला हिड्ने हाम्रा गोरेटो बाटो भने मोटर बाटोले पुरिदिएको अवस्था छ । ऊ त्यो सोबुवा जङ्गल, गुफा पोखरी, मंगलबारे, तीनजुरे पहाड अझै ज्यूँदै छन् । अब आफू भने बुढेसकालमा प्रवेश गरियो । यसबेला जब पहाडी गीत बज्दछन् तब मुटुको धुकधुकी बढ्दछ । लोकगीत तथा लोकसङ्गीत सुन्दा आफ्नो तन्देरी अवस्थाको झझल्को आउँछ । आजकल मधेसको यो गर्मीमा पहाडको चिसो हावाको याद आएझैं उसबेलाका कठीन पहाडी यात्राका ती मीठा सम्झना पनि संगसंगै आउँछन् । लाग्छ, तराईमा छिटो छिटो तालका गीत र लयबीच सोही तालमा जीवन गुजार्दैछु । जेहास्, उसबेला जानीनजानी सङ्गीतमा लगाव भयो । त्यसले थोरबहुत गीतसङ्गीतको ज्ञान पस्यो । फलस्वरुप आज मनमा केही कुरा खेलाउन, केलाउन सहज भएको छ ।

भौगोलिक क्षेत्रको विचार गरौं । भारतको उत्तराञ्चल, जम्मुकश्मीरदेखि नेपाल हुँदै बंगाल र आसामसम्मका लोकगीत सुन्दा मलाई बेग्लै आनन्द आउँछ । मलाई कताकता त्यहाँका लोकभाकामा पहाडको सुगन्ध मिसिएको महसुस हुन्छ । पहाडी लोकगीतका तालमा साँच्चै पहाडी धुकधुकी नै सुनिन्छ । एक भारतीय टेलिभिजन च्यानलमा हालै उत्तराञ्चलका कलाकार पवनदीप राजनको चर्चा चलेको छ । उनको  खिरिलो श्वर, सुर, गीतमा मैले तिनै निक्खर पहाडी स्वाद र सुगन्ध पाएँ ।

जीवन र सङ्गीतको अन्तरसम्बन्धबारे केही चर्चा गरौं । शास्त्रीय सङ्गीत आलापले भरिएको हुन्छ । सङ्गीतबाटै भावार्थ बुझिन्छ । जनजीवनमा आलाप बिलाप गर्नुभनेको आफूलाई आपद विपद आइलाग्दा मन थाम्न नसकेर स्वस्फूर्त निस्कने आवाज हो । आलापमा आवाजसितै हाउभाउ वा हर्कत पनि गरिन्छन् । यही नक्कल गीतसङ्गीतमा गर्ने गरिन्छ । जसरी एक डाँडोबाट अर्को डाँडोमा पुगिन्छ, वा अर्को डाँडोको साथीलाई केही सन्देश दिन खोजिन्छ, तब हामी लामो लेग्रो तानेर कराउँछौं । त्यसरी आवाज निकाल्दा, कहिले चिच्याउँछौं, कहिले हपाछौं । त्यस आवाजमा मीठास हुँदैन । श्वरमा मीठास ल्याउन आवाजभित्र शुर, लय, ताल हुनुपर्दछ । शुर मिलाएर लेग्रो तान्ने काम सङ्गीतकार वा गायकले गर्ने गर्दछन् । यसरी सुमधुर वातावरण बनाउने काम सङ्गीतले गर्दछ ।

किरात लिम्बू समुदाय हिमाली पहाडी जाति हुन् । यिनीहरूमा एउटा रमाइलो सङ्गीतात्मक जीवनशैली छ । समुदायका तन्देरी हाट, मेला जाँदा, बाटो हिड्दा, भारी बोक्दा बाटामा कुनै अग्लो ठाउँमा पुगेपछि धक फुकाएर ठूलो र लामो लेग्रो तानेर कुलुलुलु पकन्दी गाउँछन् । उनीहरूले त्यसरी पकन्दी गरेको ध्वनि वारिपारी टाढासम्म सुन्न सकिन्छ । यो पकन्दी बाटामा साथीभाइलाई सूचित गराउने एउटा प्रभावकारी माध्यम हो । यो सुन्नमा रमाइलो र सङ्गीतमय हुन्छ । पकन्दीमा शुर, ताल र लय हुन्छ । पकन्दी सुनेर धान नाच्न हिंडेका तन्देरीका तरुनी रोमाञ्चित हुन्छन् । बाटोमा साथी भए पकन्दीको आवाजले हार्दिक स्वागतको सङ्केत पाउँछन् । भारी बोक्ने यात्रुहरूले अब हामी पनि त्यो डाँडोमा पुग्नुपर्दछ भन्ने अठोट गर्दछन्

। यसरी कुलुलु आवाजले सूचना दिने मात्र नभएर आपसमा हार्दिकता छर्ने, आत्मबल दिने काम पनि गर्दछ । बाटामा भेटिने अनिष्ठ बाघभालु, चोर, डाका आदिका शक्तिलाई यसले निस्तेज बनाउन सघाउँछ । समाजमा चलेका जुनसुकै चलन चल्तुमा केही न केही सामाजिक, मनोवैज्ञानिक कारण रहेका हुन्छन् ।

भाषाशास्त्रअनुसार कुनै भाषा विकासमा भौगोलिकताको पनि प्रभाव रहेको हुन्छ । भाषा र लोकसङ्गीतको सम्बन्ध अन्युन्याश्रित हुन्छ । उदाहरणको लागि, पहाडमा बस्ने मानिसको बोली अलि ठाडो सुनिन्छ । संभवत, पहाडमा हिड्दा वा काम गर्दा स्वास बढ्दछ । त्यसैले सवाल जवाफ छिटो छिटो दिनुपर्ने हुन्छ । त्यसो गर्दा अलि चर्को आवाज निस्कने भएकाले ठाडो सुनिएको हुनसक्छ । जस्तै, तिमी यो गर’ भनी विस्तारै भन्नुभन्दा ‘तँ यो गर्’ भन्न छिटो हुन्छ । थाकेको बेला, हतारका बेला तिमी, तपाई, हजुर भन्नु भन्दा तँ भन्न छरितो हुन्छ । आऊ खाऊ भन्नुभन्दा आ, खा भन्न सहज हुन्छ ।

यही जनबोलीचालीको प्रभाव त्यहाँको लोकगीतमा पनि पर्दछ । त्यसैले पहाडमा गाइने लोकगीत प्रायः छिटो छिटो तालका हुन्छन् भने नाच पनि फूर्तिला हुन्छन् । सामाजिक, सांस्कृतिक वातावरणले गीतसङ्गीतको विकास हुन्छ । पहाडे मानिसलाई पहाडी गीत मन पर्नु स्वभाविक हो । यद्यपि, पहाड, हिमाल र मदेशका गीत जुनसुकै भए तापनि ती सबै सुन्दर र जीवन्त हुन्छन् ।

पहाडी गीतमा पहाड बोल्छ, हिमाली गीतमा हिमाल झुल्छ, तराईकाे मीठो धुनले मदेशको मलिलो सुगन्ध छर्छ । लोकगीतसङ्गीतमा यो मेरो राम्रो त्यो नराम्रो भन्ने हुँदैन । जसरी मातापितालाई आफ्ना सबै सन्तानको माया बराबरी लाग्छ, उसैगरि जुनसुकै जाति वा भेकका लोकगीत उनीहरूका प्यारा हुन्छन् ।

# ११ साहित्यिक बजार

कलात्मक लेखनलाई साहित्यिक सिर्जना भन्ने चलन छ । हुन त साहित्यमा वस्तुगत लेखन मात्र हुँदैन विषयगत कल्पनाशीलता पनि प्रचुर हुन्छ । त्यसो भन्दैमा सोचेका वा लेखेका सबै साहित्य हुँदैनन् । त्यसको लागि पालना र साधना चाहिन्छ । त्यत्तिले मात्र पुग्दैन दिइने सन्देश सार्थक समेत हुनुपर्दछ ।

गुणात्मक सिर्जनाका केही विशेषता छन् । यो निरपेक्ष र मौलिक शैलीको हुन्छ । यो मेरो मान्यता हो । मेरो तात्पर्य, आग्रह वा पूर्वाग्रहबाट मुक्त वा स्वतन्त्र भएर साहित्य लेखिनुपर्दछ । कसैलाई फकाउने स्तुति वा खसाउने गाली वा नारा साहित्यका कोटीमा पर्दैनन् । त्यसैले साहित्यिक मूल्य र मान्यताद्वारा बाँधिएका कलात्मक सिर्जनामा स्वतन्त्र, स्वच्छन्द भावना खोजिन्छ । यसका केही आदर्श पनि स्थापित छन् । जमातमा आफू अलग देखिन वा चिनिनलाई कोही कोही नयाँ ढर्रा पनि गर्दछन् । तर, यसको पनि सीमा हुन्छ ।

साहित्यकार, कलाकार स्वाभिमानी हुन्छन् त्यसैले यिनीहरू कसैले कसैलाई गन्दैनन् । आफ्नो मण्डलीलाई मात्र उनीहरू पत्याउँछन् । त्यसैले साहित्य भनेको आपुङ्गी खिचडी पनि हो । बजारमा साहित्यिक माल पाउन वा चाल पाउन मुस्किल छ । म नेपाली भाषा साहित्यको एक विद्यार्थी भएकाले यसबारे चासो राखिरहन्छु । मलाई अरुतिरको उत्ति ज्ञान छैन । म मेरै गृहनगर विराटनगरबारे केही जान्दछु तथा झापा, सुनसरी, धनकुटा, काठमाडौं, चितवनको साहित्यिक झलक मैले पाएको छु । त्यही आधारमा म आफ्नो अनुभूति पोख्दैछु । मलाई थाहा छ, म कलात्मक पाराले लेख्न त्यति जान्दिन । मैले जे देखेको छु, भोगेको छु वा मलाई जे लागेको छ त्यो बोल्ने वा लेख्ने बानी छ, नरिसाउनु होला ।

बजारमा साहित्यकारहरू साधनारत हुन्छन् । राम्रा सिर्जना पनि भइरहेका छन् । हेर्दाहेर्दै नेपाली साहित्य क्षेत्र आज बजार भएको छ । साहित्यलाई व्यक्तिगत तवरबाट मात्र नपुगेर संस्थागत रुपमा पनि अघि बढाइएको छ । साहित्यिक संघसंस्थाका नाम र उद्देश्य सुन्दा जति गहकिला सुनिन्छन् त्यो अनुरुपका शैली अझै देखिदैन । उदाहरणका लागि साहित्यिक पुरस्कार वितरणमा गरिने लेनदेन, राजनीति, रणनीति र कार्यव्यापार सुन्दा सिधासाधा मान्छे छक्क परिन्छ ।

राजनीतिक बजार र साहित्यिक बजार आज एकै ठाउँमा लाग्ने गर्दछ । राजनीतिक नेता र कार्यकर्तालाई जसरी तीन तहको सरकारमा मंत्री, सांसद पदमा

ब्यवस्थापन गरिन्छ, उसैगरी पार्टीका खोक्रा सिद्धान्तका झोला बोक्ने कलमवीर कार्यकर्तालाई प्रज्ञा प्रतिष्ठानहरूमा अवसर मिल्दछ । त्यसमा कोही योग्य पनि होलान् तर ती देखाउने सुनका दाँत जस्ता थोरै मात्रामा हुन्छन् ।

साहुमहाजनले खोलेका गुठी वा प्रतिष्ठानले वर्षेनी साहित्यिक, सांगीतिक डम्फू बजाएर बजार तताउँछन् । कुन कृति वा लेखकले के आधारमा पुरस्कार पायो भनेर यथार्थ बुझेपछि ती सबै नाटक जस्ता लाग्दछन् । बौद्धिक क्षेत्रमा भ्रष्टाचार उदेकलाग्दो छ । त्रिविविमैं पिएचडीको थेसिस अर्कैले लेखिदिएको मैले देखेको थिएँ । नेपालको एक चर्चित पुरस्कार पाउने फलाना पुस्तक भित्री रूपमा तीनजनाले लेखिदिएको हो भनेर एकजना पत्रकार सामाजिक सञ्जालमा दावी गर्दछन् । साहित्यिक बजारमा एकजना समालोचक गुठीको फलाना काम गरिदिएबापत ढिस्कानाले पुरस्कार पाएको दावी गर्दथे । बजारको पर्दाभित्र र बाहिर दृश्य नाटकमाझैं फरक देखिन्छन् ।

पञ्चायतकालमा पदधारी साहित्यकार, कलाकारका जमातले राजतन्त्र र व्यवस्थाको गीत गाउँथे आज पार्टी र नेताको इसाराअनुसार चल्ने वा नाच्ने प्रवृत्ति कायम छ । चर्मचक्षुले नदेख्ने अस्वस्थ दौडमा साहित्यकार, कलाकारहरूको लामो ताँती निरन्तर दौडेको छ । किनभने कृति वा स्रष्टा मूल्याङ्कनका पारदर्शी मापदण्ड छैनन् । साहित्यिक संघसंस्था पुरस्कार सम्मान आदान प्रदान गर्नमा व्यस्त छन् । यसैबीच आत्मरतिमा स्रष्टा भुलेका छन् । त्यसैले सोझो साहित्यकारले आज साहित्यिक बजारमा शिर निहुराएर हिड्नु परेको छ ।

कुनै साहित्यिक गोष्ठीमा जानुस् वा सभा सम्मेलन जानुस् त्यहाँ मञ्चमा कार्यक्रम सुरु नहुँदै साहित्यकार, कलाकार आफू माला लगाएर गमक्क फुलेर बसेका हुन्छन् । यदि तपाई बीचमा पुग्नुभो भने बुझ्नुस् मालाले पुरिएको भलाद्मी सभापति वा प्रमुख अतिथि वा विशिष्ट व्यक्ति हुनुपर्दछ । उनीहरूका चेलाहरू दर्शकदीर्घामा अगाडीपट्टी बसेका हुन्छन् । मञ्चमा बसेका हुन् वा अगाडी बसेका साहित्यकार, कलाकारहरूको एउटै बानी हुन्छ, अधिकतम् ताली खानु ।

हो, साहित्यकार, कलाकार वाहवाहीका रमाउँछन् । उनीहरू ताली पिट्न बारम्बार दर्शकतिर आँखा जुधाउँछन् । कोही कोही त ताली पिट्न ईसारा गर्छन् वा मुखै खोल्छन् । साहित्यकार र कलाकारलाई लाग्ने भोक पनि सुन्दा अनौंठो लाग्दछ । कोही नामका भोका, कोही पुरस्कारका भोका, कोही दामका भोका, कोही पदका भोका, कोही प्रतिष्ठाका भोका हुन्छन् । म बाजी नै ठोक्छु माथिका कुनै भोक नहुने कोही कलाकार वा साहित्यकार हुँनै सक्दैन । जसको उदाहरण म आफै छु । म पनि माथिका मध्ये कुनै एक वा बढीको भोको छु । म आफू पानीमाथिको ओभाने बनेकै होइन यो मेरो आत्मसमीक्षा पनि हो ।

हामी शक्तिका पुजारी हौं । जसको शक्ति उसको भक्ति भन्ने हाम्रो मन्त्र नै छ। शक्तिलाई पूजा गर्ने राजनीति झैं कला जगत सरस्वती माताको पूजामा सीमित भए कत्ति राम्रो हुन्थ्यो । साधनामा रमेको भए हुन्थ्यो । तर, देश अनुसारका नेता

भने जस्तै समाज अनुसारका साहित्यकार र कलाकार छन् । उनीहरू बिहान पहिले मन्दिर जान्छन् त्यसपछि बाटामा कुनै राजनीतिक नेतालाई गणेश परिक्रमा गरेर आश्वासनरुपी टीका थापेर आफूलाई धन्य सम्झन्छन् ।

आजको साहित्यिक बजारमा भीडभाड छ । मानिस चिन्न एककिसिमले सजिलो र गाह्रो पनि छ । गतिला साहित्यिक सिर्जना वा साहित्यिक साधना छाडेर साहित्यकार, कलाकार कोही राजनीतिक, व्यापारिक दलानमा चाहार्छन् । त्यहाँबाट पाइने आशिर्वादले मुख मिठ्याउँछन् । आफ्नो क्षेत्र छ साहित्य, धक्कु छ राजनीतिक दल वा सिद्धान्तको । हुन पनि दल सत्तामा पुगेपछि आफ्नो पार्टीले उनीहरूलाई कार्यकता ठानेर साहित्यकारको बिल्ला, पद, पुरस्कार, अवसर मिलाइदिन्छ । त्यसैले साहित्यिक संघसंस्था आज राजनीतिक दलका भातृ वा भगिनीसंस्था जस्ता लाग्छन् ।

आज लेखक बन्नलाई ठूलो मान्छे भए पुग्छ । उसको लागि आत्मवृत्तान्त लेखिदिने कलमवीर बजारमा प्रसस्त पाइन्छन् । बजारमा जताततै देखिने नेता, प्रशासक, ब्यापारीको फोटासहितका आकर्षक पुस्तक के तिनले आफैले लेखे होलान् त ! होइनन् । ती सबै लेखिदिने हाम्रै साहित्यिक बजारका ब्यावसायिक कलमजीवी हुन् । तिनीहरू आकर्षक पैसा लिएर उनीहरूको कुरा टिपोट गरेर पुस्तक लेखिदिन्छन् । धनवान व्यक्तिको कुनै डायरी वा अन्तरवार्ता गरी टिपोटका आधारमा उनीहरूले पारिश्रामिक पाएपछि आकर्षक पुस्तक छपाइदिन सक्छन् । अब पाठकले कुनै पुस्तक कसले किन लेख्यो भनेर सोच्ने बेला आएको छ । कृति प्रायोजित त होइन केलाउने दिन आएको छ । माथि भनेझैं केवल नाम, चर्चा, पुरस्कारकै लागि लेखिएका हुन् कि ती साँच्चै सिर्जना वा साधनाका उपज हुन् नियाल्ने बेला आएको छ । स्रष्टाले स्वस्फूर्त रुपमा आएका भावना र विषयवस्तुलाई कलात्मक सम्प्रेषण नै साहित्य हो भनिन्छ तर आज साहित्यिक बजारको माहौल अर्कै छ । को असली लेखक हो को होइन छुटयाउन बडो गाह्रो भएको छ । मिहिन दृष्टिले हेर्दा पर्दा पछाडीको लेखक चिन्न अब गाह्रो छैन । यद्यपि, ब्यावसायिक लेखन र साहित्यिक सिर्जना आज मिसिएका छन् । त्यसैले असली साधक र कृति बजारमा पाउन मुस्किल भएको छ ।

अब हामी विराटनगरको साहित्यिक वातावरण नियालौं । हिजो विराटनगरमा अग्रज साहित्यकारहरूले साहित्यको साझा चौतारी वाणी प्रकाशन नामक सहकारी संस्था खोलेका थिए । हिजो जस्तो लाग्छ संस्था आजै इतिहास भैदियो । जे भए पनि यसका संस्थापक साहित्यकारहरूलाई नमन गर्नुपर्दछ । किनभने वाणी प्रकाशनले सबैखाले साहित्यकारहरूलाई एकठाउँ भेला गराएर साहित्यको प्रबर्द्धन गरेको थियो । कालान्तरमा यो संस्था आर्थिक अवस्था बिग्रेर क्रमस: विलयको अवस्थामा पुग्यो । अरु सहकारी संस्था दिन दुई गुना रात चौगुना फलेका फुलेका छन् तर वाणी प्रकाशन सहकारी किन ओइलायो, चित्त बुझ्दैन । के साहित्यकार त्यति बेइमान थिए कि सहकारीबाट लिएको पैसा नतिरेर संस्था नै

डुबाइदिए ! संस्थाको लेखापरीक्षण गरेर विवरण सार्वजनिक गर्नुपर्‍यो भनेर यो पङ्तिकारले वाणी प्रकाशनमा एकपटक बोलेको थियो । अचम्म, त्यस्तो वचन बोलेकाले होला यो लेखक विराटनगरका साहित्यिक खेलाडीका नजरमा कसिङ्गर बन्नपुग्यो । त्यसरी बोलेको केही वर्षमा नभन्दै वाणी प्रकाशन बन्द भयो । कसरी डुब्यो भनेर कोही किन बोल्दैनन्? वाणी प्रकाशन सहकारी संस्थाका तत्कालीन पदाधिकारीहरूको केही जिम्मेवारी छैन? न कुनै भेला, न कुनै जानकारी, कुनै व्यक्तिको पसल झैं ताला लगाएर वाणी प्रकाशन सहकारी सदाका लागि बन्द भयो । सबैजना तैं चुप मैं चुप भएकामा म अचम्ममा परेको छु ।

वाणी प्रकाशनको विसर्जनपछि विराटनगरमा एकाएक नयाँ साहित्यिक संस्थाहरू चम्किए । थरिथरिका साहित्यिक संस्थाहरू भटाभट खुले । यो कलमलाई भने वाणी प्रकाशन खट्किरह्यो । सबैजना भेला हुँदा कोही पनि साहित्यकार वाणीको 'व' सम्म उच्चारण गर्दैनन् । कुरा कोट्याउँदा पनि किन हो बोल्न चाहँदैनन् । वाणी प्रकाशनको कक्षमा भेला भएर कविता सुनाउने, कृती छपाउने साहित्यकार साथीहरू त्यसरी चुप लागेको देखेर म अचम्मित र दुःखित भएँ ।

सहकारीको एक सदस्य भएका नाताले केही चिन्ता गर्दछु । साहित्यप्रेमी भएकाले वाणी प्रकाशनसित मेरो भावनात्मक नाता छ । सेयर सदस्य पनि भएकाले संस्थासित कानूनी सम्बन्ध छ । यही संस्थाबाट मैले आफ्नै खर्चमा भए पनि पुस्तक प्रकाशित गरें । कृति छपाउँदा मैले पनि संस्थाको नाम उपयोग गरें । संस्थाले आयोजना गरेका साहित्यिक गोष्ठी र भेलामा उपस्थित भएर कविता सुनाएँ । फलस्वरुप मैले आफूलाई साहित्यिक क्षेत्रमा चिनाउने अवसर पाएँ । यसरी वाणी प्रकाशन संस्थाले मलाई पुर्‍याएको योगदानलाई म कहिल्यै भुल्न सक्दिन । विराटनगरका साहित्यकारहरू सचेत, जागरुक छन् जस्तो मलाई लाग्दथ्यो । मैले विराटनगरमैं भोगेको एउटा घटनापछि भने हामी साहित्यकार कलाकार कस्ता रहेछौं भन्ने छर्लङ्ग भयो ।

विराटनगरका साहित्यकारहरूसित निकै लामो उठबस भइसकेको थियो । उनीहरूको मनोभाव बुझ्ने थोरबहुत मौका पाएको थिएँ तर त्यो सतही रहेछ । यसैबीचमा साहित्यकार, कलाकारसित भएका भेटघाटले उनीहरूको जानकारी अध्यावधिक भयो । देशमा आएको राजनीतिक परिवर्तनको सन्दर्भमा सबै नयाँपन खोजिरहेका जस्ता देखिन्थे । उनीहरू संगठन बनाउन वा संस्था खोल्न लालायित थिए । यही क्रममा एकदिन म होहोरेमा लागेर एउटा संस्थाको अध्यक्ष बन्नपुगें ।

मलाई चाँडै थाहा भयो कि म त कुनै स्वार्थ समूहको गोटी पो बनेको रहेछु । हामी साहित्यकारहरू संगठित भएर केही सिर्जनात्मक काम पो गरिएला भन्ने सोंच थियो । अन्तरक्रियाका क्रममा मलाई थाहा भयो कि मैले सोचे जस्तो विशुद्ध साहित्यिक सिर्जना प्राज्ञिक विकासका अवधारणा मात्र त्यहाँ थिएनन् । साहित्यिक प्रबर्द्धन जस्ता उद्देश्य देखाउने दाँत जस्ता थिए । चपाउने दाँत चाहीं के थिए भने

सरकारी निकाय, गैह्रसरकारी संस्था चाहार्ने र आर्थिक साधन स्रोत जुटाउने । त्यत्ति मात्र भए त हुन्थ्यो नि, कतै नगरपालिकाको सरकारी ओइलानी जग्गा कसैले ओगटेको चाल पाएमा त्यसलाई हत्याउन पहल गर्ने र आफ्नो साहित्यिक संस्थाका नाममा पार्ने काममा अघि सारियो । मैले त्यसको विरोध गरें  तापनि मलाई अध्यक्षको नाताले निरन्तर दवाव दिइयो ।

उता कलाकार समूह पनि स्थानीय तहमा जनप्रतिनिधि नभएको मौका छोपेर विराटनगरको सभागृह जिम्मा लिन चाहन्थे । कलाकारको यस्तो मागलाई साथ दिन मलाई पनि आग्रह गरियो । मलाई नगरको साझा मञ्च कुनै कलाकार समूहलाई जिम्मा दिने काम उचित लागेन । अर्कातिर आफ्नै संस्थाका एक जना साहित्यकार चर्को स्वरमा के माग राख्दैथे भने हामी साहित्यकारले पनि सरकारी तवरबाट पेन्सन पाउने व्यवस्था हुनुपर्छ । त्यसका लागि हामीले सरकारलाई दवाव दिनुपर्छ । म बडो अप्ठेरोमा परें । विराटनगरका साहित्यकार तथा कलाकार साथीहरूका माग, मनसाय, नियत बुझेपछि म एकप्रकार छाँगाबाट खसेजस्तो भयो । समाजलाई आँखा देखाउने भनिएका साहित्यकार कलाकारहरूको मनोभाव, आचरण र निहीत लक्ष्य बुझ्न मलाई अब विराटनरमा अरु ठक्करको आवश्यकता परेन ।

मलाई विराटनगरले केही महिनाअघि एक साहित्यिक संस्थाका अध्यक्ष बनाइको थियो तर त्यसको अभिप्राय भनिएजस्तो नभएर निहीत स्वार्थकेन्द्रीत पो रहेछ । मैले पदीय आकर्षणमा लोभिएर अध्यक्ष पद स्वीकारेको थिइन । सेवानिवृत्त जीवनमा साँच्चै सिर्जनात्मक काम गरौं भनेर नै लागेको थिएँ । केही महिनामा जब मैले साहित्यकार, कलाकारहरूको असलियत बुझें, तब मैले संस्थाको नेतृत्व गर्न अनुचित ठानें । मैले तत्काल उक्त संस्थाबाट राजीनामा दिएँ र स्वतन्त्र भएर बसें ।

आजकल मलाई धेरैले सोध्छन्, किन हो साहित्यिक गोष्ठीहरूमा देखिनुहुन्न नि! मेरो छोटो जवाफ – म अस्वस्थ छु घरैमा आराम गर्दैछु । निकै वर्षमा पनि मलाई नदेख्दा कोही कोही सोध्छन् किन हो भेटघाट हुन छाड्यो नि! उनीहरूलाई मेरो जवाफ हुन्छ– आजकल घरैमा बसेर लेखपढ गर्छु, अध्ययनमा लागेको छु आदि । अलि मन मिल्ने साथीलाई मनको डाम सुम्सुम्याउँदै भन्दिन्छु, अब म अघाएँ है ।

यी मेरा जवाफलाई म आफै बेलाबेला केलाउँछु । यी जवाफ अर्धसत्य हुन्, पूर्ण होइनन् । मेरो अन्तरात्मा भन्छ, साहित्य भनेको निस्वार्थ सेवा वा गतिविधि हो । जब त्यहाँ त्यो छैन भने किन चाहार्नु?  भनिन्छ, साहित्यले जीवन र जगत देखाउँछ । हो, मैले सम्पूर्ण नदेखे पनि केही दृश्य देखें ।

साहित्यिक बजार मैले सोचेको जस्तो रहेनछ । हाम्रो साहित्यिक बजार मूल्य र मान्यतायुक्त विशुद्ध प्राज्ञिक क्षेत्र होइन रहेछ । साहित्यिक बजार कतै भड्किएको रहेछ । त्यहाँ सिर्जनाका देखाउने दाँत भन्दा स्वार्थैस्वार्थका चपाउने दाँत धेरै बलिया रहेछन् । त्यसैले होला आजकल मेरो मन तथाकथित् साहित्यिक

माहौलसित तर्सिएको छ, तर्किएको छ । अस्वस्थ प्रतिस्पर्धासित यो मन आफै विरक्तिएको छ । मलाई नै थाहा छैन अब मेरो मन कहिले बजार फर्केला ।

# १२ सरकारको मुहार

नेपालमा संघीयता लागु भएपछि २०७४ सालमा हामीले गाउँ गाउँमा स्थानीय सरकार पायौं । हिजो गाउँपालिकामा सिफारिस गर्दा लाग्ने दस्तुर रु १० हाल रु ५० र जन्म/मृत्यु दर्ता कर रु १०० बाट ५०० बृद्धि गरिएको छ । यो कर विकास गर्ने नाउमा जनप्रतिनिधिलाई तलव भत्ता व्यवस्था गर्नका लागि हो । यसरी सघीयतामा जनप्रतिनिधिले हामी जनतालाई आफूखुशी कर थोपरेर शासन गर्न थालेका छन् ।

कतिपय गाउँमा जनताले केही मात्रामा भए पनि राहत पाएका छन् । गाउँघरमा योजनावद्ध नभए तापनि देखिने खालका गतिविधि आरम्भ भएका छन् । सानातिना योजना बनाउन र कार्यक्रम संचालन गर्न अब स्थानीय सरकारले साधन स्रोत पाएको छ । जेहोस्, स्थानीय सरकारमाथि जनताको अपेक्षा धेरै छ ।

हेर्दाहेर्दै गाउँपालिका, नगरपालिकामा आज सिंहदरवार पसेको छ । परिवर्तनसितै हिजो सिंहदरवार गन्हाउने विकृति आज स्थानीय सरकारभित्र पसेको छ । जनप्रतिनिधि ठेकेदारसित मिलेका छन् । ठेकेदारको योजनामा गाउँ गाउँमा बिना अध्ययन डोजर कुदाउने लहर चलेको छ । फलस्वरुप जनताले विकासको स्वादभन्दा बढी प्राकृतिक विपत्तिको त्रास झेल्नुपरेको छ । पालिकाहरूले जनतालाई करको भार यति थोपरेका छन् कि त्यो तिर्न जनतालाई धौ–धौ परेको छ । जनताबाट उठेको कर गाउँ वा नगरकै लागि त भनिन्छ तर बजेटको सही ढङ्गले प्रयोग भएको छैन । त्यसैले आज स्थानीय तहमाथि जनताको गुनासो बढेको छ ।

जनताको करबाट उठेको राजश्वलाई जनप्रतिनिधिले दुरुपयोग गरिरहेका समाचारले पत्रपत्रिका भरिएका हुन्छन् । महालेखा परीक्षकले निकाल्ने वार्षिक प्रतिवेदनमा गम्भीर आर्थिक अनियमितता बाहिर आएका छन् । सन्चारमाध्यमले अब स्थानीय तह भ्रष्टाचारको नयाँ अखडाको रुपमा उदाएको तथ्य उजागर गरेको छ । हिजो केन्द्र, जिल्लामा भएका अनियमितता पत्रपत्रिकामा हुन्थे त्यो स्थान अब स्थानीय तहको आर्थिक अनियमिताका परिघटनाहरूले लिएको छ । स्थानीय तहमा हुने भ्रष्टाचार आँखा अगाडि देखिन थालेका छन् । यही कुरा आज जनतालाई ननिको लागेको छ । यसलाई उजागर गरेर न्यूनिकरण गर्नलाई पाठकलाई जागरूक बनाउनु यो लेखको उद्देश्य हो । समाचारमूलक पत्रपत्रिकाका केही समाचार अंशलाई यहाँ दृष्टान्तस्वरुप राख्दैछु ।

"गाउँपालिकाको लाखौं रकम बोकेर जनप्रतिनिधिहरू भ्रमणमा" थाहाखबर अनलाईनको शिर्षक नै आर्थिक भ्रष्टाचारबोधक छ (रावल) । पत्रकार रावलद्वारा सम्प्रेशित मंगलवार ६ गते २०७४ को अङ्कमा प्रकाशित कालिकोटको उक्त समाचारले जनप्रतिनिधिको कार्यशैली उजागर गरिदिएको छ । पाठक र जनता जनप्रतिनिधिका व्यवहारले अचम्ममा परेका छन् । सबैलाई थाहा छ, कालिकोट एक दुर्गम गाउँ हो । यहाँ अब विकासको सम्भावना पुगेको छ । समाचारमा कालिकोट पालिकाका प्रमुख, उपप्रमुख, अध्यक्ष, उपाध्यक्षसहितको एक जम्बो टोली दैलेख, नेपालगंज, पाल्पा, लुम्बिनी र इलामको भ्रमणमा निस्केको बताइएको छ ।

समाचार विवरणमा गुप्तेश्वर महादेव प्रवेशद्वारमा खिचिएको जनप्रतिनिधिहरूको सामुहिक फोटो पनि प्रकाशित छ । समाचारमा पत्रकारले परिघटनासम्बन्धित स्थानीयवासीको गुनासो पनि उल्लेख गरेका छन् । पालिकामा बसेर जनताको सेवा गर्नुको साटो त्यत्ति ठूलो समूहमा जनप्रतिनिधि गाउँ वा सेवाकेन्द्र छाडेर जानु लापरवाही हो ।

हुन पनि हो, भ्रमणमा जानैपर्ने भएमा कामलाई बाधा नपार्ने गरी एकदुई जना जान सकिन्थ्यो । यो यात्रा शैक्षिक भ्रमणको रुपमा बताइएता पनि फोटोहरूले तीर्थयात्राको झलक दिएको छ । पढ्दै दिक्कलाग्दो चर्तिकला रहेछ, जनसेवक जनप्रतिनिधिहरूको । जनप्रतिनिधिहरू कतिसम्म गैरजिम्मेवार हुँदा रहेछन् यो एउटा नमूना हो । यसमा गरिएको सरकारी स्रोतसाधनको दुरुपयोगबारे पढ्दा जोकोही करदाताको मन कुडिन्छ ।

नगरपालिकाहरूमा यसअघि यस्ताखाले शैक्षिक भ्रमण गरिन्थे र ती विवादित हुन्थे । किनभने ती उपलब्धिविहिन हुन्थे । ज्ञानेन्द्र शाहको शासनकालमा नगरपालिकामा जनप्रतिनिधि नभएको बेलामा आर्थिक स्रोत साधन खटनपटनमा डाडुपुन्यु आफ्नो हातमा परेका बेला कर्मचारीहरू टोली बनाएर विदेश भ्रमण गर्दथे । त्यसबेला साधन स्रोतको चरम दुरुपयोग भएको जनगुनासो सुनिन्थ्यो । शाही शासनकालमा जनता निरीह थिए । त्यसबेला जनताले बोल्न लेख्न सकेनन् । तर, आब लोकतान्त्रिक संघीय सरकार आएको बेलामा पनि क्रम नरोकिएकोमा जनता चिन्तित बनेका छन् ।

२०७८ साल मंसिरमा कान्तिपुर रेडियोमा प्रसारित एक कार्यक्रममा प्रसारित जनआवाजलाई सुनौँ । उक्त कार्यक्रममा स्थानीय सरकारको कार्यशैली तथा जनप्रतिनिधिको जीवनशैलीमाथि असन्तुष्टि व्यक्त गरियो । धेरै श्रोताले हाम्रा जनप्रतिनिधि विलासी बनेको आरोप लगाएका छन् । जनप्रतिनिधहरू काम गर्नु कता हो कता, कुनै रिसोर्टमा बसेर मासुको प्लेट र बियरले घाँटी भिजाउँदै गरेको तस्वीर सामाजिक सञ्जालमा सगर्व पोष्ट गर्ने गर्दछन्, जसमा जनताको नकारात्मक प्रतिक्रिया थियो । स्रोताको भनाइअनुसार जनप्रतिनिधि बिलासी गाडीका भोगी छन् । यिनीहरूले नयाँ महङ्गा गाडी किनेका किन्यै छन् । ठेकेदारसंग मिलेर चाहिने

नचाहिने ठाउँमा डोजर चलाएर मोटरबाटो खनेका खन्यै छन् । योजना कसरी बन्यो कसरी स्वीकृत भयो जनतालाई थाहा छैन । आफूखुशी बाटो खन्दा पहिले सुरक्षित मानिएका गाउँघरमा अहिले झरी पर्दा बाढीपहिरोको प्रकोप भएको छ ।

महानगरपालिकाहरूमा हालत झन बेहाल छ । जनताको स्वास्थ्य सेवा, शिक्षा जस्ता सेवामूलक क्षेत्रमा खर्च न्यून मात्रामा भएका छन् । केही मात्रामा भएका खर्च पनि अनियमित ठहरिएका महालेखा परीक्षकको प्रतिवेदनले औंल्याएको छ । महानगरपालिकाका खर्च पारदर्शी नभएकामा जनताले विरोध गर्ने गरेका छन् । केन्द्रीय, प्रादेशिक र स्थानीय तहको विकासक्रम योजनावद्ध ढङ्गले भएका छैनन् । जनताको आवश्यकता भन्दा पनि कार्यकर्ताका मागका आधारमा योजना बन्ने गरेका छन् । विकासमा भोटको राजनीति भएको छ । विकासे योजना तर्जुमामा राजनीतिक पूर्वाग्रह साँध्ने वा पक्षपात गर्ने काम प्रसस्त मात्रामा भएका छन् । कार्यकर्ताका घरअघि मात्र बाटो पिच गरिएको समाचारपत्रको तस्वीरले जनप्रतिनिधिको दरिद्र शैली झल्कउँथ्यो । पदाधिकारीको कार्यशैली अवैज्ञानिक छ । डोजर संस्कृतिको विकास भएको छ । यसरी जनताको रगत पसिनाको करबाट उठेको बजेट दुरुपयोग भएकोमा चिन्ता बढेको छ ।

प्रदेश न. १ अर्थात् पूर्वाञ्चल विकास क्षेत्रमा हामीले संघीयतापछि विकासको ढोका खुल्ने आशा राखेका थियौं । नभन्दै हामीले जोसिला युवा नेता शेरधन राईलाई मुख्यमंत्री पायौं । उनको कार्यकालमा प्रदेशको नाम र राजधानी टुङ्गो लाग्नेमा हामी ढुक्क थियौं । राजधानी टुङ्गो लागे पनि हामीले प्रदेशको नाम पाएनौं । यो प्रदेशको नाम हालसम्म प्रदेश नम्बर एकमै सीमित छ ।

जनप्रतिनिधिको विलासी जीवनशैलीको एउटा राम्रो नमूना प्रदेश न. १ का मुख्यमंत्रीले आफ्नो कार्यकालमा प्रस्तुत गरे । मुख्यमंत्री राईको रोमाञ्चक वैयक्तिक गतिविधिले रेकर्ड नै राखिदिएको छ । उनी नेपाल कम्युनिष्ट पार्टीका नेता हुन् । हामीलाई उनी सादा जीवन उच्च विचारका होलान् भन्ने आशा थियो । तर उनले मुख्यमंत्रीको सरकारी गाडी हुँदाहुँदै प्रचलित मापदण्ड विपरित दुईअढाई करोड भन्दा बढी पर्ने विलासी गाडी आफ्नालागि खरिद गरे (भट्टराई; शाह) । उनको व्यक्तिगत चरित्रमाथि पनि पत्रपत्रिकामा सवाल उठ्यो । एकजना युवतीलाई बेहाल बनाएपछि पीडित युवतिले अदालतमा गएर न्याय मागे (मुन्धुमस्टार) । यो घटना सेलाउन नपाउँदै एकजना सेर्पा सुन्दरीसित विवाह गरेको तस्वीर हामीले समाचारपत्रमा देख्यौं । उनी हेलिकप्टर चढेर ससुराली गएको तस्वीर सन्चारमाध्ययमा भाइरल बन्यो ।

यस्ता रोमाञ्चक गतिविधियुक्त समाचारले मुख्यमंत्री राईको कार्यकाल बित्यो । उनको कार्यकालमा कुनै सम्झनयोग्य कर्म भन्दा विर्सनयोग्य कुकर्म धेरै भए । उनी आफू सर्वहारापोषक पार्टीको एक नेता नभएर एक शोषक पार्टीको नेता भएर प्रस्तुत भए । एक जिम्मेवार मुख्यमंत्रीको त्यस्ता रोमाञ्चकारी समाचार पढ्दा लाग्दथ्यो हामी कुनै फिल्मी नायकलाई पछ्याइरहेछौं । जनताका सुविधाखातिर

दिनरात खट्नुपर्ने जनप्रतिनिधिका रसलिलायुक्त विम्बले कताकता प्रदेश सरकारको काम छैन कि क्या हो भन्ने आभास दियो । जेहोस्, एक नम्बर प्रदेशका पहिलो मुख्यमंत्रीको क्रियाकलाप उनको पार्टीको नाम र पद अनुरुप जँचेनन् । कम्युनिष्ट पार्टीका नेताबाट गरिएका त्यस्ता फिल्मी जीवनशैलीले जग त हँसायो तर जनताका मन भने सारै दुखायो ।

आज राष्ट्रपति र प्रधानमंत्रीका नाममा विभिन्न परियोजना देशभर संचालित छन् । ती कार्यक्रमका नतिजा देख्न पाइएको छैन । क्षणिक लाभ र स्वार्थका भरमा परियोजना चलेका छन् । देशमा कानून बनाउने सांसदलाई विकास योजना चलाउन वर्षेनी ठूलो धनराशी दिने ब्यवस्था संसद आफै गरेर साधनको दुरुपयोग र भ्रष्टाचार गरेका छन् । जननिर्वाचित प्रतिनिधिले नै प्रजातान्त्रिक सिद्धान्तको मर्मको धज्जी उडाएका छन् । लोकप्रिय सरकारी कार्यक्रमका नाममा पार्टी कार्यकर्ता र समर्थकलाई राहत दिने, भोट तान्ने तर देशको ढुकुटी रित्याउने काम भएका छन् । संविधानमा समाजवाद भनिए तापनि त्यस्ता कुनै कार्यक्रम ब्यवहारमा आएनन् । स्वास्थ्य र शिक्षालाई ब्यापारीको हातमा दिइएको छ । सरकारी क्षेत्रमा पार्टीका नेताका नाममा प्रतिष्ठान, अस्पताल खोलेर राज्यको स्रोतसाधनमा कार्यकर्ता र पार्टी ब्यवस्थापन गरिएका छन् । यिनीहरूले समग्र राष्ट्रिय लक्ष्य भन्दा बढी दलीय र व्यक्तिगत स्वार्थलाई बोकेका छन् ।

सरकारी कार्यक्रमले जनातलाई रोजगारी दिने कुनै दूरगामी दृष्टि, योजना र कार्यक्रम नै छैन (लोहनी; घिमिरे) । किनभने सरकार समाजवादी सिद्धान्तमा चलेकै छैन । जनतालाई रोजगार दिने नाममा केही महिना सडक सफा गर्न बजेछ छुट्याएर त्यहाँ पनि आफ्ना कार्यकर्ता खटाएर साधनस्रोतको व्यापक दुरुपयोग गरिएको छ । जनताले यसको विरोध गरेका छन् । जनप्रतिनिधि आज पार्टी प्रतिनिधि भएका छन् । पार्टीको असली प्रतिनिधि भए त ठिकै हुन्थ्यो ती आफ्नै स्वाार्थ वा स्वार्थ मिल्ने समूहका प्रतिनिधि भएका छन् । विभिन्न तहका सरकारहरू आफ्ना पक्षका गैरसरकारी संस्था, उपभोक्ता समितिलाई मात्र योजना, बजेट दिएर पोस्ने काममा लिप्त भएका छन् । सरकारी क्षेत्रमा, सरकारले अनुदान दिएका क्षेत्रमा जतातते राम्रो मान्छे भन्दा आफ्नो मान्छे खोजेर राख्ने होडबाजी चलेको छ । सबै सरकार भ्रष्टाचारका कुनै न कुनै काण्डमा मुछिएका छन् । तर, इतिहासले त्यसको लेखाजोखा गर्नेछ ।

संघीयता आएपछि भागबण्डा संस्कारको विकास भएको छ (लोहनी) । माथिदेखि तलैसम्म नेता र कार्यकर्ता 'काले काले मिलेर खाउँ भाले' भजन गाउँछन् । चुनावलाई खर्चिलो र भड्किलो बनाइदिएका छन् । चुनाव जितेपछि भएको खर्चको शोधभर्ना गर्नलाई सत्ता वा शक्ति पाएपछि पार्टीका नाममा रकम अकूत मात्रामा जम्मा गर्दछन् । नेपालका राणा, थापा वा शासकका दरसन्तान, नवढनाढ्यको विदेशमा प्रसस्त लगानी छ । उनीहरूले विदेशी बैंकमा पैसा थुपारेका छन् । नेपालको राजनीति त्यस्ता राष्ट्रघाती कुलक्ष्य हासिल गर्ने स्वार्थी

समूहको एउटा गतिलो भऱ्याङ भएको छ । त्यसैले राजनीतिक नेता, कार्यकर्ताले राजनीतिलाई अकुत सम्पत्ति कमाउने पेशा बनाएका छन् । ठिङ्ग उभिन सकुञ्जेल वा कुर्सीमा बस्न सकुञ्जेल कुनै न कुनै पद वा सत्तामा बसेका छन् । गणतन्त्र आएपछि स्वीजरलैण्डमा पैसा जम्मा गर्ने नेपालीको संख्या वर्षेनी बढेको तथ्याङ्क सार्वजनिक भएका छन् । त्यसमा राजनीतिक व्यक्ति र व्यापारिक घरानाकाका मानिस बढी छन् । देशको राजनीतिक गतिविधि यस्तै कालाधनबाट प्रभावित भएको छ । त्यस्ता अपारदर्शी स्वार्थी तत्वबाट आज देश र जनताका स्वार्थ जोगाउने चुनौति थपिएको छ । जनता यस्तै कुलङ्गार नेताको नौटङ्की हेर्न बाध्य छन् ।

एकातिर प्रदेश सरकार संघीय सरकारले अधिकार पूरा दिएन भनेर कराइरहेछन् । अर्कातिर यिनै प्रदेश सरकारले काठमाडौंमा सम्पर्क कार्यालय खोलेर साधनस्रोतको दुरुपयोग गरेका छन् । संघीयतामा नसोचिएका अरु पनि थुप्रै कुकर्म प्रदेश सरकारहरूले गरेका छन् (लोहनी; घिमिरे) । महङ्गो घर काठमाडौंमा भाडामा लिएर सम्पर्क कार्यालय खोल्ने र आफ्ना पार्टीका आसेपासेलाई जागिर खुवाउने मात्र नभएर मंत्रालयहरूमा सल्लाहकार राख्ने काममा प्रदेश सरकार नाङ्गो रुपमा नाचेको छ । मापदण्ड र आर्थिक नियम विपरित महँङ्गा गाडी खरीद गरिएका छन् । संविधान, कानूनमै नभएका काम गर्ने प्रदेश न. १ र ३ का सरकार मात्र नभएर सबै प्रदेश सरकारले भ्रष्टाचारमा रेकर्ड राखेका छन् । सरकार बनाउने र ढाल्ने काममा बाग्मती र कर्णाली प्रदेशले राष्ट्रिय रेकर्ड राखेका छन् । संघीय सरकारको नक्कल गर्दै प्रदेशमा बिना काम त्यत्रा सांसद, मंत्री आदि औचित्यहीन भएको जनगुनासो छ ।

प्रदेश र स्थानीय सरकारले गरेका भ्रष्टाचारका फेहरिस्त वर्षेनी महालेखाको प्रतिवेदनमा आउने क्रम बढेको छ (लोहनी; घिमिरे) । प्रदेश र स्थानीय सरकार एकातिर काठमाडौले अधिकार दिएन भनेर कराएर नथाक्ने तर आफूले पाएका लक्ष्य, योजना, कार्यक्रम पूरा गर्नु त कता हो कता प्राप्त साधनस्रोत चाहीँ अनियमिततापूर्वक आफूखुसी खर्च गर्ने गरेको खुलासा भएका छन् । आफ्नै अगाडी जनविरोधी कार्यशैली देखिएपछि त्यसमा जनताको विरोध हुन्छ । सन्चारमाध्ययमा यस्तै भ्रष्टाचार र अनियमितता प्रवाहित भएपछि आँखाले पनि सा ेही दृश्य देखेपछि प्रदेश सरकार सुशासन दिन सक्षम नभएको निष्कर्ष निस्कछ । यही आडमा संघले प्रदेशलाई दिनुपर्ने अधिकार सधै आफैले मुठ्याएको छ र संघीयतामाथि आज प्रश्न उठेको छ । जेहोस्, स्थानीय सरकारका यस्तै कार्यशैलीले गर्दा नै आज संघीयतामाथि चुनौती र प्रश्नचिन्ह चुलिएको हो ।

कोरोना महामारी चलेका बेला स्थानीय सरकार तथा जनप्रतिनिधिले केही मात्रामा काम गरे । तर, परेका बेलामा पनि उनीहरू राजनीतिक पूर्वाग्रहबाट मुक्त हुन सकेनन् । राहत बाँड्ने काममा उनीहरूलाई जनतालाई दलीय विभेद गरे भन्ने समाचार बाहिर आयो । उदाहरणका लागि, विराटनगरमा मेयर भीम पराजुलीले कांग्रेस कार्यकर्ता र व्यापारी घरानीयालाई मात्र प्राथमिकता दिएर भ्याक्सिन

लगाइदिएको भन्ने आरोप लाग्यो (सेतोपाटी) । मेयरको पक्षपाती कामको जनस्तरमा विरोध भयो । अक्सिजन सिलिण्डर आफूखुशी घरघरमा पुऱ्याइदिएर पराजुली यसअघि नै विवाद परेका थिए । यो लेखकलाई पनि भ्याक्सिन नपाएर कहिलो आफ्नो पालो आउला भनेर पर्खिरहेको बेला मेयरको उक्त गैरजिम्मेवार कदमको समाचारले दुःखित तुल्यायो । यद्यपि, जनताको तीब्र विरोधले गर्दा भ्याक्सिन वितरणमा सुधार भयो । पालो पर्खेर सबैले खोप लगाउन थालेका छन् ।

आफ्नै नगर विराटनगरको स्थितिलाई हेरेर पनि म स्थानीय सरकारबारे धारणा बनाउने अवस्थामा पुगें । विराटनगरमा जनप्रतिनिधि चुनिनअघि नाला, ढलको व्यवस्था गर्न कर्मचारीतन्त्रको नेतृत्वमा योजना थालिएको थियो । सुरुमा महत्वाकांक्षी योजनामा सडक चौडा र व्यवस्थित गर्ने काम थियो । जसलाई चुनिएका जनप्रतिनिधिले अघि बढाउन सकेनन् । साधनस्रोतलाई सडकमा केन्द्रीत पारियो । विराटनगरको नगर सरसफाइ ठेकेदार संस्थालाई जिम्मा दिइएको छ । जनसरोकारको सवालमा नगरपालिका पन्छिन खोजेको छ । सरसफाइका ठेकेदार बिहानै माइकबाट जनता तर्साउँछन् तर फोहोर उठाउने ट्याक्टर भने समयमा पठाउँदैनन् । घरघरमा फोहोर थुपार्नु पर्ने बाध्यता छ ।

विराटनगरमा सडकपेटी आज जतातत‍ै पशलेहरूले अतिक्रमित गरेका छन् । सडक पेटीमा यात्रु हिड्ने ठाउँ छैन । यात्रुले सडकपेटी नपाएपछि मूल सडकको छेउछाउमा जोखिम मोलेर हिड्नु पर्ने वाध्यता छ । मन्दिर, सार्वजनिक स्थलमा चर्को स्वरमा माइक बजाउने गरिन्छ । नगरवासी रातभर सुत्न नसक्ने गरी ध्वनि प्रदूषण भएको छ । नगरपालिका कानमा तेल हालेर बसेको जस्तो भान हुन्छ । फोहोर जम्मा गरेर घरघरमा, सडक, चोकमा आगो बालेर धुँवाले वायु प्रदुषण बढेको छ । यस्ता प्रदूषण कम गर्न नगरपालिकाले कुनै चासो गर्दैन । नगरपालिका आँखामा पट्टी लगाएर बसेको प्रतीत हुन्छ । विराटनगरको खानेपानी धाराबाट आउने पानी खान त परै जावोस् लुगा धुन पनि नमिल्ने धमिलो छ । करेसाबारीमा हाल्ने गुणस्तरको पानीलाई विराटनरमा खानेपानी भनेर सरकारले वितरण गरिरहेको छ । यसरी वायु प्रदुषण, ध्वनि प्रदूषण तथा जल प्रदूषणप्रति स्थानीय सरकार, प्रदेश र संघीय सरकार संवेदनशील छैनन् (लोहनी) ।

संघीय सरकारको आलोचना मात्र होइन सकारात्मक कुरा पनि केही छन् । संघीय सरकारको आलोचना मात्र होइन सकारात्मक कुरा पनि केही छन् । कोरोना महामारीको विभिन्न चरणमा शंकास्पद मानिसलाई क्वारेन्टाइनमा राख्ने व्यवस्था मिलाउन पालिकाहरूले स्वास्थकर्मी तथा अन्य स्वयमसेवी परिचालित गरिए । सरकारहरूले केही हदसम्म अन्तरनिकाय समन्वय गरे । यसले कोरोना कोभिड १९ महामारीको पहिलो लहरमा व्यवस्थापनमा केही काम भयो । कोरोना महामारीको दोस्रो लहर आउँदा पालिकाहरू सिथिल देखिए । पहिलो चरणमा व्यवस्था गरिएका साधनस्रोतलाई अध्यावधिक गर्दै लानुपर्नेमा लापरवाह भए । दुई चरणका महामारीमा स्थानीय सरकारको भूमिकलाई मूल्याङ्कन गर्दा परिपक्व

व्यवहार देखिएन । फलस्वरुप, दोस्रो चरणको महामारीमा धेरै विरामीको अकालमा ज्यान गयो ।

संघीयतामा स्थानीय सरकाले गरेको एउटा गतिलो काम भनेको स्थानीय मातृभाषा र लिपिको संरक्षण र प्रबर्धन हो । नेपाली खस भाषालाई राज्यले सम्पर्क भाषाको रुपमा अघि सारेको छ । यो सबै जातजातिको सम्पर्क भाषा बनेको छ । यो स्वागतयोग्य कुरो हो । बहुभाषा र बहुसंस्कृतियुक्त मुलुकमा रहेका आदिवासीका भाषा र लिपिलाई हिजो राज्यले ध्यान दिएको थिएन । हिजो मातृभाषासम्बन्धी नीति भेदभावयुक्त थिए । वि.स. २०४६ सालपछि आदिवासीका भाषा लिपिमा केही सवाल उठे तर सम्बोधन भएनन् । संघीयता आएपछि यो काममा स्थानीय तहका सरकारले आफ्ना पालिकाभित्रका रैथाने भाषा, लिपि तथा संस्कृति संरक्षणमा बजेट छुट्याएका छन् । विद्यालयमा पठनपाठनको वातावरण मिलाएका छन् । स्थानीय सरकारले गरेको यो काम महत्वपूर्ण र दूरगामी कदम हो । यस्ता सकारात्मक कदमको हामी सबैले मुक्तकण्ठले स्वागत गर्नुपर्दछ । हामी यस्तै सिर्जनात्मक कामको निरन्तरता र विस्तारित रुप हेर्न चाहन्छौं ।

हामीले चलाउने नेपाली रुपैयाको नोटमा नेपाली र अंग्रेजी भाषामा अक्षर लेखिएका छन् । भारतको नोटमा हेरौं त्यहाँ विभिन्न राज्यका स्थानीय भाषाका लिपि  प्रयोगमा छन् । नेपाललाई संयुक्त राष्ट्र संघमा सदस्यता दिलाउन रञ्जना लिपि र नेपाल भाषाले निर्णायक काम गरेको हो न कि नेपाली भाषा, देवनागरी लिपीले । अतः नेपालका आदिवासी किरातको श्रीजङ्गा लिपिलाई पनि राष्ट्रिय सम्पदा र मौलिक नेपाली पहिचानका रुपमा अघि सार्न सकिन्छ । हामी अरु देशका सुन्दर पक्षबाट सिकेर समेत आफ्नो देश नेपालको मुहार हँसिलो पार्न सक्दछौं ।

## **सन्दर्भ–सामग्री**

घिमिरे, रविन्द्र (२०७८, पुष १६) सुस्त र विकृत विकास शैली प्रदेश र स्थानीय तहसम्मै” अनलाइन खबर

मुन्धुमस्टार (२०७८, वैशाख १४) बालिका खड्कामाथिको सरकारी दमन बन्द गर! शेरधन राईमाथि छानबिन गर!, मुन्धुमस्टार

भट्टराई, ध्रुव (२०७८, असार १४) प्रदेश १ सरकारको गाडी मोह, साढे तीन वर्षको अवधिमा एक अर्बका गाडी खरिद, रातोपाटी

रावल, रमेश (२०७४, चैत्र ५) गाउँपालिकाको लाखौं रकम बोकेर जनप्रतिनिधिहरू भ्रमणमा, थाहाखबर

लोहनी, प्रकाशचन्द्र (२०७६, फागुन ९) विश्वासको संकट, कान्तिपुर दैनिक

साह, देवनारायण (२०७८, पुषा ५) गाडी किन्नै साढे २ अर्ब, कान्तिपुर दैनिक

सेतोपाटी (२०७८, साउन १४) कांग्रेस कार्यकर्तालाई घरैमा खोप पुऱ्याएको आरोपमा विराटनगरका मेयर पराजुलीविरुद्ध प्रदर्शन, सेतोपाटी अनलाइन ।

# १३ खोक्रा नारा थोत्रा कान

नेपाल नारै नाराको देश हो । अर्को शब्दमा यो नेतै नेताको देश पनि हो । नयाँ सरकार आउँदैपिच्छे नेताहरू कुर्लिन्छन् । घरिघरि यहाँ आकर्षक नाराहरू वर्षे भेलझैं उर्लिन्छन् । ती नारामा केवल भोट आकर्षित पार्ने उद्देश्य देखिन्छ । आधार बिनाका हावादारी खोकाइलाई खोक्रा नारा भनिन्छ ।

दुःखका साथ भन्नुपर्दछ, वास्तवमा हामी कसैका पोल्टामा हुर्केको प्रजातन्त्रलाई लोकतन्त्र भनेर मख्ख परेका रहेछौं । यहाँ विदेशी स्वार्थमा पटक पटक सरकार फेरिरहन्छ । नेपाली नेताको खूबी के छ भने विदेशीलाई नेपालका नदीनाला जिम्मा लगाउन उनीहरू सत्तामा आएका हुन्छन् (आचार्य, उपेद्रदेव) । नेपालको प्राकृतिक स्रोत साधन सरकार फेरिदैपिछे विदेशीलाई बुझाएका छन् । जतिसुकै उफ्रे पनि भ्यातुत्ताझैं हविगत भएको छ हाम्रो । त्यसैले नेताका भ्यागुत्ते उफ्राइ र खोक्रा नाराबीच भयङ्कर डरलाग्दो तादात्म्यता हुन्छ ।

देशको स्वास्थ्य स्थिति हेरौं । सन् नब्बेको दशकमा 'सन् २००० सम्ममा सबैको लागि स्वास्थ्य' भन्ने नारा घन्केको थियो । दुर्भायवश, त्यो नारा पूरा हुन सकेन । तब सरकारले अन्तर्राष्ट्रिय जगतको इशारामा सर्लक्कै भाका फेऱ्यो । उसले सन् २०१५ सम्ममा सहश्राव्दी विकास लक्ष्य भन्ने नारा फुक्यो । त्यसबेला उपलब्धिलाई जनस्तरसम्म दिगो बनाउने भनिएको थियो तर त्यो लक्ष्य पनि हासिल भएन ।

सन् २०१५ को लक्ष्य हासिल नभएपछि हाल अर्को मीठो नारा घन्केको छ, सन् २०३० सम्ममा दिगो विकास लक्ष्य हासिलगर्दै सीमान्तकृतसमेतको स्तर उकास्ने । अहिलेसम्मको स्थिति हेर्दा यसको छाँट पनि पूरा होला जस्तो छैन । संघीय, प्रदेश र स्थानीय सरकारले व्यापक मात्रामा पूर्वाधार विकासमा जोड दिएका छन् । ती सरकारहरूको जोड सडक, विद्युत जस्ता क्षेत्रमा केन्द्रीत छ । शिक्षा र स्वास्थ्यका बजेट सडक, नाला, कलभर्ट निर्माणमा खर्च भएका छन् । स्वास्थ्यकर्मीले समयमा तलवसम्म खान पाएनन् भन्ने गुनासो सुनियो । सरकारका पूर्वाधारमुखी विकासे कृयाकलापले जनस्वास्थ्य सेवाका कार्यक्रमहरू ओझेलमा परेका छन् । जनस्वास्थ्यमा हालसम्म हासिल गरेका उपलब्धी गुम्दै जाने खतरा

बढेको छ । सरकार आउँछ, जान्छ । यद्यपि, सरकारले गरेका कमीकमजोरीको मुल्य जनताले नै चुकाउनु पर्नेछ ।

जनता भुल्याउन मीठा र आकर्षक नारा बनाएर मात्र हुँदैन । लक्ष्य र योजना केवल भाषण गर्ने मसला मात्र बन्नु भएन । यस्ता नाराले सर्वसाधारणलाई रनभुल्लमा पारिदिएको छ । के हामीले पहिले बनाएको नारा अनुसार निर्धारित समयमा सबैलाई स्वास्थ्य सेवा पुऱ्यायौं? वा केवल मार्गदर्शक सिद्धान्त र कार्यक्रम मात्र बनायौं? पूर्ण खोप जिल्ला, खुला दिसामुक्त क्षेत्र, पूर्ण साक्षर जिल्ला आदि घोषणा गर्दछौं तर अवस्थामा भने सुधार भएका छैन । सामाजिक आर्थिक सुधार, जनचेतना, बानीव्यहोरामा आशा अनुरुप परिवर्तन भएका छैनन् ।

जिल्ला जिल्लामा लहैलहैमा पूर्ण खोप जिल्ला घोषणा, पूर्ण साक्षर जिल्ला घोषणा जस्ता अभियानहरू हचुवाका भरमा सफलता घोषणा गरियो । यसमा गहिरिएर सोच्दा कुनै अवस्थामा प्राप्त हुने पूर्णताले निरन्तरता पाउने आधार के हो? बिना आधार यस्ता उपलब्धी दावीको कुनै अर्थ रहँदैन । जन्मेका सबै बालबालिकाले खोप पाउनु पर्दछ । कुनै महिना खोप सेवा रोकियो भने पूर्ण खोपमा प्रभाव पर्दछ । सबै बालबालिकाले विद्यालय जानुपर्दछ । कुनै कारणले एकजना विद्यालय जान असमर्थ भएमा पूर्ण साक्षरता प्रभावित हुन्छ । त्यो पूर्णता प्रदान गर्ने अवस्थाको सुनिश्चितता नभइ उपलब्धीको निरन्तरता रहँदैन । यसैले त्यस्ता हुँइया मच्चाउने काम पनि खोक्रो नाराकै एक रुप हो ।

सेवा र गुणस्तर सुनिश्चित गर्नलाई सरकारी निकायको नियमिततामा जोड दिनुपर्दछ । राज्यको सूचना प्रणालीले अनुगमन र सुधार सुनिश्चित गर्नुपर्दछ । हाल विकासे क्रियाकलाप गैरसरकारी संघसंस्थाको क्षणिक सहजीकरणमा सूचना संकलित गरिन्छन् । त्यही तथ्याङ्कका आधारमा विभिन्न नारा सफल भएको घोषित गरिन्छ । वास्तवमा कुन घर परिवारमा कति बच्चा छन्, कति बच्चा जन्मिन्छन्, कति वच्चालाई खोप दिने वा शिक्षा दिने भन्ने टोल, वडा, पालिकामा घरधुरीको आधारभूत सरकारी तथ्याङ्क प्रणाली छैन । विकासे बजेट र कार्यक्रम आएको बेलामा घरधुरी घुम्ने गरिन्छ । त्यसबेला भेटिएका कमीकमजोरीलाई टालटुल पारिन्छ । दिगो र भरपर्दो आधारबिना नारा वा कार्यक्रम सफलताको घोषणा गरिन्छ । के यस्ता कार्यक्रम वा अभियानले साँच्चै दिगो लक्ष्य हासिल होला त? कदापि हुँदैन ।

यो कुरा खुलागोप्य छ, नेपालमा सरकारी निकायलाई गैरसरकारी संस्थाले घुमाएका छन् (आचार्य, सुर्यराज) । कतिपय सूचना सरकारी निकायमा भन्दा गैह्रसरकारी संस्थाहरूमा बढी मात्रामा सङ्कलित हुन्छन् । गैह्रसरकारी संघसंस्थाहरूको राजनीतिक तहमा पहुँच हुन्छ । यिनीहरूले उच्च पदस्थ अधिकारी तथा कर्मचारीलाई हात लिएका हुन्छन् । त्यसैले गैरसरकारी संस्थाहरूले नेपालको नीतिगत निर्माणमा सहयोग मात्र हैन हस्तक्षेप समेत गर्ने गर्दछन् । कार्यक्रमहरू स्थानीय तहमा कुनै कार्यक्रम परीक्षणको रुपमा मंत्रालयबाट

स्वीकृती लिएर चलाएका पाइन्छन् । तर, परियोजनाको दूरगामी प्रभाव कस्तो पर्छ भनेर मूल्याङ्कन गर्ने सरकारी क्षमता र सूचना प्रणाली छैन । सरकारी निकायको यही कमजोरीको फायदा दातृनिकाय र गैह्रसरकारी संस्थाले उठाउँने गर्दछन् । यसरी नै गैरसरकारी संस्थाहरूले नेपालका विभिन्न तह र क्षेत्रमा सरकारलाई दवावमा राख्ने गरेका छन् । सरकारी कर्मचारी पनि विदेशी संस्थाका दवाव र प्रलोभनमा परेका हुन्छन् ।

गैह्रसरकारी संस्थाहरूले विदेशी सरकार र दाताका पैसा लिएका हुन्छन् । उनीहरूले दातासमक्ष यति पैसा दियौ भने म यति काम फलाना ठाउँमा गरेर देखाउँछु भनी वाचा गर्दछन् । अनुदानमा दाताको कुनै न कुनै शर्त र स्वार्थ लुकेको हुन्छ । दाताबाट बजेट पाइने लोभमा नहुने कुराको समेत प्रत्याभूति गराएर गैह्रसरकारी तथा सरकारी संस्थाले प्रस्ताव लेखेका हुन्छन् । काम पूरा नहुँदा पनि कागजी तथ्याङ्क देखाएर सरकारी, गैह्रसरकारी संस्थाले दाताको पैसा पचाउनु पर्ने वाध्यता हुन्छ । यो काम उनीहरू एक्लैले गर्न सक्दैनन् । त्यसैले तथ्याङ्क तोडमोड गर्ने काममा गैह्रसरकारी संस्थाले सरकारी संस्थालाई पनि मुछने काम गर्दछन् । सरकारी संस्था पनि दातामुखी बनेका छन् । कर्मचारी भत्ता वा सुबिधामुखी भएका छन् । कार्यालयलाई बजेटका साथमा कामको लक्ष्य दिइएको हुन्छ, तर काम गर्ने वातावरण छैन । कर्मचारीलाई जसरी पनि प्रगति हासिल गर्नुपर्ने वाध्यता छ । त्यसैले सरकारी कर्मचारी समेत गलत ढङ्गले तथ्याङ्क मिलाउने काममा लाग्दछन् यो उनीहरूको बाध्यता हो । यसैकारण कतिपय सरकारी सूचना भरपर्दा हुँदैनन् । पाठकलाई सही सूचना आवश्यकता परेमा विभिन्न अध्ययन अनुसन्धान प्रतिवेदन समेत हेर्नुपर्ने हुन्छ ।

कर्मचारीतन्त्र आज फितलो बन्दै जानुमा प्रथमतः मन्त्रालयहरू जिम्मेवार छन् । उदाहरणका लागि स्वास्थ्य मंत्रालयलाई हेरौं । देश, काल सुहाउँदो नीति नियम, निर्देशिका बनाउने स्वास्थ्य मंत्रालय सिधै कार्यक्रम चलाउन ब्यस्त छ । किनभने कार्यक्रम चलाउँदा पैसा खेलाउन पाइन्छ, सुबिधा पाइन्छ । गैरसरकारी संस्थालाई मन्त्रालयमा हुलेर आफै कार्यक्रम कार्यान्वयनमा ब्यस्त छ । फलस्वरुप देशमा आवश्यक नीति निर्माण, नियम बनाउन, अनुगमन गर्ने, अध्ययन अनुसन्धान गर्ने जस्ता काममा मन्त्रालय पछि परेको छ । स्वास्थ्य मंत्रालयले अन्य मन्त्रालयसित आवश्यक मात्रामा समन्वय गर्न सकेन । मन्त्रालय केवल गैरसरकारी संस्थासितको समन्वय गर्ने कार्यमा केन्द्रीत छ ।

मंत्रालयले स्वास्थ्य ऐन बनाएपछि समयमा नियमावली ल्याउन सकेन । मंत्रालयले नियम पारदर्शी बनाउन पर्नेमा स्वार्थ समूहका दवावमा पऱ्यो । स्वास्थ्य मंत्रालयको कर्मचारी संख्या ठूलो एवम् विविधता भएकाले अनगिन्ति समस्या आए । लामो काल बितेकाले समस्या आउँदा मंत्रालयले स्वार्थ समूह अनुकूल ऐनको अपव्याख्या गर्न थाल्यो । मंत्रालयमा राजनीतिक नेतृत्व फेरिदैं पिछे स्वार्थ समूहले आफू अनुकूल ऐनको ब्याख्या गर्न लगाए । यसरी विभिन्न दवाव र प्रभावमा

स्वास्थ्य ऐनको मूल्य र मान्यता विपरित काम भए । अन्ततः ढिलागरी स्वास्थ्य नियमावली आयो, तर त्यो विरोधाभासपूर्ण भयो । आज नेपालको स्वास्थ्य क्षेत्र पनि मुलुकको राजनीतिक प्रणाली झैं लथालिङ्ग भएको छ । स्वास्थ्य प्रणालीमा चेन अफ कमाण्ड फितलो भएको छ । सरकारी, गैरसरकारी क्षेत्रमा राजनीतिक हस्तक्षेपका कारण आपुङ्गीपन मौलाएको छ । फलस्वरुप स्वास्थ्य सेवाको गुणस्तर निम्नस्तरको भएको छ । जोसुकैले स्वास्थ्य सेवा पाउन नसक्ने भएका छन् । स्वास्थ्य सेवामा सर्वसाधरणको पहुँच घटेको छ । संघीय नेपालमा तीनै तहमा स्वास्थ्य मंत्रालय छन् । त्यसको आभास जनताले पाएका छैनन् ।

हिजो विकेन्द्रीकरण भएन भनिन्थ्यो । फलस्वरुप संघीयता आयो । आज फेरि संघीयता पनि भएन भनिन्छ । के हामी राजनीतिक प्रयोगको चक्रमा घुमिरहने? संघीयता आएपछि जिम्मेवार निकाय संघीय सरकार, स्थानीय सरकारहरू अस्तित्वमा आए । तर जनस्वास्थ्य क्षेत्र निरीह किन बन्यो? यसमा एउटा प्रमुख कारण स्वाथ्य मंत्रालय आफैले जन्माएको अवस्था हो । स्वास्थ्य मंत्रालयले करिव दुई दशकअघि ल्याएको स्वास्थ्य ऐनको गलत प्रशासनिक प्रयोग भयो त्यसमा राजनीतिक हस्तक्षेप थपियो । आज जनतालाई प्राथमिक स्वास्थ्य सेवा प्रदान गर्ने स्वास्थ्य संस्थामा स्वास्थ्य ऐन तथा संघियताले पदोन्नति गरेका विभिन्न पदनामधारी स्वास्थ्यकर्मी बहाल छन् । तिनीहरूले शैक्षिक योग्यताका आधारमा नभएर हडतालका भरमा र ट्रेड युनियनका बलमा एक तह मात्र होइन योग्यता नै नपुगेको तहमा समेत स्तरोन्नति भएका छन् । स्वास्थ्य संस्थाको कुनै प्राविधिक पदले दिने सेवा पदिय योग्यता नपुगेका पदनामधारीबाट सम्भव छैन । अतः पदनाम दिनअघि शैक्षिक योग्यता वा तालिमको व्यवस्था हुनुपर्दछ । राष्ट्रपति, प्रधानमंत्रीको स्वास्थोपचार विदेशमा नगरी स्वदेशकै अस्पतालमा गर्ने व्यवस्था नगरेसम्म स्वास्थ्य संस्थामा दक्ष जनशक्ति र स्वास्थ्य पूर्वाधार सुनिश्चित हुँदैन । यसमा राज्यले विशेष ध्यानदिनु पर्दछ ।

संघीय सरकारले केन्द्रमा बसेर नीति र कार्यक्रम त बनाउँछ । त्यस अनुरुपका कार्यक्रम र सेवा जनस्तरसम्म कसरी पुऱ्याउने भन्ने चुनौति आज खडा भएको छ । जनगुनासो थेग्न नसकेपछि केन्द्रले प्रदेश र स्थानीय सरकारलाई दोष दिन्छ । प्रदेशले स्थानीय र संघीय सरकारलाई गुनासो गर्छ । त्यसै गरी स्थानिय तहले संघीय सरकार र प्रदेश सरकारलाई अपजस दिन्छ । त्यसरी दोष लगाउने काम आफैमा केही सही होला । यद्यपि, साधनस्रोत सम्पन्न कुनै सार्वभौम सरकारले अरुलाई दोष मात्र नलगाइ आफूले गर्नुपर्ने काम इमान्दारपूर्वक गर्नुपर्दछ ।

अब स्वास्थ्य प्रणालीको समीक्षा र सुधारको अवस्था आएको छ । संभवतः देशले राजनीतिक स्थिरता र गति नसमातुन्जले देशको राजनीतिक दशाझैं स्वास्थ्य प्रणाली पनि जनताको स्वास्थ्यस्थिति सुधारमा साधन नभएर राजनीतिक दलका स्वार्थपूर्तिका साधन बन्नेछ । त्यतिन्जेल स्वास्थ्य क्षेत्र विदेशी दातृ निकायकै भरमा

र इशारामा चल्नेछ । नेपालमा डाक्टर नर्स जनस्वास्थ्यकर्मी जतिसुकै उत्पादन भएर के गर्नु नेपालमा ती सधैं अभाव हुनेछन् । किनभने सरकारले स्वास्थ्य, शिक्षालाई स्वार्थ समूहलाई जिम्मा लगाएको छ । उसले मेडिकल शिक्षालाई यति महङ्गो बनाएको छ कि पढिसकेपछि पढाइखर्च उकास्न विदेश भासिनु पर्ने बाध्यता सिर्जना गरिएको छ ।

त्यसैले हाम्रो देश हिजो विदेशी साम्राज्यवादीका खातिर लड्ने लाहुरे उत्पादन गर्ने गोरखा नामले प्रसिद्ध भयो । आज विदेशीका स्वास्थ्यस्थिति सुधार्न, उनीहरूका बृद्धबृद्धा स्याहार्ने जनशक्ति उत्पादन गर्ने मेडिकल कलेजरुपी कारखाना खोलेर देशलाई भन्दा विदेशलाई टेवा पुगेको छ । हामी आफ्नो लागि भन्दा पनि अरुकै लागि जन्मिएका रहेछौं । अरुकै लागि लड्ने अरुकै लागि मर्ने तर आफ्नालागि नगर्ने परजीवी भइयो । त्यसैले कसैले वीर गोरखा भनेर जत्ति फुर्क्याए पनि त्यो ब्यङ्ग्यात्मक बढी लाग्दछ । चाहे मेडिकल कलेज हुन् वा विश्वविद्यालय हुन् त्यहाँ दिइने शिक्षा नेपाल र नेपालीका लागि होइन रहेछन् । ती संस्था त नेपाली माटोमा हुर्केका नेपालीलाई उमेर पुगेपछि विदेशी नोकर चाकरमा भर्ति हुनलाई खोलिएका तालिमकेन्द्र जस्ता भएका छन् (दाहाल) । देशका विद्वतवर्ग बस्ने थलोलाई मैले एक ब्यङ्ग्यात्मक बिम्बको रुपमा प्रस्तुत गर्न बाध्य भएकोमा म क्षमा चाहन्छु ।

वास्तविकता मीठो छैन तीतो छ, किनभने नेपालको अवस्थालाई गन्तव्यविहीन यात्रामा खोक्रा नाराले डोर्‍याएका छन्। स्वार्थी राजनीतिले सदा जनताको कान टाल्दै आँखामा छारो हाल्दै जनभावना कुल्चिदै हिड्ने गरेको छ । छोराछोरी विदेश भासिएपछि हामी बाबुआमा असहाय भएका छौं । यो वातावरण बनाउनलाई परायले पासा फाले होलान् तर सबै दलका सरकारहरू उनीहरूकै मतियार बनेकोमा दुःख लागेको छ ।

समय समयमा थरिथरिका नारा निरन्तर घन्किन्छन् । त्यो सुन्न जनता बाध्य छन् । देशका विभिन्न तहका सरकार र कर्मचारी तन्त्रबीच तानातान, बाराबार, मारामार चलेको चल्यै छ । विचरा जनता त्यसको चेपुवामा परेका छन् । सरकारी तथा गैह्रसरकारी क्षेत्रबीच चलेको अघोषित प्रतिस्पर्धाको भुमरीमा देश उहिल्यै फसेकै हो । आज आफ्नै जनप्रतिनिधिको लाटोबुङ्गो नचाइ, बलमिच्याइ हेर्न परेको छ । हिजो राजा कानूनमाथि थिए । आज दल नियम कानून मिचिरहेका छन् (कैदी प्रेम) । लाग्छ, नेपालमा जनता हैन राजनीतिक दल सार्वभौम रहेछन् । मुट्ठीभर दलका नेताले देशलाई दास बनाएका छन् । दलमा विचार सिद्धान्त भन्दा पनि स्वार्थ झुण्ड हावी छ । आज कुनै दल जनताको दशा यसरी सुधार्नु पर्दछ भन्दैनन् जनतालाई झुक्याउने सूत्र र गठबन्धनको जालो मात्र बुनिरहन्छन् ।

जनताको आधारभूत स्वास्थ र शिक्षाको पिरलो अब कसले गर्ने? जनप्रतिनिधि नीति भन्दा गुट र स्वार्थमा विभाजित छन् । नेता, कार्यकर्ता दलभित्रै अल्मलिएका छन् । सानातिना नेता शिर्षस्थ नेताको मुख ताक्छन् शिर्षस्थ नेता जनताको मुख

नताकेर विदेशी शक्ति र स्वार्थी समूहको मुख ताक्छन् । पराय स्वार्थमा बनेर टिकेको सरकारले जनतालाई लोप्पा नखुवाएर पापा खुवाउँछ भन्नु हाम्रो दिवा सपना नै हो । नेता राजनैतिक व्यवसायी भैसकेका छन् । यिनीहरूले चुनावमा केवल भोटका लागि जनता अल्मल्याउने काम मात्र गर्छन् । चुनावपछि भएको खर्च ब्याज, स्याजसहित सत्तामा पुगेर असुल्छन् । सबै दल हेरियो, चाखियो अब फेरि त्यही दोहोरिने होला । जनता आजित भएका छन्, सत्ताका चाकाचुलीमा पल्केकाबाट अब जनपक्षीय कामभन्दा देश र जनता भड्खालामा कहिले परिने हो भन्ने त्राशमा छन् ।

नेपाल संसारकै एक पुरानो देश हो । इतिहासदेखि वर्तमानसम्म यो देशको अस्तित्व चुनौतिपूर्ण रहिआएको छ । यही सवाल आज फेरि बल्झेको छ । जनता सचेत र जागरुक नबने हाम्रो भविश्य अनिश्चितप्रायः छ ।

## सन्दर्भ सामग्री


आचार्य, सुर्यराज (२०७८, पौष १६) “नेताका खल्ती र दाताका स्वार्थबाट आएको योजनाबारे निर्मम समीक्षा गरौं” अनलाइनखबर, https://www.onlinekhabar.com/2021/12/1059976

आचार्य, उपेन्द्रदेव (२०२२, अगस्ट ८) “विदेशी पोल्टामा हुर्केको प्रजातन्त्र र आयातीत साम्यवादको परिणाम” (भिडियो) युट्यूब एपीवान टेलिभिजन, https://youtu.be/NR3LcmXvw5s

कैदी, प्रेम (२०१९, अक्टेबर १९) “अपराधी उत्पादन गर्ने यो व्यवस्थाले कसैलाई छुन सक्दैनः प्रेम कैदी, वरिष्ठ पत्रकार” सगरमाथा टेलिभिजन (भिडियो) युट्यूब, https://youtu.be/HclGQaW34fw

दाहाल, भरत (२०१३, फरवरी ४) “टफ टकका प्रस्तोता दिलभूषण पाठकले पूर्व माओवादी नेता तथा राजनैतिक विश्लेषक भरत दाहालसित गरेको अन्तरवार्ता” (भिडियो) युट्यूब, https://youtu.be/l7Kh_Yt1qnY

# १४ भोको भन्छ डाँडावारी

मान्छेले प्याच्च बोलिदिँदा मुखमा पसेको गाँस पनि खस्दो रहेछ । त्यसै गरी एकचोटी दुईजना साथी पाहुना भएर परदेश गएछन् । बेलुकाको खाना खाने बेला भयो । भान्सामा खाना खानेबेलामा घरकी आमाले खाना पस्केर दिइन् । उनले जब मासुको प्लेट अघि सारिन् तब  साथीले "ऊ त मासु खाँदैन, साकाहारी हो" भनेर प्वाक्क बोलिदियो । मासुको प्लेट पाउने साथी लाजले बोल्न सकेन । यसरी उसको मुखैमा आएको मासु फिर्ता गयो । एकजना साथीको ख्यालठट्टाले गर्दा आफ्नै साथी मासु खानबाट बञ्चित भयो । पाहुना भएर गएको आफ्नै एकजना साथीले गर्दा अर्का विचरालाई रुनु न हाँस्नु भएछ ।

त्यो त केवल एउटा ठट्टा थियो जहाँ साथीले रेला गर्दा एकजना मासु खानबाट बञ्चित हुनपऱ्यो । आज ब्यवहारमा त्यस्तै खालका शैली देशभित्र पनि देखिन्छन् । सरकारले बृद्धभत्ता पाउने उमेर ७० वर्षबाट ६५ वर्षमा घटाउन खोजेको प्रस्तावप्रति एक समूहले चर्को विरोध गरेको थियो । फलस्वरूप योजना लागु भएन । त्यसको केही वर्षपछि २०७९ सालमा सरकारले वृद्धभत्ता पाउने उमेर २ वर्ष घटाएर ६८ वर्ष बनाएको छ । केही वर्षअघि ६५ वर्ष उमेरकालाई मुखैमा आएको खानेकुरा खोसिएको थियो । केही ढिलै गरी भए पनि उमेर केही घटाएर अब ६८ वर्ष उमेर पुगेपछि वृद्धभत्ता पाइने व्यवस्था सरकारले गरेको छ ।

राज्यले ६० वर्षपछिको उमेरलाई वृद्धावस्था मानेको छ । केही वर्षअघि सरकारले ६५ वर्षमाथि उमेरसमूहलाई सुविधाको दायरा बढाउँदा खोचे थाप्ने काम भएको थियो । बिभिन्न बहाना देखाउँदै अशक्त समूहको भाग खोस्नु भनेको पाहुनाघरमा मासु खानबाट साथीलाई बञ्चित गराए जस्तै हो । उल्लिखित दृष्टान्तमा मानौँ साथीले बोल्न सक्दथ्यो, हैन म खान्छु भन्न सक्दथ्यो । उल्लु बनाउने साथीलाई नै मूर्ख बनाउन सक्दथ्यो । तर, यहाँ ६५ वर्षमाथिका उमेर समूहका मानिसले सरकारले सुन्ने गरी  बोल्न सक्दैनन् ।

आज उमेरको दायरा बढाउन खोज्दा विवाद गरिएको छ । भोली बृद्धभत्ता बढाउँदा पनि यसरी नै विवाद आउने पक्का छ । साथीलाई उल्याएर आत्मरतिमा रम्ने मनोवृत्ति भएका विद्वानसित अनेक तर्क होलान् । उनीहरूले राज्यढुकुटीले

नधान्ने तर्क उठाउनेछन्, भत्ता बाँड्ने कामलाई अनुत्पादक खर्च बताउने छन् । बृद्ध भत्ता बढाउने कि भत्ता पाउनेको उमेर घटाएर ६० वर्षसम्म पुऱ्याउने भनेर छलफल चलाउँदा पनि जनमत विभाजित हुनेछ ।

त्यसैले यो सवाल राज्यको जनताकेन्द्रीत सिद्धान्त र नीतिमा भर पर्दछ । राज्यले कुन उमेर समूहलाई प्राथमिकता दिने भन्ने नीतिगत कुरो हो । यो राज्यको साधनस्रोतमा भरपर्ने व्यवस्थापकीय विषय पनि हो । राज्यको नीतिद्वारा यस्ता कुरा निर्देशित हुन्छन् ।

सामाजिक न्याय आजको ज्वलन्त सवाल हो । समाजमा कुन समूह लक्षित समूहमा पर्दछन् भनी धेरै अध्ययन अनुसन्धान भएका छन् । सोही अनुरुप सरकारले नीति बनाउने गरेको छ । राज्यको नीतिअनुसार ज्येष्ठ नागरिक, सीमांन्तकृत नागरिक लक्षित समूह भित्र पर्दछन् । ज्येष्ठ नागरिक भनेको ६० वर्षमाथिको उमेर समूह भनेर नेपालको कानूनले परिभाषित गरिसकेको अवस्था छ ।

राज्यले आफूसित साधनस्रोत नपुगेर हाल ७० वर्षमाथिकालाई बृद्ध भत्ता दिएको छ । भोली राज्य सक्षम हुँदै जाँदा यो उमेर क्रमसः घटाएर ६० वर्षसम्म झार्नुपर्ने प्रावधान कानूनबाटै स्थापित भैसकेको छ । यदि सरकारले क्रमसः उमेर घटाएर सेवा दिन्छु भन्दा अरु कसैको टाउको दुख्नु हुँदैन । राज्यढुकुटीको दुहाइ दिएर वा अन्य कुनै बहानामा खान पाउनेको भाग खोस्नु परपीडक ग्रन्थी देखाउनु हुँदैन । यसबारे लक्षित वर्ग बोल्न सक्दैनन् । मलाई देऊ भनेर सडकमा ओर्लन सक्दैनन् । तसर्थ, बोल्न सक्नेले बोल्न नसक्नेको भाग खोस्नु हुँदैन ।

ती परपिकड ग्रन्थी भएकाहरू को हुन् भन्ने सवाल उठ्छ । ती चानचुने मानिस होइनन् । यिनीहरूको राज्यढुकुटीमा प्रत्यक्ष र परोक्ष पहुँच र प्रभाव रहेको हुन्छ । उनीहरूमा ढुकुटीको भाग खोसिएला कि भन्ने पूर्वाग्राही सोंच ब्याप्त छ । उदाहरणका लागि आज स्वास्थोपचारको नाममा, आर्थिक सहयोगको नाममा, चन्दा पुरस्कारका शिर्षकमा विभिन्न मंत्रालयहरूबाट ती पहुँचवालाले राज्यको ढुकुटीमा रजगज गरिरहेका छन् । राज्यको टुकुटीको चरम दुरुपयोग गर्ने क्रम निरन्तर जारी छ । जति विरोध भए पनि उनीहरू काग कराउँदै गर्छ पिना सुक्दै गर्छ भन्ने शैलीमा काम गरिरहेका छन् ।

त्यसैले सरकारको ढुकुटीप्रति ओठेभक्ति देखाउन बृद्धभत्तामा तीतो पोख्छन् । अरू मानिस उमेरसमूह ५ वर्ष घटाएर ६५ वर्ष बनाउँदा खुशी भएकामा परपीडक ग्रन्थी छट्पटाउँछन् । आखिर नेपाली नागरिक कानुनतः ६० वर्षको उमेरमा बृद्ध भएका छन् । तसर्थ, ६५ वर्षबाट बृद्धभत्ता दिने कुरो तर्कसंगत छ । यसमा सबैले सकारात्मक भएर सोचौं । सीमान्तकृत वर्ग र बृद्धबृद्धाको वास्तविक अवस्था बुझौं ।

नेपालको जनगणना २०६८ अनुसार देशको जनसंख्या २,६४,९४,५०४ छ । यसमा ७० वर्ष माथिका ८,४३,१३४ जना (३.१९ प्रतिशत) र ६५ देखि ६९ वर्ष

उमेरसमूहका ५५४,४४९ जना (२.०९ प्रतिशत) छन् । हाल नेपालीको सरदर आयु ७० वर्ष पुगेको छ । यसलाई केलाएर हेर्दा समाजमा बिपन्न वर्ग, सीमान्तकृत समुदायको सरदर आयु ६० वर्षभन्दा निकै कम छ । सरदर आयु उमेरसम्म बाँच्नेमा तिनै बर्ग, समुदाय पर्दछन् जो सामाजिक आर्थिक हिसाबले सक्षम छन् । जातीय हिसाबले चेपाङ, मुसहर, वर्गीय हिसाबले अति विपन्न र भौगोलिक हिसाबले कर्णाली वा दुर्गम भूभागमा बस्ने मानिसको अवस्था विचार गरौं । उनीहरूलाई तिमी ७० वर्ष वा ६५ वर्षसम्म बाँच अनि मात्र बृद्धभत्ता दिन्छु भन्यो भने उनीहरूका लागि 'आकासको फल आँखा तरी मर' हुनजान्छ । बढी उमेरकालाई मात्र सुबिधा दिनुपर्दछ भन्नु जनसांख्यिक संरचनाका दृष्टिले बलिया वर्गलक्षित अवधारणा हो ।

बृद्धाभत्ताको उमेर घटाउनु हुँदैन भन्ने अवधारणाले नेपालका सीमान्तकृत समूहको अवस्थालाई लत्याउँछ । नेपालको जनगणनामा प्राप्त तथ्याङ्कका आधारमा विवेचना गर्दा ६५ वर्ष उमेरमा बृद्धभत्ता वा अन्य सुविधा दिएमा त्यसले जातीय, वर्गीय, क्षेत्रीय रूपमा सीमान्तकृत जनसमूहलाई बढी न्याय पुग्छ । बरु सक्षम मानिसले राज्यले दिएको भत्ता लिन नचाहेमा नलिन सक्ने ब्यवस्था सरकारले गरिदिएको छ । त्यसतर्फ प्रचारप्रसार गरौं र सक्षम व्यक्तिलाई राज्यको दायित्व हल्का पार्न जनतालाई नै सुसूचित र प्रेरित गरौं । यसले राज्यलाई स्रोत ब्यवस्थापनमा सहज हुनेछ ।

अन्तर्राष्ट्रिय सन्दर्भमा वृद्धावस्थाबारे केही चर्चा गरौं । वृद्धावस्थाको परिभाषा विश्वव्यापी रुपमा भएको छ । उक्त परिभाषाअनुसार काम गर्न नसक्ने उमेर ६० वर्षपछिको अवस्था हो । त्यस उमेरपछिका मासिसलाई बृद्ध वा वृद्धावस्था भनिन्छ । नेपाल सरकारले पनि अन्तर्राष्ट्रिय मान्यताअनुरुप ६० वर्ष उमेर पुगेकालाई बृद्ध भनेर कानूनी रुपमा मान्यता दिएको अवस्था छ ।

राष्ट्रिय योजना आयोग, यूनिसेफ, न्यूएरा (२००१) को एक अध्ययनले ६० देखि ७० वर्षको उमेरसमूहमा उच्च असक्तता दर (२.६३ प्रतिशत) भएको जनाएको छ । बृद्धहरूको संख्या र अवस्था हाम्रो समुदायमा दिनदिनै जटिल बन्दै गएको छ । मानिसको औसत उमेर विश्वव्यापी रुपमा बढ्दो छ । विश्वव्यापीकरण, रोजगार र सामाजिक, आर्थिक गतिविधि बढेका छन् । यसका साथै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिवेशले व्यक्ति र समाजको मनोवैज्ञानिक स्थितिमा परिवर्तन आएको छ । हाम्रो परिवार र समाजको मूलभूत रुपान्तरण भइरहेको छ । बाआमालाई स्याहार पुग्ने परम्परागत संयुक्त परिवार प्रणालीमा परिवर्तन भएको छ । एकल परिवार र विदेश पलायनले बृद्धावस्था सहाराविहीन बन्न पुगेको अवस्था छ ।

यस्तो परिवर्तनशील परिवेशमा बृद्धावस्था सुखशान्तिपूर्वक बिताउन वातावरण सबैले मिलाइदिनु पर्दछ । केवल बृद्धाश्रम खोलेर मात्र पुग्दैन । ज्येष्ठ नागरिकलाई अस्पताल र यातायातमा छूट दिएर मात्र पनि पुग्दैन । ज्येष्ठ नागरिकका मनभित्र म सुरक्षित छु भन्ने मनोवैज्ञानिक भावना जगाउनु आजको

ठूलो चुनौति हो । यसमा राज्यले दिएको वृद्धभत्ताको महत्वपूर्ण योगदान छ । राज्यलाई मात्र होइन आज समाज र प्रत्येक परिवारका सदस्यलाई चुनौति थपिएको छ । यसमा सबैले गम्भीरतापूर्वक सोच्नु र लाग्नुपर्दछ ।

अन्तराष्ट्रिय जगतमा राज्यले म मेरा ज्येष्ठ नागरिकलाई उमेर अनुकूल सहज वातावरण मिलाउँछु, उनीहरूलाई मानवोचित व्यवहार गर्नेछु, भनेर प्रतिबद्धता जनाएका हुन्छन् । सोही राष्ट्रिय प्रतिवद्धता कार्यान्वयन हुनुपर्दछ, यही तर्कको मुख्य आधार हो । यसमा अनावश्यक तर्कवितर्क गर्नुभनेको अरुको भाग खोस्ने मनोवृत्ति नै हो । राष्ट्रिय तथा अन्तर्राष्ट्रिय मापदण्ड अनुरुप सरकारले केही सकारात्मक काम गर्न खोज्दा विवाद गर्नु सामाजिक न्यायमाथिको बेइमानी हो । जान्नेबुझ्ने मानिस नै समाजलाई दिग्भ्रमित गरेको देख्दा दुःख लाग्छ ।

हेक्का रहोस्, बृद्धावस्था मानवीय उपलब्धी हो । यो त्यत्तिकै पाइदैन जसलाई जोगाउन हामी सबैले मेहनत र त्याग गर्नुपर्दछ । यसमा राज्य एक कदम अगाडि सऱ्यो, जुन स्वागतयोग्य कुरा हो । राज्यले समतामूलक ढङ्गले सामाजिक न्याय दिन खोजेको छ । बृद्धावस्थामा पुगेपछि जो कोहीले राज्यसित, समाजसित त परैजाओस् आफ्ना परिवारसित समेत माग्न वा लड्न सक्दैनन् । तिनले आफ्ना माग कसैसित राख्न सक्दैनन् । मृत्यु पर्खिरहेका बृद्ध, बृद्धाको हक, हितबिरुद्ध बोल्नु महापाप हो ।

# १५ झर्रा बालकृष्ण पोखरेलका खाट्टी कुरा

भाषालाई कतिपयले पहाडी हिन्दी भाषा पनि भन्दछन् । यसरी नेपाली भाषालाई पहाडी हिन्दी भाषा भनेको नेपालका केही भाषाशास्त्रीलाई पचेन । उनीहरूलाई थाहा थियो संस्कृत, उर्दु, हिन्दी, नेपाली खस आदि भाषा भारोपेली भाषा परिवारका हुन् । तापनि, जसरी भारत र नेपाल सांस्कृतिक रुपमा समान भएर पनि आज फरक फरक राष्ट्र हुन् । त्यसै गरी नेपाली खस र हिन्दी भाषा एकै भाषा परिवार भएर पनि नेपाली भाषालाई पहाडी हिन्दी भाषा भन्नु हुँदैन भन्ने मौलिकवादी सोँचको जन्म भयो ।

नेपाल एकीकरण तथा गोरखाविस्तार हुँदा खस भाषी गोरखाली र रैथाने जाति र भाषाबीच घुलमिल भयो फलस्वरूप पहिलेभन्दा फरक बन्यो । खस भाषामा मौलिक झर्रा शब्दहरू निर्माण भए । त्यसकारण नेपाली खस भाषालाई सर्सर्ति सुन्दा वा बोल्दा हिन्दीझैं लागे तापनि अब यसमा मौलिकता प्रचूर मात्रामा भएको महसूस नेपाली भाषाशास्त्रीलाई भयो । त्यसैले नेपाली भाषालाई अब पहाडी हिन्दी अर्थात् पहाडी हिन्दी भन्न हुदैन भन्ने राष्ट्रवादी मत निर्माण भयो । जसलाई नेपाली झर्रोवादी भाषा आन्दोलन भनिन्छ । तिनै झर्रोवादी भाषा आन्दोलनका अग्रज अभियन्तामध्येका एक हुन्– बालकृष्ण पोखरेल ।

उनको जन्म विक्रम सम्बत् १९९० भाद्र १३ गते मकवानपुरको चिसापानी गढीमा भएको थियो । उनको पिताको नाम सुब्बा शारदा पोखरेल र माताको नाम छायादेवी पोखरेल हो । उनको शिक्षा वनारस हिन्दू विश्वविद्यालय र कलकत्ता विश्वविद्यालयमा भएको थियो । उनले भाषा विज्ञानमा विशेष दखल थियो । उनका प्रमुख कृतिमध्ये खस जातिको इतिहास, १०० वर्ष, नेपाली शब्दकोश उल्लेख्य छन् । उनले उपन्यास, कविता, कथा, निबन्ध आदि कैयौं पुस्तक लेखेका छन् । उनले त्रिभुवन विश्वविद्यालयमा लामो कालसम्म अध्यापन गरे । उनलाई भाषाशास्त्री बालकृष्ण पोखरेलका नामले नेपाली भाषा साहित्यमा चिनिन्छ । उनको मृत्यु वि.स. २०७५ फाल्गुन १२ गते ८६ वर्षको उमेरमा विराटनगरमा भयो ।

आज भाषाशास्त्री पोखरेल यो भौतिक दुनियाँमा छैनन् । यद्यपि, उनी हाम्रो मनमा छाएका छन् । उनको स्वर्गवास हुनुभन्दा केही महिनाअघिको एक साहित्यिक परिघटनालाई यहाँ संस्मरणात्मक शैलीमा राख्न चाहन्छु । पोखरेल

आफैले आयोजना गरेको संभवतः यो उनको अन्तिम साहित्यिक कार्यक्रम थियो । यो लेख विराटनगरमा सम्पन्न एक साहित्यिक कार्यक्रमको शब्दचित्र हो । नेपाली भाषा र साहित्यमा सम्झनुपर्ने केही कुरा त्यसबेला मलाई जानकारीमा आएकाले टिपोटमार्फत् साझा गर्दैछु । उक्त साहित्यिक कार्यक्रम विराटनगरमा सम्पन्न जेठ १२, २०७५ को घटना हो ।

भाषाशास्त्री प्रा. बालकृष्ण पोखरेलद्वारा स्थापित 'रुपात्रेय वाङ्मय प्रतिष्ठान'ले २०७५ सालमा 'रुपात्रेय शान्ता पुरस्कार' उक्त साहित्यिक जमघटमा वितरण गऱ्यो । नगद रु ३०,१११ सहित प्रमाणपत्र एकजना भाषासेवीलाई प्रदान गर्ने प्रतिष्ठानको प्रावधान थियो । पुरस्कार प्राप्त गर्ने स्रष्टा थिए चुडामणि रेग्मी । रेग्मी पूर्वाञ्चलका मोतिराम नामले चिनिन्छन् । उनी पनि झर्रोवादी आन्दोलनका अर्का एक अभियन्ता हुन् ।

कार्यक्रममा म पनि पोखरेलको निम्तालु भएर गएको थिएँ । समालोचक दधिराज सुबेदीले कुरैकुरामा बताएअनुसार, बालकृष्ण गुरुलाई मर्नअघि चुडामणि रेग्मीलाई सम्मान गर्ने सारै ठूलो छ । यसबाट थाहा हुन्छ उक्त समारोहको महत्व स्वयममा कत्रो रहेछ ।

पुरस्कार वितरण समारोहमा मन्तव्यको क्रममा भाषाशास्त्री पोखरेलले पुरस्कृत रेग्मीलाई 'काम र कर्तव्यका यात्री' उपमाले सम्बोधन गरे । भाषाशास्त्री पोखरेलले रेग्मीका पितापुर्खादेखिका दिन सम्झिए र भावुक बने । अघि रेग्मीका बाजे, बाबु सुब्बा, डिट्ठा उपाधि प्राप्त ब्यक्तिहरू थिए । उनका बाजे, बाबुले जोरेका विराटनगरका जग्गा हाल ५०/६० करोड मूल्य पर्ने स्थानमा थिए । किन हो रेग्मीले विराटनगर चटक्कै त्यागेर झापालाई कर्मथलो बनाएकामा पोखरेललाई नमीठो लागेको रहेछ । बालकृष्ण गुरुले त्यही क्रममा आफैले चित्त बुझाए र भने, जेहोस् रेग्मीले झापा गएर त्यहाँको सिङ्गो वातावरणलाई साहित्यमय बनाइदिए । आज झापाको साहित्यिक विकासमा रेग्मीको ठूलो योगदान रहेको छ ।

यही क्रममा प्रा. कविराज न्यौपानेले पनि रेग्मीको योगदानबारे टिप्पणी गरे । रेग्मीले दर्जनौं कृति लेखेर साहित्यको सेवा मात्र हैन दर्जनौं कृति सम्पादन गरेर कैयौं सर्जकलाई पाठकमाझ चिनाइदिए । रेग्मीले नयाँ स्रष्टाको खोजी गरी प्रकाशमा ल्याइदिए । उनले सर्जकलाई परिष्कृत बनाइदिए । त्यसैले उनलाई पूर्वाञ्चलको मोतिराम भनिएको हो । समालोचक दधिराज सुबेदीले पनि रेग्मीको समग्र कृतिका साङ्गपाङ्ग सार मद्दतव्यमा प्रस्तुत गरेका थिए ।

आफ्नो पालो आएपछि मन्तव्यकै क्रममा पुरस्कृत चुडामणि रेग्मीले बडो सटिक ढङ्गले झर्रोवादी आन्दोलनबारे टिप्पणी गरे । टिप्पणीको क्रममा आफू यस आन्दोलनको नेता हैन, नेताका पछि पछि हिड्ने कार्यकर्ता मात्र रहेको जानकारी दिए । उनी झर्रोवादी आन्दोलनका अगुवा बालकृष्ण पोखरेल, कोषराज रेग्मी, बल्लभमणि दाहाल र तारानाथ शर्माका एक साक्षीका रुपमा बोल्दै थिए । रेग्मीले अतीत सम्झिए । उनले झर्रोवादी आन्दोलनका बालकृष्ण पोखरेल, कोषराज रेग्मी,

बल्लभमणि दाहाल र तारानाथ शर्मालाई योगदानका आधारमा विश्व कम्यूनिष्ट आन्दोलनका सारथी मार्क्स, ऐङ्गेल्स, लेनिन र स्तालिनसित तुलना गरे ।

चुडामणि रेग्मीले कुरो खुलस्त पार्दै थिए, धेरै लेखकले झर्रो आन्दोलनमा बालकृष्ण पोखरेल र तारानाथ शर्मालाई अघि वा पछि नाम राख्ने गर्छन् धेरैजसोले तारानाथ शर्मालाई एक नम्बरमा राखेर लेख्ने गरेको देखेर उनी वास्तविकता सम्झाउँछन् । कतै पाठकलाई तारानाथ शर्माको बौद्धिकताले प्रभावित पारेर त्यसो भएको हो कि भन्ने उनलाई लागेको छ । वास्तवमा, तारानाथ शर्मा झर्रो आन्दोलनको अलि पछि मात्र जोडिएका अभियन्ता हुन् । उनले स्पष्ट पारे, झर्रोवादी आन्दोलनमा बालकृष्ण पोखरेल लगायतले हुर्काएको अभियानमा पछि जोडिन आइपुगेका हुन् तारानाथ शर्मा । तसर्थ, चुडामणि रेग्मीले बालकृष्ण पोखरेललाई झर्रो आन्दोलनको 'शिरोमणि' उपमाले सम्बोधन गरे । हामीलाई त्यसदिन थाहा भयो, बालकृष्ण पोखरेल झर्रोवादी आन्दोलनका एक अग्रज चिन्तक रहेछन् ।

भाषाशास्त्री टङ्क न्यौपानेको बोल्ने पालो आयो । यो 'रुपात्रेय शान्ता पुरस्कार' चुडामणि रेग्मीलाई प्रदान गर्नु भनेको झर्रोवादी आन्दोलनमा रेग्मीले खेलेको भूमिकाको सम्मान गर्नु हो । अर्का प्रा. गोपाल भण्डारीले नेपाली भाषामा झर्रो आन्दोलनको औचित्यता र नेपाली भाषाको महत्वबारे बोले । उनले अहिले नेपाली भाषालाई उच्च माद्यमिक तहको कोर्षमा पढाइ भार घटाउन लागेकामा चिन्ता व्यक्त गरे । झर्रोवादको आलोचना गर्नेले यसलाई झल्लुवादी आन्दोलन भनेर हल्का बनाउन खोजे पनि यो त झन झरिलो भएर आएको छ, भण्डारीले जिकिर गरे । बौद्धिक व्यक्तित्व एनपी शर्माले मन्तव्यको क्रममा अब झर्रोवादको नयाँ संस्करणको आवश्यकता परेको जनाए । विद्वानहरूका कुरा सुन्दा झर्रोवादको महत्व नघटेको बरु बढेको छर्लङ्ग भयो ।

समारोहबाट फर्केपछि मैले विषयवस्तुलाई केलाएँ । नेपालमा भाषासम्बन्धी प्रचलित मान्यताहरू कस्ता रहेछन् भनेर नियालेँ । नेपाली भाषाको विकासक्रममा नेपाली भाषालाई हेर्ने मूलतः दुई अवधारणा छन् । पहिलो हो, यो संस्कृतबाट नेपालीमा आइपुग्दा यसमा केही पनि विशिष्ठता छैनन् । भारोपेली परिवारमा हिन्दआर्यभित्र हिन्दी, उर्दू भाषा छन् । ती भाषाहरू संस्कृत भाषाका शाखा हुन् । यो अवधारणाले नेपाली खस भाषालाई पनि संस्कृत हिन्दी भाषाकै एक शाखा मान्दछ ।

भाषासम्बन्धी दोस्रो अवधारणा अनुसार प्राकृत भाषा संस्कृतहुँदै क्रमस: नेपाली भाषाामा विकसित भएको हो । यो नेपाली भाषा बन्ने क्रममा यसभित्र थुप्रै विशिष्ठता विकसित भए । यही दोस्रो अवधारणालाई झर्रोवादी आन्दोलनले समातेको छ ।

मैले पनि संस्कृति तथा मानवशास्त्रको अध्ययनक्रममा भाषाशास्त्रसम्बन्धी केही आलोचनात्मक अवधारणा र तथ्य पढ्न पाएको थिएँ । भारतीय भाषाशास्त्रीहरूले हिन्दी, उर्दू, नेपाली भाषाको उत्पत्तिको रुपरेखा खिचेका छन् ।

भाषाशास्त्री पाण्डेयनअनुसार नेपाली भाषा भारोपेली भाषा परिवारभित्र प्राकृत, पाली, संस्कृत, खस पर्वते हुँदै नेपाली भाषा बनेको हो ।

विद्वानहरूले संस्कृतलाई केवल भाषा मात्र मान्दैनन् । यो भाषा त व्यापक समुदायको विचार र संस्कृतिको शब्दभण्डार हो ।, विद्वानहरूको दावी छ, संस्कृत भाषामा पाइने विभिन्न शब्द विश्लेषण गर्दा हामी आदिवासी लेप्चा शब्दावली पाउँछौं (इण्डियन ईन्स्पायर्स) । यो पङ्तीकारको के तर्क छ भने, संस्कृतको बराह शब्द किरात लिम्बू भाषाको सराह शब्दबाट व्युत्पत्ति भएको हुनसक्छ (सुब्बा) ।

यस आधारमा नेपाली भाषाको स्रोत केवल संस्कृतमा सीमित छैन । जबकि संस्कृत भाषा स्वयम् आयातित र रैथाने भाषाहरूको यौगिक हो । त्यसैले नेपाली संस्कृतको शाखा हो भन्ने भनाइ नै भ्रमपूर्ण छ । किनभने स्वयम् संस्कृत भाषाभित्र आदिवासी द्रविड र किरातका अनगिन्ति रैथाने शब्दहरू पाइन्छन् । भाषाशास्त्रीहरूले संस्कृत भाषामा द्रविड/तमिल, आदिवासी भाषाहरूको गहिरो प्रभाव रहेको बताएका छन् (इतिहासहिन्दी;ं पाण्डियन;ं लोगन) । सप्तसिन्धुका आदिवासीले बोल्ने द्रविड, तमिल तथा अन्य मातृभाषाका सहयोगमा संस्कृत भाषा निर्माण भएकोमा भाषाशास्त्री एकमत छन् ।

सम' र 'कृत' दुई शब्दका योगले संस्कृत शब्द बनेको छ । 'सम' भन्नाले सबै भाषा तथा 'कृत्' भन्नाले बनाइएको भाषा । साेही अर्थमा संस्कृत शब्द व्युत्पत्ति भएको हो (ईण्डियन इन्स्पायर्स) । यसरी स्वयम् संस्कृत शब्दको शब्दार्थबाट नै यो विभिन्न भाषाको योगले बनेको स्पष्ट हुन्छ । जुन कुरा ऋग्वेदमा संस्कृत के हो भन्ने सवालमा याैगिक बताइएको छ (ऋग्वेद) । भाषाशास्त्रीअनुसार सर्वसाधारणले बाेल्ने प्राकृत भन्दा सभ्य भाषाको विकास शिक्षित र सम्भ्रान्तवर्गले गरे र त्यसमा साहित्य रचना गरे जसलाई सस्कृत भनिन्छ । अतः संस्कृत भाषाको निर्माण र विकास प्राकृत, पाली तथा आदिवासी किरात, द्रविड आदि भाषाका आधारमा भएको हो (इतिहास हिन्दी;ं पाण्डियन;ं लोगन) ।

भाषाशास्त्री बालकृष्ण पोखरेलअनुसार किरात र खसबीच अघि रक्तगत, भौगोलिक, सांस्कृतिक एकता थियो । कालान्तरसम्म यिनीहरूबीच सामिप्यता थियो । यिनीहरू छुट्टिने क्रममा खस समूह सर्दै हिमालयमा पुगे जहाँ नेपाली भाषा विकास भयो (पोखरेल) । यसैलाई हामी खस पर्वते नेपाली भाषाको रुपमा चिन्दछौं । आज यो नेपालको एक राष्ट्रभाषा तथा सम्पर्क भाषा बनेको छ । लिपितर्फ हेरौं । ब्राम्ही लिपिबाट देवनागरी लिपि विकसित भएको हो ।

तथ्यहरूका आधारमा, नेपाली भाषा भारोपेली भाषा परिवारभित्र प्राकृत, पाली, संस्कृत, खस पर्वते भाषा हुँदै विकसित भएको भाषा हो । त्यसैले नेपाली भाषाको नाता केवल संस्कृत, हिन्दी भाषाासित मात्र सीमित छैन ।

अतः नेपाली भाषा संस्कृत वा हिन्दीको शाखा होइन । नेपाली भाषाा हिन्दआर्य समूहभित्र रहे तापनि खस भाषा विकासक्रमको विशिष्ठ पृष्ठभूमि छ । झर्रोवादको गाँठी कुरो नै यही हो ।

**सन्दर्भ–ग्रन्थ**


इन्डिया इन्स्पायर्स (२०१४) मिथ अबाउट संस्कृत, (भिडियो फायल) https://youtu.be/2O4oaDaO36Y

डेनिली र ग्याबिन (२००३) शिव एण्ड प्राइमोडिएयल ट्रेडिसनः फ्रम दि ट्रान्स थु दि साइन्स अफ ड्रिम, इनर ट्रेडिसन, रोच्स्टर, भरमण्ट ०५७६७

पाण्डियन, अर्जुनन् (२०१९) एन्सियन्ट इण्डियन रिलिजन पार्ट ४, एन्सियण्ट इण्डिया, एपिएन

पोखरेल, बालकृष्ण (२०५५) ‘खस जातिको इतिहास”, विराटनगर, उदात्त अनुसन्धान

लोगन, जेम्स रिचर्डसन (१८५३) जनरल क्यारेक्टर अफ दि बर्मा–टिबेटन, गङ्गेटिक, एण्ड ड्रभिडियन ल्याङ्ग्वेजेज, दि जर्नल अफ दि इण्डियन आर्किपेलार्गो एण्ड इष्टर्न एसिया, भोल्युम ७, पृष्ठ १०५–१३७

सरस्वती, दयानन्द (१९३४) ऋग्वेद हिन्दी भाष्य, सार्वदेशिक आर्य प्रतिनिधि सभा, महर्षि दयानन्द भवन, नई दिल्ली, रामलीला मैदान ।

सुब्बा, नवराज (२०७८) “किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना” काठमाण्डौँ, अजम्बरी प्रकाशन

हिस्ट्री इन हिन्दी (२०२०, अगस्ट २९) हरप्पन सिभिलाइजेसन मोहेन्जोदडो इण्डियन ट्राइव इन इन्डिया, हिस्ट्री इन हिन्दी (भिडियो), https://youtu.be/17Xzy612kBA

# १६ दाम्लो लाएर टाईको फूइँ

सबैलाई थाहा छ, कसैको दासत्व स्वीकार्नु अरुको नियन्त्रणमा रहनु वा नोकर बन्नु हो । पढेलेखेका वा जान्नेबुझ्ने मानिस स्वतन्त्र होलान् भन्ठान्थेँ, होइन रहेछ । उनीहरू भलै साहु महाजनका गोठाला नबन्लान् तर नोकरी खाएर नूनको सोझो गर्दछन् । आज विश्वमा मालिक र नोकर दुवैको स्वरुप बद्लिएको छ । समष्टिमा मानिस कुनै न कुनै स्तरको दासत्वले बाँधिएकै हुन्छन् ।

पराधीनताको प्रकार वा स्तरलाई केलाउन सकिन्छ । आज सरकारी नोकरी पाउन तँछाड मछाड चलेको छ । स्वदेशमा जागिर नपाउने वा ठूलो भाग खोज्ने विदेशी भूमिमा लम्केका छन् । उनीहरू त्यहाँका सरकार, सेना, कम्पनीको नोकर बनेका छन् । विदेशी कम्पनीमा हेर्दा भौतिक रुपमा मालिक अगाडि नदेखिए तापनि पर्दापछाडि ढनाढ्यहरू नै बसेका हुन्छन् । त्यही विदेशी कम्पनीको नोकरी निम्ति पासपोर्ट  लिनलाई मानिस परराष्ट्र मन्त्रालयमा लाइन लाग्छन् । यसकारण जीविकोपार्जन, जागिर वा दासत्वको दायरा आज विश्वव्यापी बनेको छ ।

नेपालीले विदेशमा श्रम बेचेर जीवनयापन गर्नु, परिवार पाल्नु, स्वदेशमा रेमिटेन्स पठाउनु अब आम रूपमा सामान्य बनेको छ । मेहनत गरेर खानु वा काम गरिखानु भनेको एक प्रकारले कर्मको पूजा गर्नु हो । चोरेर, ढाँटेर, लुटेर पो खानु हुँदैन, श्रमलाई जीवनको अङ्ग बनाउँदा हामीले कदाचित अफसोच मान्नु हुँदैन । यसमा यत्ति चाहिँ भन्न सकिन्छ कि, विदेशी भूमिको लागि पोखिने पसिना स्वदेशी माटोमा सिंच्न सके देशको मुहार फेरिनेछ । देशको दिगो विकास भएपछि नेपाली स्वाभिमानी शिर उँचा बन्नेछ ।

यहाँ म यस्तो दासत्वको कुरा उठाउँदैछु, जो पहिरनसंग सम्बन्धित छ । यो जान्नेबुझ्ने शिक्षितसितै सम्बन्धित छ । पढेलेखेका वा विदेशी रहनसहनमा भिजेका हामी नेपाली पनि विदेशी जस्तै सभ्य देखिन घाँटीमा टाई लगाउँछन् । जसलाई झर्रो नेपाली भाषामा भन्नुपर्दा घाँटीमा लगाउने सुर्कने पासो भनिन्छ । हो, म यहाँ फेसनमोहमा झल्कने दासत्वको चर्चा गर्दैछु । विदेशीको नक्कल गरेर टाई

लगाउँदा आधुनिक फेशनले झिल्के देखिएला तर नेपालीले टाई लगाएर फूर्ति गर्दा ऊ विदेशीकै दौंतरी देखिन्छ । राष्ट्रियताको आलोचनात्मक दृष्टिकोणबाट हेर्दा, उनीहरू पश्चिमाका अरौटे, भरौटे, वा पछौटे देखिन्छन् । यस्तो भनाइले शिक्षितको चित्त दुख्ला तर ब्यङग्यार्थ त्यही हो ।

दासत्वको शब्दार्थ शब्दकोशमा हेर्न सकिन्छ । मानिसले यसलाई विभिन्न कोण र किसिमले बुझेका हुन्छन् । म यहाँ नेपाली भाषा र साहित्यका एकजना साधक भानुभक्त पोखरेलको चर्चा गर्दैछु । एक समय म उनको चेलो थिएँ । नेपाली भाषाका गुरु तथा साहित्यकार स्व. भानुभक्त पोखरेलसित एक चेलोको रुपमा घटेको एक प्रसङ्गलाई मैले बिर्सन सकिन । उक्त परिघटनालाई लिपिवद्ध गरिन भने गुरुले दिएको शिक्षा ममा सीमित रहन्छ र त्यत्तिकै बिलाउँछ । त्यसैले उनको यादलाई शब्दमा साझा गर्दैछु ।

विराटनगर पुरानो हवाई फिल्डस्थित त्रिविवि स्नातकोत्तर क्याम्पसमा एमए नेपाली पढ्न वि.स. २०५१ सालमा म भर्ना भएँ । हुन त त्यहाँ भर्ना हुन भनेर पहाडबाट झरेको भने पक्कै होइन । मेरो व्यवसायिक अध्ययन चिकित्सा विज्ञान थियो । यसैले म प्रमाणपत्रतहको पढाइपछि प्राविधिक जागिरे भएर विभिन्न जिल्लामा काम गर्न खटिएँ । म एक जनस्वास्थकर्मी त भएँ तर मनमनै विद्यालयदेखिको साहित्यिक लगावलाई चुँडाउन सकिन । फलस्वरुप उक्त साहित्यिक आकांक्षालाई प्राज्ञिक साधनाले धारिलो बनाउन खोजें । त्यसैले जागिरसंगै साहित्य र संस्कृतिको अध्ययन एक प्राइवेट विद्यार्थीको रुपमा गरेँ । स्वअध्ययन गरी निजी परीक्षार्थीको रूपमा त्रिविवि धनकुटा परीक्षा केन्द्रबाट आइ.ए., बि.ए. परीक्षा दिएर उत्तीर्ण गरें । कालान्तरमा, म अधिकृत भएपछि मेरो सरुवा मोरङ जिल्लास्थित क्षेत्रिय मेडिकल स्टोरमा भयो । दुर्गम् जिल्लाबाट सुगम् झर्न पाउनुलाई अवसर ठानेर बिहानको समयमा म नेपाली भाषा र साहित्यको एक विद्यार्थी बनें ।

कलेजमा बिहानी कक्षा थियो । मलाई १० बजे अफिस जान बाधा परेन तर कार्यालय प्रमुख भएकाले कार्यबोझले गर्दा मैले समयको दवावमा पढें । म त्यसबेला पढ्ने सहपाठीमध्ये असम भारतबाट पढ्न आएका केही साथीहरूका मुहार अझै सम्झन्छु ।

पुष–माघको बेला क्याम्पसमा विहानै ६ बजे कक्षा कोठा अँधेरै हुन्थ्यो । गुरु भानुभक्त पोखरेलसित नेपाली कक्षामा पहिलो भेट भयो । त्यसअघि उनको नाम मैले प्रसस्त सुनेको थिएँ । पुस्तक, लेख आदिमा नाम पढेको तथा फोटो देखेकाले चिन्न गाह्रो परेन । फोटामा देखेका व्यक्तिलाई सशरीर देखेर रोमाञ्चित भएँ । कक्षा कोठामा बत्तीको मधुरो प्रकाशमा गुरुले नयाँ विद्यार्थी देखेर मतिर आँखा तेर्स्याएर प्रश्न गरे– अनि तिमीलाई नौलो देख्छु नि ! परिचय?

नाम, थर बताएँ । नाम, थरले मात्र भएन उनले थप प्रश्न गरे । सोध्दैजाँदा उनलाई मेरो जन्मस्थान, जागिर आदि समेत बताइदिएँ । मेरो जन्मस्थान सुनेर म

आठराईवासी भएको थाहा पाउँदा उनको मुहार खुशीले चम्कियो । मेरो जन्मस्थान आठराई हाङपाङ रहेछ भन्ने चाल पाएपछि उनले मलाई मदनमेला, सक्रान्तिबजार, चुहानडाँडा कलेजबारे प्रश्न सोधे । त्यहाँका शिक्षक, समाजसेवीका नाम लिएर केही प्रश्नोत्तर भयो । एकप्रकारले हामी गाउँले लामो समयपछि भेट भएजस्ता भयौं । मैले त्यसबेला हार्दिकतापूर्ण वातावरण महसुस गरें ।

एकदिन गुरुले कक्षामा पढाउँदा पढाउँदै सरकारी अधिकृतको सन्दर्भ कोट्याए । उनले कुरोको कुलो मतिर लक्षित गरे जस्तो लाग्यो । किनभने त्यहाँ कक्षामा पढ्ने विद्यार्थीमध्ये सरकारी अधिकृत ममात्र थिएँ । उनले सरकारी अधिकृतको पहिरनको चर्चा गरे । त्यसबेला टाईबारे निकै लामो ब्याख्या गरे । हुन त मैले कक्षामा जाँदा टाई नलगाए पनि उनले मलाई नै लक्षित गरेजस्तो लाग्यो । निश्चय मलाई सरकारी टाईवाला अधिकृत भन्ठानेर टिप्पणी बर्साउन थाले ।

नेपाली विषयका गुरु न परे नेपाली भाषा, संस्कृति र पहिरनको ब्याख्या गर्नु स्वभाविकै हो । गुरुले चेलालाई नेपाल र नेपालीपन चिनाउनु वा सिकाउनु पर्दछ । यसरी सिकाउने क्रममा अरुका पहिरनको पनि चर्चा आउनसक्छ । यसलाई मैले कुनै नौलो कुरो मानिन । त्यस्ता ब्याख्या मैले अरु गुरुबाट पनि धेरै सुनेको थिएँ । तर, कुरो नौलो नभए तापनि भानुभक्त गुरुले त्यसदिन पढाएको पाठ भने मनमा गढ्यो ।

मैले मेरा विद्यालयका दिन सम्झें । अतीतलाई वर्तमानसित तुलना गरें । आजकल हाम्रो शिक्षा प्रणाली देख्दा अचम्म लाग्छ । नेपालका बोर्डिङ स्कुल हेरौं, तिनीहरू विदेशी शैलीमा कुनै पाँच तारे होटलझैं ठड्याइएका छन् । ती विद्यालयभन्दा पनि नेपालीका छोराछोरीलाई भविश्यमा विदेश पठाउनकै लागि तालिम दिने कारखाना भएका छन् । उदाहरणस्वरुप, विभिन्न बोर्डिङ स्कुल हेरौं, विद्यालयको नाममा नै अंग्रेजीकरण छ । तिनीहरूको कार्यशैली हेर्दा कुनै विदेशी स्कुल बन्ने होडबाजी छ । त्यहाँ अङ्ग्रेजी बोल्नुपर्छ, टाईसुट लगाउनु पर्दछ । अंग्रेजी संस्कार र शैलीले प्रशिक्षित आजका बालक वा भोलीका भविश्य उतै डोरिएको हुन्छ ।

आजको सन्दर्भमा मेरो बाल्यकालका कुरा सुन्दा अलि नपच्ला । यो त कस्तो पाखे मान्छे पो रहेछ, भन्लान् । हुन पनि म त्यही पाखाभित्ताको धुलोमाटो खेलेरै हुर्केको एक विद्यार्थी हुँ । कसैले मलाई त्यो मान्छे गाउँले रहेछ, पाखे रहेछ भन्यो भने मलाई अब रिस उठ्दैन, बरु माया गरे जस्तो पो लाग्दछ । त्यसैले त्यही प्यारो मेरो बाल्यकालका कुरा अर्थात् विद्यालयका कुरा यहाँ कोट्याउँदैछु । त्यसबेलाका बालबालिकाका मनोभावनाबारे जानकारी दिंदैछु ।

उहिल्यै हामीले विद्यालयमा हेडसरले मात्र टाई लगाएको देखेका थियौं । उसबेला यदाकदा लाहुरे छुट्टिमा आउँदा हाटबजारतिर टाईसुट लगाएको देख्दथ्यौं । उनीहरूको टाई देखेर हामी कस्तो गाईवस्तुलाई घाँटीमा बाँधिदिने दाम्लोजस्तो पहिरन होला जस्तो ठान्दथ्यौं । घाँटीमा सुर्कने पारेर बाधिएको ठाउँ कुनै शत्रुलाई

समात्न सजिलो दाम्लोझैं लाग्दथ्यो । हामीलाई बाल्यकालमा यो टाई कताकता दुश्मनलाई सजिलाका लागि भिरिएको एक खतरनाक वस्तुजस्तो लाग्दथ्यो । झगडा पर्दा यसैमा समाएर घिसाऱ्यो भने बिताउने रहेछ जस्तो लाग्दथ्यो । हामी बालशखा यस्तै तर्कवितर्क गर्दथ्यौं । यस्तो चीज किन बनाएको होला भनेर हामी भन्दथ्यौँ । कोही साथी भन्दथे, यो त्यसैले भुराभुरीले लाउने होइन । पढेर भलाद्मी भएपछि मात्र लगाउने चीज होला ।

हुन पनि टाई लगाएका विदेशी राष्ट्रप्रमुख, सरकार प्रमखका फोटा पत्रपत्रिकामा देख्दथ्यौं । उनीहरू हात मिलाएर हाँसेका हुन्थे । कताकता यो पहिरन ठूलाबडाले लगाउने चीज नै हो भन्ने टुङ्गोमा हामी लगभग पुग्यौं । तापनि यदी कसैले टाई लगाएको देख्यौं भने हामी खुब कुरा काट्दथ्यौं । हामी केटाकेटी मुख छलेर मज्जाले हाँस्दथ्यौं । हेर न साथी, आज त फलानाले दाम्लो पो भिरेर आएछ त ! हामीलाई एक छिन ख्यालठट्टा गर्न वा हाँस्न पुग्दथ्यो । यद्यपि यस्तो अप्ठेरो चीज महिलाले चाहीँ लगाएको कतै देखेनौं । यसमा भने महिला खतराभुक्त भएकामा हामी आश्वस्त भयौं ।

बाल्यकालको उही पुरानो छापले गर्दा आफन्तले दिएको उपहार टाईलाई मैले बाकसमा पट्याएर कपूरसहित थन्काएर राखें । जब म अधिकृत पदमा नियुक्त भएँ, कहिलेकाहीँ टाई लगाउन बाध्य भएँ । अघि थन्काएर राखेका टाई निकालेर बेलाबेला धक मान्दै लगाउन थालें । शहरबजारमा आयोजित कार्यक्रम, भोजभतेर, विवाहमेला आदिमा यो लेखक बेलाबेला लाज मान्दै टाई लगाएर छिऱ्यो । त्यसबेला मनमा भने उही भानुभक्त गुरुको वाणीले लखेटिरहन्थ्यो । अतीतका छाप र गुरुका वाणीले टाई लगाएर बाहिर जत्ति ठाँटिए पनि भित्र भने नूर गिरेकै थियो ।

खै के गर्नु कोही लाहुरे साथीभाइले उपहारमा दिएका टाइका मूठा त छन् तर कहिल्यै धक फुकाएर लगाउन सकिएन । फाल्नु पनि माया लाग्छ । नेपालमा पैण्ट शर्ट लगाउने चलन आम भइसक्यो । त्यसमाथि जाडोमा कोट पनि लगाउनै पऱ्यो । त्यसैमा मफलरको सट्टा स्वीटरले छातीमा छेलेर घाँटीमा अलिकति मात्र देखाएर लगाउँदा चिसोबाट बचिने, भलाद्मी पहिरन लगाएको पनि हुने भनेर मनमनै आकर्षित हुन थालें । एक मन लजाउँथ्यो अर्को मनले सम्झाउँथ्यो । यसरी एकातिर अलि लजाउँदै अर्कातिर आफूलाई थम्थमाउँदै मैले बेलाबेला टाई लगाएँ ।

मलाई त्यस्तो गाह्रो त्यसै परेको होइन । भानुभक्त गुरुले कक्षाकोठामा टाईबारे करिव १५–२० मिनेट दिएको भाषणले मेरो मनभित्र आँधीबेहरी ल्याइदिएको थियो । मभित्र अलिअलि टुसाएको टाईमोहलाई उनले लछारपछार पारेर सोत्तर बनाइ तल घुरेनमा पुऱ्याइदिएका थिए । उनले दिएको उद्‌गारमा टाईबारे विभिन्न नकारात्मक बिम्व, प्रतीक मिसिएका थिए । पश्चिमेली सभ्यताकाविरुद्ध पूर्वीय सभ्यता र दर्शनबारेमा ब्याख्यान दिएका थिए । उनको भाषणले मेरा भित्री आँखा त्यसबेला खुले । यसो भनौं, त्यसबेला गुरुले दिएका वचन मेरा कानबाट पसेर सिधै मनभित्र गढिए ।

जेहोस् टाई लगाउनु र दासत्वबीचको सम्बन्धबारे थाहा पाएर म कायल भएँ । जवाफ फर्काउनै नसक्ने गरी म थला परें । टाईको पक्षमा टक्रक्क उभिन नसक्ने गरी म जवाफविहिन भएँ । त्यसैले मलाई त्यसपछि टाई लगाउँदा भित्रैदेखि आत्मग्लानीले पोल्न थाल्यो । मैले अफिसमा घाँटीमा टाई भिरुञ्जेल बन्धनमा परेको जागिरे परें भन्ने लघुताबोध महसुस गरिरहेँ ।

उहिले गाउँमा केही शिक्षक कम्यूनिष्ट विचारधारा फैलाउनेले खालका थिए । विद्यार्थी पनि गुरुका भक्त चेला हुन्थे । शिक्षक र विद्यार्थी नेता बेलाबेला भाषण गर्दा भन्थे– अब महिला मुक्ति, गरिब मुक्ति गर्नुपर्दछ । हामी भुराभुरीले त्यसबेला हातका चुरा फुकाएर, गलाका पोतेमाला छिनालेर नारी मुक्ति हुन्छ रे भनेको सुन्दा अलमल्ल पर्दथ्यौं । भानुभक्त गुरुले सोही शैलीमा पश्चिमेली दासत्व झल्काउने टाईविरुद्ध शंखनाद गरे । अब टाई नफुकालेसम्म हामी पश्चिमेलीको शारीरिक, मानसिक तथा आर्थिक कब्जाबाट कहिल्यै मुक्त हुनसक्दैनौं, गुरुको शिक्षासार यही थियो ।

हुन पनि हो, हामीले अरुको पहिरन लगाएर उनीहरू जस्तै देखिएला । विदेशीको नक्कल गरेर नेपाल र नेपालीपन कहिल्यै जोगाउन सक्दैनौं । गुरुले भनेझैं नेपालीको स्वाभिमानको शिर टाईले होइन टोपीले ठडाउँछ, दौरासुरुवालले झल्काउँछ । भन्दाभन्दै गुरुले यत्तिसम्म भने– मलाई टाईवाला मानिस विदेशी दलालजस्ता लाग्छन् । गुरुको यो भनाइ आज नेपालमा कटुयथार्थ बनेको छ ।

मैले गुरुका भनाइ १०० मा ९९ जत्ति मनमनै सझिएँहोला जस्तो लाग्छ । धेरै समय यी कुरा मनमा खेलाएँ । गुरुको कुरो गहिरिएर हेर्दा साँचो लाग्यो । गुरुको भनाइले मेरो मनभित्र रहेको देशभक्ति भावनालाई मलजल गऱ्यो । आजकल बेलाबेला राष्ट्रिय पहिरनको कुरो चल्छ । त्यसबेला म आदरणीय गुरु भानुभक्त पोखरेललाई झल्झली सम्झन्छु । गुरुले दिएको ज्ञान तत्काल अलि तीतो लाग्यो होला तर समयकाल बित्दै जाँदा मीठो लागेको छ । हुन पनि अर्ती र ओखती खाँदा तीतो तर गुण निको मानिन्छ ।

# १७ सम्झनामा गुरूहरू

हामी गुरूलाई सम्झन्छौं, विहान सम्झन्छौं, साह्रो गाह्रोमा सम्झन्छौं अनि सम्झन्छौं आफूले गरेका महत्वपूर्ण कुरा देखाउन वा सुनाउनलाई ।

अहिले म मेरो जन्मस्थल ताप्लेजुङ जिल्लाको आठराई हाङपाङमा अवस्थित सरस्वती माद्यमिक विद्यालयलाई मानसपटलमा झल्झली देखिरहेछु । आफूले विद्यालयमा पढ्दाताकाका आदरणीय गुरूहरूलाई पुनः सम्झना गर्दै सामान्य चर्चा गर्न चाहन्छु । यदि कुनै गुरुको नाम छुट हुन भएमा वा कुरा तलमाथि परेमा क्षमा चाहन्छु ।

मलाई कखरा पढाउने आदरणीय जन्तरेसर अर्थात् वीरवहादुर आङबुहाङलाई म सबैभन्दा पहिले सम्झन्छु । मेरो चेतना आएपछि मैले गुरु भनेर चिनेका उनै जन्तरे सर हुन् । त्यसैले म उनलाई कहिल्यै विर्सन सक्दिन । उनी हामी भुराभुरी विद्यार्थीलाई सारै राम्ररी फकाएर, फुन्क्याएर, सम्झाएर, जिस्क्याएर कहिले कड्किएर सम्झाउने, पढाउने गर्दथे । कहिलकाहीँ विद्यार्थीले अटेरी गर्दा ठूलोस्वरमा बोले तापनि त्यो मायामिश्रित खवरदारी मात्र हुने गर्दथ्यो । कक्षामा पढाएको पाठ आएन भने अरू सरहरूले जस्तो आँखा चिम्लेर लट्ठीले कहिल्यै पिटेनन् । उनका हातमा हामीले कहिल्यै छडी नै देखेनौं । उनको लौरो भने पनि जे भने पनि हतियार उनकै हातको टक्करी–ट्वाक नै थियो । त्यै टक्करी प्रहार गर्न खोज्दा उनले औंला टाढैबाट विद्यार्थीतिर सोझ्याउँदै माइली औंला कुप्रो पारेर हामी भुराभुरीको टाउकामा प्रहार गर्ने गर्दथे ।

त्यो टक्करी टाउकामा लागेपछि ट्वाक्क आवाज आउँथ्यो । त्यसैले यो पिटाइको नाम नै टक्करी ट्वाक थियो । धेरै जसो उनले टाढैबाट टक्करी दिने औलों कुप्रो पारेर सोझ्याएपछि हामी भुराभुरीलाई काम पुग्दथ्यो । यदाकदा टाउकोमा टक्क टक्करी हानेपछि एकछिन 'आत्थाथा' गर्‍यो, एकैछिनमा निको भैहाल्दथ्यो, धेरैबेर दुख्दैनथ्यो । तर पनि हामी केटाकेटी जन्तरेसरको टक्करी भने पछि निकै डराउँथ्यौं । आज सम्झँदा उनलाई भेटेर टक्करी खान पाए पनि हुन्थ्यो जस्तो लाग्छ । त्यो मायामिश्रित मीठो टक्करी दिने गुरु अब यो दुनियाँमा छैनन् । बेलाबेला जन्तरे सरको त्यो टक्करी अझै पनि मेरो शिरमाथि आशिर्वाद झैं घुमिरहे जस्तो लाग्दछ ।

अलि ठूलो हुँदै गइयो । अर्का गुरु नरमान मोक्तानसरको फेला परियो । कक्षामा नरमान सरको विषय गणित थियो । उनी सारै मेहेनती शिक्षक थिए । उनले पनि विद्यार्थीलाई लौरोले कहिल्यै पिटेनन् । उनी त झन् विद्यार्थीलाई ठूलो स्वरले गाली पनि गर्दैनथे । उनी सोझो र नरम स्वभावका शिक्षक थिए । सोधेको जानेन भने 'खै खै यो मोराको' भन्दै गाला चिमोट्ने सम्म गर्दथे । यदाकदा हातमा बोकेको पुस्तक गोलो पारेर टाउकामा हिर्काइदिन्थे । त्यो हिर्काइलाई विद्यार्थीले सजिलै छल्दथ्यो उति दुखाइ नै हुँदैनन्थ्यो । उनले बेलाबेला हातले गाला चिमोट्दा त्यत्ति त्यति दुख्दैनथ्यो । त्यसैले नरमानसरलाई हामी विद्यार्थीलाई माया गर्ने जातीसर भन्ने गर्दथ्यौं ।

नरमानसरको घरको आर्थिक अवस्था कमजोर थियो भन्ने चाल पायौं । उनले सरस्वती विद्यालयमा पढ्दा अरूको घरको काम सघाएर हाईस्कुल पास गरेको कुरा खासखुस सुनिन्थ्यो । हामी विद्यार्थी उनको संघर्षशीलता, विनयशीलता र परिश्रमी स्वभाव र असल व्यक्तित्व देखेर प्रभावित थियौं । हामी उनलाई आदर र प्रेमपूर्वक नमस्कार गर्ने गदथ्यौं । उनको ब्यवहार मात्र होइन उनका परिवारका सबैजना सदस्यहरू उस्तै सरल र विनम्र स्वभावका थिए । उनीहरू केटाकेटी, बुढाबुढी सबैसित मिलनसार थिए । जेहोस्, नरमानसरको शारीरिक बनौट हेर्दा हट्टाकट्टा खाइलाग्दा देखिन्थे ।

म ६/७ कक्षामा पुग्दा गणित विषयमा निकै मेहनत गर्नु पर्दथ्यो । कक्षामा पढेकाले मात्र नपुग्ने अवस्था भयो । घरमा एक्लै गणित अभ्यास गर्न कठिन हुने भएकाले हामी केही विद्यार्थी मिलेर नरमान सरको घरमा राती ट्युसन पढ्न जान थाल्यौं । यसरी ट्युसन पढाएबापत नरमानसरले हामी विद्यार्थीसित एकै पैसा फिस लिएनन् । त्यसबेला गाउँघरमा ट्यूसन पढ्ने पढाउने चलन उति थिएन । यदाकदा ट्यूसन पढाइन्थ्यो तर पढाएबापत पैसा लिने चलन थिएन । विद्या दान गर्ने वस्तु ठानिन्थ्यो । ट्यूसन पढ्दा राती वत्ति बाल्नका लागि मट्टीतेलको जोहो विद्यार्थी आफैले गर्नुपर्दथ्यो । त्यसैले हामी विद्यार्थीहरू आफै पालैपालो मट्टितेल लिएर पढ्न जाने गर्दथ्यौं ।

गाउँघरमा त्यसबेला टेबल, खाटको व्यवस्था त्यत्ति थिएन । मतानघरमा गुन्द्रीमा हामी घँडा धसेर निहुरिएर बत्तीलाई वरिपरि गोलो घेरा हालेर घोप्टोमारी गर्दथ्यौं । पढ्दा मौरी भुनुनु गरेझैं आवाज निकाल्दै पढ्दथ्यौं । राति पढिसकेपछि सुत्नलाई विछ्यौनाको व्यवस्था पनि हामी आफैले गरेका थियौं । भुईमा ओछ्याउने गुन्द्री, गजरा, पिरा आदिको व्यवस्था भने नरमान सरले गरिदिएका थिए । नरमान सरकी धर्मपत्नी गुरुआमा, नरमान सरकी दिदीबहिनीहरूले हिउँदमा आँगनमा प्रायः गुन्द्री बुनिरहन्थे । हामीले उनीहरूबाट गुन्द्री, गजरा, पिरा आदि निशुल्क पायौं । पराले गुन्द्री, गजरामा हामी पढ्ने र सुत्ने गर्दथ्यौं । हामी विद्यार्थी करिव आधा दर्जन जति भेला हुन्थ्यौं । हामीलाई घर छेउको मतान तलामा सुत्ने ठाउँको व्यवस्था गरिएको थियो । नरमान सरले साँझ खाना खान अघि तथा खाना खाएर

सुत्नअघिसम्म हामी विद्यार्थीलाई झर्को नमानीकन पढाइदिन्थे ।

म यसबेला सगै पढ्ने विद्यार्थी समूहलाई पनि सम्झन्छु । नारायण, उदयराज, नरेन्द्र, हरि, जयप्रसादहरूको याद आइरहन्छ । नरमान सरले राती खाना खाएपछि भेला भएकालाई क–कसको के के पाठ छ सरसर्ती सिकाइ दिने गर्दथे । अरू त त्यस्तै हो घुँडा धस्दा त्यसबेला हाम्रो सुरूवालको चाहिँ दोहोलो काडिन्थ्यो । एकै दिनमा सुरूवालको घुँडा भुईमा बिछ्याएको गुन्द्रीमा घोटिएर प्वाल परिहाल्दथ्यो । खाँडीको कपडा भए दुईचार दिन थाम्दथ्यो नत्र अन्य कपडाको सुरुवाल भए एकैदिनमा नटाली नहुने गरी फाट्दथ्यो । दर्जीकोमा हरेक शुक्रवार, शनिवारका दिन सुरुवाल टाल्न जान पर्दथ्यो ।

प्रायः सुत्नेबेलामा हामी विद्यार्थी खूब हँस्यौली गर्दथ्यौं । नारायणले कुनै कुनै शब्द उच्चारण गर्दा लिम्बू लवज सुनिन्थ्यो । उनी मट्टितेललाई 'मट्टेल' भन्दथे, त्यसैलाई टिपेर हामी फलानाले आज त्यो शब्दलाई यसो भन्यो भन्दै मरिमरि हाँस्दथ्यौं । अर्का एकजना साथी थिए हरि, उनी पदार्थलाई 'पदाथ' मात्र उच्चारण गर्दथे । हामी उनको त्यो कक्षाको कुरा निकालेर सुत्ने बेलामा मरिमरि हाँस्दथ्यौं, हाँस्दाहाँस्दै भुसुक्क निदाउँथ्यौं । निदाउन अघि बेलाबेला भूत, किचकन्नी र करबिरे मसानको कुरा झिकेर आफै डराउँदै डल्लो परेर सुत्दथ्यौ र निदाउँथ्यौं ।

राती पिसाव फेर्न उठ्दा हामीहरू आकाशको जुन, तारा हेर्दथ्यौं । कुनै कुनै तारा सरेको देखेर रमाइलो मान्दथ्यौं । कोही साथी कुरा निकाल्थे, हामी अब कसरी स्वर्ग जाने होला? पिसाब फेर्दाफेर्दै के गर्दा स्वर्ग जान सकिएला भनि छलफल गर्दथ्यौं । यो कुराकानी फर्केर पुनः ननिधाउन्जेलसम्म चलिरहन्थ्यो ।

अब एकजना रोमान्टिक छविका गुरुलाई सम्झन चाहन्छु । उनी थिए बेनु चुडाल सर । वास्तवमा उनको कुरा नगरे विद्यालयका गुरुवर्गको वर्णन कार्य अधुरो रहन्छ । उनलाई आठराई, तेह्रथूम, ताप्लेजुङतिरका प्रायः सबैले चिन्दथे । उनी विद्यालयका शिक्षकहरूमा सर्वाधिक लोकप्रिय थिए । किनभने उनी पढाउने कामका अतिरिक्त खेलकूद शिक्षक पनि थिए । विद्यार्थीलाई उनी विभिन्न खेल खेलाउँथे । हाङपाङ स्कुलको भलिबल टिमको उनी झप्पा हान्ने खेलाडी थिए । सांस्कृतिक कार्यक्रमतर्फ नाचगानमा हारमोनियम बजाउने, गीत गाउने गुरू थिए । उनी अभिनय गर्न पनि जान्ने एक कुशल कलाकार थिए । सांस्कृतिक कार्यक्रममा उनी दर्शकलाई पेट मिचिमिचि हँसाउँने गर्दथे । उनको अभिनय एकपटक देखेपछि मान्छे उनको प्रशंसक भइहाल्थे । अन्यत्र उनको नाम लिनासाथ मानिस अभिनय सम्झेर उज्यालो मुहार लाउँथे र उनलाई चिन्ने गर्दथे ।

उनी लिम्बू भाषा बोल्न पनि सिपालु थिए । सांस्कृतिक कार्यक्रममा दर्शक लिम्बू जाति बढी हुन्थे । त्यसैले उनी लिम्बू भाषामा बोलेर, गीत गाएर दर्शकलाई हँसाउथे । त्यति मात्र हैन उनी लिम्बू भाषामै पालाम गाउने र धान नाच्ने पनि गर्दथे । पछि हाटमेलामा दोहोरी गीतमा भाग लिएर उनले थुप्रै प्रतियोगिता जितेको समाचार हामी सुनिरहन्थ्यौं । त्यति मात्र कहाँ हो र ! उनी एक पोख्त झारफुके

समेत थिए । मानिसलाई दुःखबिमार लाग्दा फुक्ने र लागोसागो झार्ने काम पनि उनी गर्दथे ।

त्यसैले बेनुसर शिक्षक मात्र नभएर समाजको अत्यन्त उपयोगी पात्र थिए । अहिलेको भाषामा उनी सेलिब्रेटी नै थिए भन्दा फरक पर्दैन । पाठकलाई अचम्म लाग्ला, मेरो र चञ्चलाको शुभविवाहको फेदाङ्बा उही बेनुसर थिए । उनले नै लिम्बू परम्परा अनुसार एकजना किरात लिम्बू फेदाङ्बाका साथमा हाम्रो विवाहकर्म सम्पन्न गरिदिएका थिए । त्यसैले उनी मेरो गुरु मात्र नभएर जीवनको महत्वपूर्ण कर्मसित गाँसिएको एक विशिष्ठ पात्र पनि हुन् । तसर्थ, म उनलाई सदा श्रद्धापूर्वक सम्झन्छु ।

अब म विदेशी गुरुको नाम लिन चाहन्छु । मलाई बाल्यकालमा अङ्ग्रेजी सिकाउने गुरुमध्ये एकजना अमेरिकी स्वयमसेवी पनि थिए । उनी अमेरिकी स्वयम्सेवी संस्था पिसकोर कार्यक्रमबाट खटिएर आएका थिए । उनको नाम पूरा थाहा भएन तर बोलाउने नाम चाहीँ पीटर थियो । उनले अङ्ग्रेजी सिकाउँदाको कक्षा अझै आँखामा झल्झली याद आउँछ । हामी अंग्रेजी शब्द 'स्कुल'लाई लेख्दा 'स्कुल' लेख्छौं तर पढ्दा वा बोलिचालिमा भने अझै 'इस्कुल' भन्दछौं । उनले त्यसलाई ओंठ गोलो पारेर लामो स्वास तान्दै 'स्स्कुल' भन्न सिकाए । त्यसैगरी अङ्ग्रेजी शब्द 'स्टुडेण्ट'लाई हामी 'इस्टुडेण्ट' उच्चारण गर्दछौं र बोलिचालिमा पनि 'इस्टुडेण्ट' नै भन्दछौं । उनले त्यसको शब्दोच्चारण गर्दा अघिझैं हामीलाई ओठ गोलो पार्न लाएर 'स्स्स्टुडेण्ट' भन्न सिकाए ।

हामीलाई त्यत्ति सामान्य कुरा के ढर्रा पार्नु परेको होला जस्तो लाग्दथ्यो । त्यसबेला हामी सही उच्चारण गर्न नजानेर मरिमरि हाँस्दथ्यौं । तर कमी अझै रहेकाले उनको सम्झना घरिघरि आउँछ र याद रमाइलो लाग्दछ । अङ्ग्रेजी विषय कति रमाइलो खेल जस्तो रहेछ भनेर हामी रमाइलो मान्दथ्यौं । सरले यो के गराएको होला भनेर हामी विद्यार्थी अचम्म पनि मान्दथ्यौं । आखिर जाँचमा काम नलाग्ने भनेर सायद हामीले त्यसलाई त्यत्ति महत्व दिएनौं । कुकुरको पुच्छर बाह्र वर्ष ढुङ्ग्रामा हाले पनि जस्ताका तस्तै भनेझैं भयो । उसबेला उच्चारण सिकाउँदा गम्भीरतापूर्वक नलिएकाले अङ्ग्रेजी शब्दोच्चारणमा म अझै समस्या पाउँछु । जेहोस्, अंग्रेजी शब्दोच्चारण समस्या परेको बेलामा म घरिघरि उही पीटर गुरुलाई सम्झन्छु ।

अब म एक प्रतिभाशाली गुरु प्रल्हाद प्रसाईको चर्चा गर्दैछु । आठराई हाङपाङको सरस्वती माद्यमिक विद्यालयबाट एसएलसी पास भएपछि शिक्षक नियुक्ति पाउने उनी आफ्नो कक्षाको जेहेन्दार विद्यार्थी थिए । दश कक्षा पास गरेर दश कक्षालाई नै पढाउन सक्ने व्यक्तिको रुपमा उनको चर्चा गरिन्थ्यो । उनको पढाउने शैलीले गर्दा पनि उनी एक कुशल शिक्षकको रूपमा स्थापित भए ।

प्रल्हाद प्रसाई सरले सरस्वती माद्यमिक विद्यालयमा अध्यापन गर्दागर्दै प्राइभेट विद्यार्थीको रूपमा स्वअध्ययन गरे । बर्षमा एकपटक त्रिभुवन

विश्वविद्यालयको विराटनगरस्थित परीक्षा केन्द्रमा सामेल भए । उनले निजी पढाइमार्फत् त्रिभुवन विश्वविद्यालयबाट आई.ए. र बि.ए. उत्तीर्ण गरे । त्यसपछि सरकारी कोटामा त्रिविवि कीर्तिपुरबाट बि.एड. पास गरे ।

प्रल्हाद सरलाई हामी पीपीसर भन्दथ्यौं । पीपीसर त्यसपछि लोकसेवा आयोगको परीक्षमा सम्मिलित भए । उनले प्रशासन र परराष्ट्र सेवा दुवैमा शाखा अधिकृतमा नाम निकाले । उनी त्यसपछि परराष्ट्र सेवामा प्रवेशगरी इजरायलको नेपाली राजदूत पदसम्म पुगेर सेवानिवृत्त भए ।

उनी मेरो प्रिय गुरू हुन् । सायद म पनि उनको एक प्रिय शिष्य हुँ । मैले विद्यार्थी जीवनमा उनीसित धेरै सरसङ्गत गरें । उनको घरमा राती गएर ट्युसन पढें । किताबी ज्ञानको अतिरिक्त तर्कशास्त्र, विज्ञान, प्रविधि, र व्यक्तित्वविकासका धेरै ब्यवहारिक तथा सैद्धान्तिक ज्ञान र तरिका उनीबाट सिकें । उनले सिकाएपछि मैले हरेक दिन डायरी लेख्न थालें । विद्यालयस्तर देखि थालेको यो बानी बीचबीचमा टुटेपनि अहिलेसम्म पनि कुनै न कुनै रूपमा कायम छ ।

उनी विद्यालयमा अध्यापन गर्दा काठमाडौंबाट झिकाएर रूपरेखा, मधुपर्क र गरिमा नियमित रुपमा पढ्दथे । मैले पनि माध्यमिक विद्यालयदेखि नै ती पत्रिका हेर्ने र पढ्ने बानी बसाएँ । अलि पछि अन्तराष्ट्रिय मञ्च, साइन्स टुडेजस्ता पत्रपत्रिका नियमित रूपमा पढ्ने बानी उनैको सङ्गतले बस्यो । मार्क्सवादी तथा भौतिकवादी विश्लेषण तथा वैज्ञानिक चिन्तनशैलीको प्रारम्भिक प्रशिक्षण मैले उनैबाट पाएँ । धार्मिक ग्रन्थ तथा आध्यात्मिक दर्शनलाई कसरी बुझ्ने भन्ने प्रारम्भिक ज्ञान पनि मैले उनीबाट पाएँ । जेहोस्, व्यक्तित्व विकासमा उनको जीवन शैलीको गहिरो प्रभाव ममाथि परेको ठान्दछु । अतः उनी मेरा प्रातःस्मरणीय गुरु हुन् ।

अर्का गुरू थिए श्रीकृष्ण प्रसाई । उनी निडर र प्रष्टवक्ता थिए । उनको फेशनप्रति लगाव थियो । उनको कपालको स्टायल, कपडा लगाइ आधुनिक थियो । विद्यार्थीका लागि उनको स्वभाव खरो मानिन्थ्यो । कक्षामा पाठ बुझाउन नसक्दा उनी विद्यार्थीलाई छडीले हातमा हिर्काउँथे । उनको हिर्काइको पीडाका बारेमा विद्यार्थीमाझ चर्चा हुन्थ्यो । त्यसैले उनीसित विद्यार्थी अलि डराउँथे । उनलाई हामी केपीसर भन्दथ्यौं । केपीसर कक्षामा पाठ पढाउँदा चर्को स्वरमा बुझाउने गर्दथे । विषयवस्तुमा जानकार भएर पढाउने उनको बानी थियो ।

विद्यालयको एक साहित्यिक गोष्ठीमा मैले लालीगुराँस शिर्षकमा कविता लेखेर वाचन गरेको थिएँ । उनै केपीसरले गोष्ठी सकिएपछि 'धत् तिमीले माओको कविता लेख्नु पर्दैन' भनेर टिप्पणी गरे । म अक्क न बक्क परें । सायद त्यसबेला गाउँमा कम्युनिष्ट लहर चलेको थियो । ठूल्ठूला विद्यार्थीहरू विद्यालयमा माओको बिल्ला छातीमा भिरेर आएको मलाई अझै याद छ ।

विद्यालयमा प्रधानाध्यापक वा अन्य कुनै शिक्षकको आलोचना गरेको कतै सुनिदैनथ्यो । विद्यार्थीमाझ हेडसरको विरोध गर्ने शिक्षक सुरुमा केपीसर देख्यौं ।

उनी निडर स्वभावका थिए त्यसैले उनी त्यो फलाना यस्तो, चिलाना यस्तो भनेर ठाडै आलोचना गरिदिन्थे । हामी भुराभुरीलाई अचम्म लाग्दथ्यो । कम्युनिष्टमा लाग्नेलाई त्यतिबेला जागिर खान ज्यादै कठीन थियो । पुलिस रिपोर्टले खत्तम पारिदिन्थ्यो । एकदिन उनको विवाह जालपा पाण्डे दिदीसंग भयो । विद्यार्थीसित विवाह भएकाले नैतिक रुपमा उनले हाङपाङ छाड्ने निधो गरे । उनी त्यसपछि काठमाडौं लागे ।

उनको संघर्षमय जीवन निरन्तर जारी थियो । निजामति सेवामा प्रवेश गरेर नेपालको दुर्गम जिल्ला दार्चुलामा उनले लामो काल सेवा गरे । निजामति सेवाबाट सेवानिवृत्त भएपछि उनी हाल काठमाडौंमा बसोबास गर्दै राजनीतिक जीवनलाई निरन्तरता दिँदैछन् । हाल उनी नेपाली कांग्रेसमा सक्रिय छन् । हामीले बाल्यकालमा सुन्दथ्यौं, मानिस सुरुमा कम्युनिष्ट हुन्छ अनि विवाह भएपछि कांग्रेस हुन्छ । मैले त्यस्ता लहरमा सर्वसाधरण मात्र हैन गुरुहरू पनि उभेको देखें ।

अब म अर्का एक प्रतिभावान गुरु काजीमान यक्सोको चर्चा गर्दैछु । हामी उनलाई केएम सर भन्दथ्यौं । उनी यस्ता शिक्षक थिए जो भाषण गर्नुपर्‍यो भने घण्टौं धाराप्रवाह बोल्न सक्दथे । पछि एकपटक उनी हाङपाङ गाउँको उप–प्रधानपञ्चमा पनि निर्वाचित भए । उनमा काव्यिक क्षमता पनि थियो । उनले मुनामदन शैलीमा काव्य लेखेर पाण्डुलिपि राखेका छन् भन्ने हल्ला सुन्दथ्यौं । अंग्रेजीमा पनि उनी धाराप्रवाह बोल्न सक्दथे । उनको घर प्रल्हाद प्रसाईको नजिकै भएकाले संगै विद्यालय आउने जाने गर्दथे । घरबाट विद्यालय आउँदा र जाँदा बाटोमा दुई जना अंग्रेजीमा फरर गफ गरेर सबैलाई चकित पार्दथे । लाग्दथ्यो, उनीहरू विद्यार्थीलाई अंग्रेजी बोल्न प्रोत्साहित गर्दथे । उनीहरूबीच बोल्नलाई विषय खास केही नभए तापनि कुनै समसामयिक सवालमा घन्टौ छलफल गर्दथे । केएम सर जापानको पक्षधर अनि पीपी सर अमेरिकाको पक्षधर भएर वादविवाद गर्दथे । तिम्रो अमेरिकामा के छ हाम्रो जापानमा यस्तो छ भनेर केएम सर बोल्दथे । पीपी सर केएम सरलाई तिम्रो जापानमा के छ हाम्रो अमेरिकामा यस्तो छ भनेर रमाइलो छलफल गर्दथे । अमेरिका र जापानको बारेमा जानकारी बटुल्न उनीहरू रेडियो सुन्ने र पत्रपत्रिका पढ्ने गर्दथे । हामी विद्यार्थीहरू गुरुबीचका ती रमाइला र वौद्धिक गफ चाख मानेर सुन्दथ्यौं । सोच्दथें, म पनि कहिले त्यसरी बोल्ने होला?

सरस्वती माद्यमिक विद्यालयमा एकताका राष्ट्रिय विकास सेवा अन्तर्गत स्नातकोत्तर तहका विद्यार्थीहरू आएर अध्यापन गरे । त्यसबेला त्रिवित्रिका विद्यार्थीले स्नातकोत्तर तहको अन्त्यमा तथा विदेशमा छात्रवृत्तिमा पढेर आएकाले गाउँ गाउँमा गएर पढाउनु पर्ने ब्यवस्था गरिएको थियो । उनीहरू नेपाल सरकारले खटाएको दुर्गम क्षेत्रमा गएर एक वर्ष शिक्षकको रुपमा सेवा गर्दथे । सोही क्रममा काठमाडौंबाट इन्जिनियरिङ तथा चितवनमा कृषि पढाइ सकेर आएका तीनजनालाई हामीले विद्यालयमा शिक्षक रुपमा पायौं । हामीले आठ कक्षामा गणित पढाउने शिक्षक श्यामकृष्ण पौडेल पायौं । उनी हामीलाई गणित र विज्ञान

पढाउँथे । नयाँ शिक्षा योजना विद्यालयमा भर्खर लागेको बेला थियो, हरेक महिना एकाई परीक्षा हुन्थ्यो । श्यामकृष्ण सरबाट गणितको एकाइ परीक्षामा मैले धेरैचोटी पूर्णाङ्क पाएँ । मैले त्योभन्दा अघि परीक्षामा त्यसरी पूर्णाङ्क पाएको थिइन । पछि वार्षिक परीक्षामा पनि विशिष्ठ श्रेणी अर्थात् डिष्टिङसन अङ्क ल्याएर ८ कक्षाबाट ९ कक्षामा चढें । यसमा श्यामकृष्ण सरको पनि ठूलो हात छ ।

एक वर्षपछि ९ कक्षामा पुग्दा अर्का गुरु गौतमबुद्ध मानन्धर सर पायौं । उनी माटो विज्ञानका वैज्ञानिक थिए । उनले हामीलाई गणित, विज्ञान विषय पढाए । उनी विषयवस्तुमा जानकार थिए तर उनको बुझाउने शैली भने श्याम सरको भन्दा फरक थियो । उनी कम बोल्ने स्वभावका भएकाले हामीले कुरो कोट्याइ कोट्याइ सोध्नु पर्दथ्यो । उनी विस्तारै बोले पनि विद्यार्थीलाई पाठ राम्ररी बुझाइदिन्थे । उनी पनि एक वर्षे अवधि सकिएपछि हाङपाङबाट काठमाडौं फर्किए । चिठी आदानप्रदान भयो । उनको कारणले हाम्रो आँखा काठमाडौंसम्म पुग्यो । फलस्वरुप एसएलसी पास गरेर उच्चशिक्षा पढ्न म काठमाडौं गएँ । काठमाडौंमा मानन्धर सरको मरुटोलमा तेल, घिउको पसल थियो । मानन्धर सरका बुबाआमा पसल चलाउँथे । त्यही पसलको ठेगानामा गाउँबाट आएका चिठीपत्र लिनजाने ब्यवस्था मिलाएको थिएँ । महिनामा एक दिन पसलमा गएर घरबाट आएका तथा साथीभाइले पठाएका चिठी प्राप्त गर्दथे । मानन्धर सर अल्पायुमै दिवङ्गत भए । म उनको आत्माको चीर शान्तिको कामना गर्दछु ।

कृषि विषय पढाइ सकेर हामीलाई गाउँमा पढाउन आएका रामप्रसाद पाौडेल सरलाई पनि म कहिल्यै बिर्सन सक्दिन । उनले हामीलाई ड्याङ बनाएर गहुँ बाली लगाउने तरिका सिकाए । कृषिमा भएका नयाँ प्रविधिका बारेमा जानकारी गराए । कक्षागत रूपमा उनले हामीलाई अन्नबालीबारे सैद्धान्तिक र व्यवहारिक ज्ञान दिए ।

अर्का आदरणीय गुरू थिए– रूद्रकुमार प्रसाई । उनी हाङपाङ निवासी थिए । उनले रामपुर चितवनबाट कृषिमा स्नातक गरेका थिए । हामीले उनलाई व्यवसायिक शिक्षा कृषि र जीवविज्ञानको शिक्षक रुपमा पायौं । उनी सरल र भद्र स्वभावका शिक्षक थिए । उनको स्वभाव विद्यार्थीलाई गाली नगर्ने, पाठ नआउँदा पनि सामान्य रूपमा 'फटाहा' सम्म भन्ने तर विद्यार्थीलाई सजायँ दिने काम उनले कहिल्यै गरेनन् । कक्षामा पनि सरल ढङ्गले पढाउने गर्दथे । विद्यालयबाहिर पनि रुद्र सरको स्वभाव व्यवहारिक र परिपक्क लाग्दथ्यो । उनले कालान्तरमा सरस्वती माद्यमिक विद्यालयमा प्रधानाध्यापक पद लामो अवधि सम्हाले । उनले विद्यालयको गुणस्तर कायम राखे र गाउँ र राष्ट्रको सेवा गरे ।

असल, सुधो मानिसलाई हामी गाईप्राणी भन्दछौं । सरस्वती माद्यमिक विद्यालयमा एकपटक त्यस्तै स्वभावका गुरू पनि थिए । हाङपाङको मेहेले घर भएका गुरू गोविन्द आचार्यलाई हामी गोविन्द गुरू भन्दथ्यौं । उनले हामीलाई चार कक्षादेखि सात कक्षासम्म नेपाली र संस्कृत विषय पढाए । कक्षामा पाठ पढाइ

सकेपछि उनी विद्यार्थीलाई मीठामीठा दन्त्यकथा, नीतिकथा आदि सुनाउने गर्दथे । हामी विद्यार्थी कथा सुन्न भनेपछि फुरूङ्ग हुन्थ्यौं । उनले विद्यार्थीलाई कहिल्यै पनि ठूलो स्वरले हपारेनन् । उनले विद्यार्थीलाई पिट्ने त कुरै थिएन । सम्झिल्याउँदा, सारै असल स्पभावका मानिस थिए, गोविन्द गुरू ।

कोही असल स्वभावका मानिस देख्दा मलाई उनै गोविन्द गुरुको याद आउँछ । सम्झन्छु, बोल्दाखेरि उनी विस्तारै बोल्ने गर्दथे । उनी सरल, भद्र र मिलनसार स्वभावका थिए । कसैसित उनले विवाद गरेको देखेनौं । चर्को स्वरमा बोलेको वा ठूलो स्वरमा हाँसेको पनि देखिएन । दौरा सुरुवाल वा कमीज सुरुवाल, ज्वारी कोट, टोपी उनको पोसाक थियो । उनले पढाएका संस्कृतका केही श्लोक म अझै सम्झन्छु । अझै पनि कतै संस्कृतका श्लोक देखें भने म उनै गोविन्द गुरूलाई सम्झन्छु ।

संस्कृतका विद्वान अर्का गुरू हामीले ८ कक्षामा पायौं । आठराई खाम्लालुङ निवासी उद्वव तिमल्सिना हामीलाई नेपाली पढाउँथे । उनी बोल्न वा पढाउन सिपालु थिए । संस्कृतका श्लोक कुराकानीमा मिसाइरहन्थे । उनले निकै लामो जुँघा पनि पालेका थिए । अग्ला, हट्टाकट्टा उद्धव गुरु देखेर हामी अलि हच्किन्थ्यौं । उनको स्वभाव भने कडा खालको थियो । किनभने विद्यार्थीले पाठ जानेन भने वा केही चित्त बुझेन भने पिट्न चाहिँ नपिट्ने तर शिष्ठ भाषामा मर्ने गरी गाली गर्दथे । कक्षामा साथीका अगाडी अपमान हुने डरले विद्यार्थी उनीसित निकै डराउँथे ।

जेहोस् उद्धव गुरु विषयवस्तुमा निपुर्ण थिए । उनले हामीलाई छन्दमा काव्यरचना गर्न सिकाए । कविता छन्दमा वाचन गर्न सिकाए । उनले हामीलाई कक्षा आठदेखि दश कक्षासम्म नेपाली विषय पढाए कहिल्यै नबिर्सने गुन लगाए । म अहिले पनि छन्दका कविता सुन्दा उनै उद्धव तिमिल्सिना गुरुलाई झल्झली सम्झन्छु ।

अर्का एकजना आदरणीय सरको पढाइ भने सारै दिक्कलाग्दो थियो । उनको त्यो शैली सम्झँदा आजकल भने हाँस उठ्छ । कक्षामा पढाउने एउटा शैलीको प्रतिनिधि पात्रको रुपमा मात्र मैले उनलाई अघि सारेको हुँ । उनलाई अपमान गर्ने मेरो अभिप्राय होइन । त्यसैले मैले उनको नाम राखिन । तलभाथि भए माफ पाउँ ।

सर कक्षामा पसेपछि हामी सबै जुरूक्क उठ्दथ्यौं र उनले ‘बस’ भनेपछि बस्दथ्यौं । हरेक कक्षाभित्र अगाडीपट्टी ठाउँमा गुरुलाई एउटा टेबल र कुर्सी राखिएको हुन्थ्यो । उनी कक्षाकोठामा पसेपछि कुर्सीमा बस्दथे । उनी बसेपछि हामी पनि बेञ्चमा बस्दथ्यौं । उनी हामीलाई पुस्तक माग्दथे । एकजना विद्यार्थीको किताब लिन्थे । किताबलाई उनी एकछिन ओल्टाईपल्टाई गर्दथे । अनि फ्याट्ट भन्दथे– ‘ल यति पेज नम्बर पल्टाउ !’ हामी पनि उनले भनेको पेज खोजेर किताब पल्टाउँथ्यौं र उनीतिर हेर्दथ्यौं ।

उनी पुस्तक फरर पढ्दथे । हामी पनि उनी जहाँ जहाँ वाचन गर्दथे त्यही

लाइनमा आँखा कुदाउँथ्यौं र पाना एकसाथ पल्टाउँथ्यौं । पाठ छोटो भए पाठको अन्त्यमा तथा पाठ लामो भए पाठको बीचमा पुगेर उनी रोकिन्थे । अनि हामीतिर फर्केर सोध्दथे– 'बुझ्यौ?' कुरो बुझे पनि नबुझे पनि हामी एक स्वरमा भन्दथ्यौं– 'बुझ्यौं सर' ।

अनि आफूले लिएको किताब सोही विद्यार्थीलाई फर्काउँदै उनी सबैलाई निर्देशन दिन्थे– 'ल, अब तिमीहरू आफै पढ' । त्यसपछि हामी पनि अघि सरले पढेजस्तै कक्षा उचाल्नेगरि स्वरमा स्वर मिलाएर पढ्ने गर्दथ्यौं । हामीले पढ्दा निकालेको आवाजमा सर हराउँदै जान्थे । हेर्दाहेर्दै उनी एक्कैछिनमा कुर्सीमा झकाउन थाल्दथे र निदाउँथे । सर निदाएको देखेपछि कोही विद्यार्थी पढ्न छाड्थे, कोही खासखुस गर्दथे, कोही चल्दथे । यसरी आवाज कम भएपछि उनी झसङ्ग बुँझन्थे र दर्बिलो स्वरमा हपार्थे– 'पढ भनेको !' ।

यसरी विद्यालयमा किसिम किसिमका सरहरूको शिक्षा पाइयो । अहिले सम्झँदा लाग्छ, त्यत्ति दुर्गम क्षेत्रको एक पुरानो सरस्वती माद्यमिक विद्यालयमा हामीले गतिला शिक्षक पाएका रहेछौं । त्यसमा गौरव लाग्दछ ।

बाल्यकालदेखिका शिक्षकहरूमा गुरूमा पद्मा प्रसाई, कृष्णकुमारी प्रसाई, विद्या राई तथा गुरूहरू विद्याराज प्रसाई, रविन्द्र चुडाल, देवकृष्ण प्रसाई, रामकृष्ण प्रसाई, खड्ग पाण्डे, विष्णुदत्त आङबुहाङ, गंगाराज प्रसाई, चन्द्र ओली, केवलबहादुर राना मगर, हर्क यक्सो, रामप्रसाद श्रेष्ठ, रामप्रसाद प्रसाई लगायतलाई सम्झन्छु ।

यहाँ नाम लिएका र अन्जानबश नाम छुटेका गुरुहरूप्रति हार्दिक नमन गर्दछु । माथि उल्लेखितमध्ये कतिपय स्वर्गीय भइसके । उनीहरूलाई हार्दिक श्रद्धाञ्जली चढाउँछु । गुरूको आशिर्वाद बिना जीवन सार्थक हुँदैन । सबै गुरुहरूको आशिर्वाद थाप्न उनीहरूका नाममा फेरि एकपटक शिर निहुराउँछु ।

# १८ सम्झनामा हेड सर

**गाउँको पृष्ठभूमि**

ताप्लेजुङ जिल्ला अन्तर्गत पर्ने हाङपाङ गाउँ हाल संघीय नेपालको आठराई त्रिवेणी अन्तर्गत हाङपाङ वडामा परिणत भएको छ । यो गाउँ छिमेकी चाँगे, फूलबारी र निघुरादिन गाउँको सदरमुकाम गाउँपालिका बनेको छ हाल यहाँ सरस्वती उच्च माद्यमिक विद्यालय छ । यसले आठराई त्रिवेणी गाउँपालिकाको सदरमुकाममा रहेर सर्वत्र शिक्षाको ज्योति फैलाइरहेको छ ।  यहाँको शैक्षिक पृष्ठभूमि जान्न विद्यालयको इतिहास कोट्याउन पर्दछ ।

आठराई हाङपाङ गाउँ वि.स. २०३२ अघि तेह्रथूम जिल्लाको एक दूर्गम गाउँ आठराई हाङपाङ थियो । यो गाउँ दुर्गम भए तापनि त्यहाँका जनता जागरुक थिए । विक्रम संवत् एक्काइशौं शताब्दी आरम्भपछि यहाँ टोलटोलमा विद्यार्थी भेला पारेर पढाउनलाई शिक्षक राख्ने चलन चल्यो । यसले तत्कालीन अवस्थामा लेखापढी गर्न जान्ने जनशक्ति तयार पार्‍यो ।

२००७ सालको क्रान्तिको सामाजिक चेतनाको प्रकाश यहाँसम्म आइपुग्यो । तब अनौपचारिक शिक्षाले मात्र समयको माग र आवश्यकतालाई पूरा गर्न नसकेको महसुस भयो । फलस्वरुप गाउँघरका विभिन्न केन्द्रहरूमा जनताले सामुदायिक विद्यालय भवन बनाउन थाले । उनीहरूले शिक्षकलाई पारिश्रामिक दिनका लागि जनसहभागितामा आधारित ब्यवस्था मिलाए । सबैको मुठीदानमा प्राप्त अन्न वा रकम दान सङ्कलन गरी शिक्षकलाई पारिश्रामिक दिने ब्यवस्था मिलाइयो । यसरी नै विद्यालय खोल्ने र संचालन गर्ने अभिभयान अघि बढ्यो । फलस्वरुप २०१८ सालमा हाङपाङमा सरस्वती डि.एस.बी. मिडिल स्कुल स्थापना भयो ।

त्यसबेला यस क्षेत्रमा सात कक्षासम्म पढाउने मिडिल स्कुल थिएनन् । आठराई सक्रान्ति र चुहाण्डाडामा विद्यालय खुलेका थिए । त्यहाँ पुग्न एकदिन लाग्दथो । गाउँघरमा पढेलेखेका मानिस ज्यादै कम थिए । शिक्षक खोज्दा मान्छे पाउनै मुस्किल पर्दथ्यो । त्यसबेला शिक्षकलाई अहिले जस्तो सरकारले तलब दिंदैनथ्यो । विद्यालयलाई सरकारको गतिलो अनुदानको व्यवस्था थिएन ।

शिक्षकलाई तलब खुवाउन, विद्यालयको भौतिक संरचना बनाउन, मरम्मत गर्न जनताले नै चन्दा उठाउन पर्दथ्यो । शिक्षकले तलब बापत नगद वा जिन्सी वार्षिक रुपमा पाउँथे ।

कक्षाकोठामा पानी चुहिनु विद्यार्थीको प्रमुख समस्या थियो । खरको छानाले चार-पाँच वर्ष थाम्दथ्यो । छाना छाउने साल चन्दा उठाएर काम पुरा गर्नै मुस्किल पर्दथ्यो । विद्यालय चलाउन, छानामा जस्तापाता लगाउन, कोठा थप्नलाई चन्दा नउठाइ उपाय थिएन । त्यसैले विद्यालय चलाइराख्न वा स्तरोन्नति गर्न संचालक समितिका पदाधिकारी तथा शिक्षकले मेहनत र त्याग गरे । गाउँमा उठेका चन्दाले नपुगेर उनीहरू चन्दा उठाउन कहिलेकाहिँ मधेस झर्दथे, कहिले भारतको आसामसम्म पुग्दथे । यसरी उठाइएको चन्दाले विद्यालय संचालन, भवनको छानामा जस्तापाता लगााउने र कोठा थप्ने काम गरियो ।

संचालक समितिका पदाधिकारी तथा शिक्षक बेलाबेला चौतारामा बसेर गफ गर्दथे । चन्दा उठाउँदा भोगेका दुःखसुखका कुरा गर्दथे । फलानाले यति चन्दा दियो चिलानाले बोलायो तर दिएन आदि, इत्यादि । त्यो बेला गाउँमा वार्षिक भेला बोलाएर जनतालाई चन्दा रकम तोकिन्थ्यो । चन्दाको नाममा विद्यालय र समाजले लगाएको त्यो अघोषित शैक्षिककर नै थियो । अहिले मूल्याङ्कन गर्दा त्यसबेला जनताले गरेको योगदानलाई उच्च मान्नु पर्दछ ।

वास्तवमा, सरस्वती माध्यमिक विद्यालय स्थानीय जनताले रगत, पसिना र आँशुले सिंचेर हुर्काएको सामाजिक सम्पदा हो । यसको धरातलका साक्षीहरू अझै ज्यूँदै छन् भने कतिपय घटना त्यहीँ माटोमा बिलाएका छन् । आज हाङपाङ र आसपासका जनताले त्यसको मीठो फल खान पाएका छन् । मजस्ता कैंयौं विद्यार्थीको मनमा आज सरस्वती माद्यमिक/उच्चमाद्यमिक विद्यालय सरस्वतीको मन्दिर प्रमाणित भएको छ ।

**गणेशबहादुर राईको आगमन**

अङ्ग्रेजीका स्नातक गणेशबहादुर राई विक्रम सम्बत् २०१८ अर्थात् सन् १९६१ मा शिक्षाप्रेमी गाउँलेको आग्रहमा दार्जिलिङबाट आठराई हाङपाङ आएका थिए । फलस्वरुप सरस्वती डिएसबी मिडिल स्कुल हाङपाङले एक शिक्षित व्यक्तिलाई हेडसरको रुपमा पायो । यो विद्यालयले केही मात्रामा भारतीय सैनिक बोर्डबाट आर्थिक सहयोग पाएको थियो । विश्व युद्धमा मारिएका अनगिन्ति नेपालीको बेवारिसे सम्पत्ति ब्यवस्था गर्ने कोशले लाहुरेको गाउँ हाङपाङलाई पनि लाभग्राही सूचीमा रखेको थियो । त्यसैले विद्यालयको नाममा डिएसबी संज्ञा पनि जोडिएको थियो । कालान्तरमा विद्यालय हाइस्कुल भयो । सरकारी अनुदान पाउँदै गएपछि उक्त डिएसबी शब्द पनि हटेर गयो ।

हाल यो विद्यालय सरकारी अनुदानप्राप्त उच्च माद्यमिक विद्यालय बनेको छ । विद्यालयलाई यो अवस्थामा ल्याउनेमध्येका एक शिक्षकका रुपमा गणेशबहादुर राईलाई लिइन्छ । उनलाई चिन्ने वा बोलाउने नाम थियो– हेड सर । म अहिले

तत्कालीन सरस्वती डिएसबी मिडिल स्कुलका हेडसर गणेशबहादुर राईको शब्दचित्र कोर्दैछु ।

हेड सरका रुपमा गणेशबहादुर राई हाङपाङ आएको साल र मैले यो धरती टेकेको वर्ष संयोगले एकै परेछ । त्यसैले मैले उनलाई सानैदेखि गाउँमै देखें । उनी मलाई हाङपाङकै रैथाने जस्तो लाग्दथ्यो । मेरो उमेर बढ्दैं जाँदा मैले बुझें, हाङपाङका अग्रजहरूले शिक्षकको रुपमा उनलाई दार्जिलिङबाट ल्याएका रहेछन् ।

राईका पिता तेह्रथूमस्थित भारतीय सैनिकको संस्था डिष्ट्रिक्ट सोल्जर्स बोर्डमा कार्यरत अधिकृत थिए । उक्त बोर्डको सहयोगप्राप्त विद्यालयमा उनले आफ्ना छोरा गणेशबहादुर राईलाई पठाएको बुढापाका भन्दथे । हुन त यो विद्यालयलाई सोल्जर बोर्डले केही मात्रामा सहयोग गरे तापनि मूलतः जनताको चन्दाले नै चलेको थियो । त्यसबेला विद्यालयमा साधनस्रोतको ज्यादै कमी थियो । शिक्षकले तलब पाउन ६ महिना वा एक वर्षसम्म कुर्नु पर्दथ्यो । शिक्षकले नगद वा  जग्गा जमिन तलबबापत पाउने गर्दथे । सोल्जर बोर्डमा कार्यरत पिताले आफ्ना होनहार पुत्रलाई त्यस्तो जोखिमपूर्ण अवस्थामा पनि हाङपाङ पठाएकामा मलाई अचम्म मात्र होइन, त्यो हाम्रो भाग्यको खेल जस्तो पनि लाग्दछ ।

२०१८ सालको स्नातकले सरकारी नोकरीमा छिरेको भए आज उनी सचिव भएर निस्केका हुन्थे । त्यसबेला उनले कोशिस गरेको भए उनको लागि अवसरका अनेकौं ढोका थिए । यद्यपि, उनी हामी जस्ता कुनाकाप्चामा बसेका अशिक्षितलाई शिक्षाको ज्योति बोकेर आए । उनी एकप्रकारले अज्ञानताको अन्धकारमा छट्पटाएको गाउँमा छिरे । गाउँ र आसपासका क्षेत्रलाई उज्यालो पारे । गाउँमा शिक्षक पेशा सम्मानित भए तापनि उसबेला त्यो पेशा धेरै चुनौतीपूर्ण थियो । उनको जीवनको सारलाई बिम्वमा भन्नुपर्दा उनी मैनवत्तिझैं जलेर दुनियाँ उज्यालो त पारे तर स्वयम् भने बत्तीको फेदको अँध्यारो छायामा परे ।

अनुशासित परिवारिक तथा शैक्षिक पृष्ठभूमिका गणेश सर विद्यालयमा आएपछि उनको कुशल नेतृत्वमा विद्यालय क्रमसः मौलायो । विद्यालयको छवि चारैतिर फैलियो । वरिपरिका धेरै विद्यार्थी पढ्न यहाँ आए । गाउँले पृष्ठभूमिमा जन्मेको साक्षीको रूपमा म एक विद्यार्थी अझै यसबारे भन्न सक्दछु । गणेश सरको म एक छिमेकी पनि हुँ जोसंग मेरो सम्पूर्ण बाल्यकाल बितेको थियो । बाल्यकालको विद्यार्थी जीवन उनकै छत्रछायामा व्यतीत भएको थियो । त्यसैले म उनलाई नजिकबाट जान्दछु । तसर्थ, मेरा स्मृतिका पानामा छरिएका धुमिल अनुभूतिका पाना पल्टाउँदैछु ।

**लवाइ खवाइ**

हाम्रो गाउँमा त्यसबेला चश्मा लगाउने मानिस थिएनन् । पण्डितहरू किताव पढ्दा गान्धी चश्मा लगाउँथे । कोही मानिस बेला–बेला कालो शीतलु चश्मा लगाउँथे । सधैं चश्मा लगाउने मानिस गाउँमा एकजना गणेश सर मात्र थिए । हामी

केटाकेटीलाई के लाग्दथ्यो भने चश्मा भनेको हेडसरले लगाउने गहना हो । किनभने उनीजस्तो निरन्तर चश्मा लगाउने मानिस गाउँमा अरू कोही थिएनन् । हामीलाई उसबेला चश्मा आँखाको दृष्टि कमजोर भएकाले लगाउने वस्तु हो भन्ने थाहा थिएन । लाग्दथ्यो, चश्मा भनेको धेरै पढेकाले लगाउने चीज होला । या कतै राम्रो शिक्षित देखिनलाई लगाउने चीज होला । जेहोस्, हामी विद्यार्थीको मनमा चश्मा विद्वान मान्छेको द्योतक थियो ।

अर्को कुरा, त्यसबेला हाम्रो गाउँमा पैण्ट, शर्ट लगाउने मानिस उति थिएनन् । उक्त पहिरन लगाउने गणेश सर गाउँमा एक्लै नै थिए । हुन त गाउँमा लाहुरेहरू छुट्टिमा आउँदा केही दिन पैण्ट, शर्ट लगाउँदथे । तर केही दिनपछि उनीहरू पनि पैण्ट, शर्टको सट्टा दौरासुरूवाल सिलाएर लगाउने गर्दथे । हामीलाई के विश्वास थियो भने पैण्ट, शर्ट लगाएपछि काम गर्न मिल्दैन । किनभने पैण्ट, शर्ट लगाउने गणेशसरले अरूझैं खेतबारीमा काम गरेको कहिल्यै देखिएन । त्यसकारण हामीलाई के लाग्यो भने पैण्ट सर्ट काम नगरी कुर्सि टेबलमा बस्ने मानिसले लगाउने पोसाक होला ।

गणेश सर सरल र शालीन व्यक्ति थिए । उनी ज्यादै कम मात्रामा बोल्ने गर्दथे । उनले अरूजस्तो गलल हाँसेको हामीले कहिले देखेनौं । सधैं गम्भीर मुद्रामा रहने गणेश सरको छेऊ पर्न विद्यार्थी डराउँथे । उनलाई देखेपछि विद्यार्थी टाढैबाट परपरै तर्कन्थे । विद्यार्थी आपसमा खासखुस कुरा गर्दथे, उनी रिसाहा स्वभावका छन् । गल्ति गरेको थाहा पाएमा उनले अफिसमा बोलाएर छरीले हातमा पिट्छन् भन्ने हल्ला चलेको थियो । हुन पनि कक्षामा पाठ सोधेको बेला विद्यार्थीलाई आएन वा कुनै विद्यार्थीले अनुशासनहीन काम गरेमा उनी सजायस्वरूप हात थाप्न लगाएर फिट वा लौरोले पिट्दथे ।

**अनुशासन**

विद्यालयमा विद्यार्थी र शिक्षक सबैले कठोर अनुशासन पालन गर्नुपर्दथ्यो । कसैले पनि विद्यालय परिसरमा चुरोट, बिडी खान पाउँदैनथे । उसबेला अहिले जस्तो खैनी खाने चलन थिएन । विद्यालय ढिला गरी आउने विद्यार्थीले छुट्टै लाइन लाग्नुपर्दथ्यो । उनीहरूले सजाय पाएपछि मात्र कक्षाकोठामा पस्न पाउँथे । मैले लाइनमै एकदुई पटक विद्यालय ढिला आउने विद्यार्थीहरूलाई सामुहिक रूपमा लाइन लगाएर पिटेको देखेको थिएँ । त्यसरी पिट्दा केटाहरू लाजले नरोए पनि केटीहरू भने पछ्यौराले मुख छोपेर घुँक्कघुँक्क रुन्थे । पाठ बुझाउँदा वा बोल्दा उनीतिर फर्केर कसैले हाँस्यो भने "सिस्नो खाएको तेरो दाँत देखाउँछस्, नाथे" भनेर हप्काउँथे ।

उनी विद्यार्थीलाई झपार्दा 'नाथे' शब्दले गाली गर्दथे । हामी विद्यार्थी त्यो 'नाथे' भनेको के रहेछ भनेर आपसमा कुरा गर्दथ्यौं । पछि पछि थाहा भयो त्यसको अर्थ नाकभित्रको रौं रहेछ । त्यत्ति सारै नराम्रो गाली त हैन रहेछ जस्तो लाग्दथ्यो । कुनैबेला 'गधा' 'गोरु' भनेर पनि हपार्दथे । पहाडतिर हामीले गधा नदेखेको हुँदा

हामीलाई त्यो गालीमा आउने विम्बले छुँदैन थियो । गोरु शब्दले अलिअलि छुन्थ्यो तर हप्काएका बेला उनको शब्द भन्दा पनि अनुहारको भाव र आवाजको झोक्काले थर्काउँथ्यो र विद्यार्थी त्यसै थर्थरी काँप्दथे ।

वास्तवमा, गणेश सरले हाङपाङ र आसपासका क्षेत्रमा विद्यार्थीलाई अनुशासनको पाठ सिकाए । गाउँमा पढेका भन्दा नपढेका मानिस धेरै हुन्छन् । त्यसबेला 'पढ्यो लेख्यो के काम हलो जोत्यो खायो माम' भन्ने उक्ति प्रचलित थियो । पढ्यो भने त्यसले हलो जोत्दैन, घरमा काम गर्दैन, छोरी पढाए लभ लेटर लेखेर पोइला जान्छे भनेर अभिभावक छोराछोरीलाई विद्यालय पठाउन उति मन गर्दैनथे । त्यसबेला विद्यालयमा भर्ना हुने विद्यार्थीहरू अलि उमेर छिप्पिएकाहरू बढी मात्रामा थिए । अर्थात् ५/७ कक्षामा पढ्ने विद्यार्थी पनि १५/२० वर्ष माथिका हुन्थे । अहिले त १५/१६ वर्षमा एस.एल.सी./एस.ई.ई. पास गर्छन्, उसबेला करिव २५/३० वर्षमा मात्र प्रायः म्याट्रिक गर्दथे ।

शरीरमा बल पसेका तर अनुशासन नजान्ने विद्यार्थीलाई विद्यालयमा पढाउनु र तिनलाई विद्यार्थीका रुपमा सधाउने काम सजिलो थिएन । गाउँमा फुटबल खेल लोकप्रिय थियो । विद्यार्थी खेलाडी हुन् वा गाउँले खेलाडी आपसका खुट्टा हानाहान गर्थे, आपसमा छिर्के लाउँथे र खेल प्रायः भिडन्तमा टुङ्गिन्थ्यो । एकैछिन अघि मिलेर खेल्दै गरेका विद्यार्थी पछि ढुँगा हानाहान गर्दै छुट्टिन्थे । त्यस्ता काँचा युवक विद्यार्थीहरूलाई गणेश सरले खेलको माध्यमबाट अनुशासनको पाठ सिकाए । उनी भएको बेला विद्यालयमा कवाज, दौड तथा एथलेटिक्सको वार्षिक प्रतियोगिता आयोजना गरिन्थ्यो । खेलकुदमा विद्यार्थी अभ्यस्त र अनुशासित हुन्थे । पढाइको अतिरिक्त विद्यालयमा सिकाइएको खेलकुद, दौड, पिटी आदिले विद्यालय पढिसकेर वा बीचमा पढाइ छाडेर लाहुर जानेलाई खूब काम लाग्दथ्यो । उनीहरू पल्टनबाट हेडसरले सिकाएको काम लाग्यो भनेर पत्र पठाउँथे ।

विद्यालयमा अनुशासनका बारेमा विद्यार्थीहरूलाई निबन्ध, कविता, नाटक लेख्न प्रोत्साहित गरिन्थ्यो । राम्रो अनुशासन भएका कक्षाबाट एकजना विद्यार्थीको नाम हरेक वर्ष घोषणा गर्ने चलन थियो । कुनै विद्यार्थीको रिपोर्ट–कार्डमा शिक्षकले कुनैबेला कैफियत लेखिदिएमा उक्त विद्यार्थी नराम्रो विद्यार्थीमा दरिन्थ्यो । शिक्षकले विद्यार्थीको अनुशासनमा कैफियत लेखिदिएको खण्डमा विद्यार्थी विद्यालयबाट निष्काशितसम्म हुने व्यवस्था गरिएको थियो । त्यसैले गर्दा हरेक वर्ष एस.एल.सी. परीक्षामा सरस्वती माद्यमिक विद्यालयको परीक्षाफल राम्रो आउँथ्यो । विद्यालयको नाम र गणेश सरको नाम चारैतिर फैलिएको थियो ।

**स्वस्थकर जीवन शैली**

गणेश सर हाम्रो गाउँको रोल मोडल थिए । गाउँमा चर्पी बनाउने चलन त्यत्ति थिएन । प्रायः बाँसघारी, खोल्सा, खाल्सीमा दिसापिसाब गर्ने चलन थियो । त्यस्तो बेलामा उनले गाउँमा व्यवस्थित चर्पीको चलन ल्याए । उनी बिहानै हातमा पानीको वोतल बोकेर चर्पी जान्थे । कहिलेकाहीँ हामी केटाकेटी पछ्याउँदै उनी चर्पी गएको,

चाबी खोलेको, भित्र पसेर चुक्कुल लाएको, निस्केको दृश्य लुकेर हेर्दै रमाइलो गर्दथ्यौं । हामीलाई त्यसबेला त्यो क्रिया अचम्म जस्तो लाग्दथ्यो । हामी जङ्गल पस्नेलाई चर्पीको आवश्यकता र महत्वबारे त्यसबेला थाहा थिएन । धेरै पछि अरू सरहरूले पनि घरमा चर्पी निर्माण गरेको देख्यौं । अहिले सम्झँदा हामी कति असभ्य रहेछौं जस्तो लाग्दछ ।

धुम्रपान नगर्ने उनको अर्को राम्रो बानीमा थियो । विद्यालयमा शिक्षक र विद्यार्थीलाई विद्यालय परिसरमा धुम्रपान गर्न निषेध गरिएको थियो । विद्यालयमा कुनै विद्यार्थीले धुम्रपान गरेको पाइएमा कठोर सजाय हुन्थ्यो । शिक्षक पनि लुकेर मात्र सुर्ती वा चुरोट पिउँने गर्दथे ।

**अङ्ग्रेजी भाषामा दखल**

अंग्रेजी भाषामा उनको दखल थियो । मलाई साल ठ्याक्कै याद भएन त्यस्तै २०२५/२६ सालतिर होला म तीन कक्षामा पढ्दथें । विद्यालयमा पीटर नामका एकजना अमरिकी पिसकोर स्वयमसेवक शिक्षकका रुपमा हाम्रो विद्यालयमा आएका थिए । उनी हामीलाई अंग्रेजी भाषा पढाउने शिक्षक थिए । त्यसबेला आठराई हाङपाङ क्षेत्रका शिक्षक र विद्यार्थीमाझ कम्यूनिष्ट विचारको लहर फैलँदो अवस्थामा थियो । हामी त केटाकेटी मान्छे कुरो अलिअलि मात्र बुझ्दथ्यौं । विद्यालय छुट्टी भएर घर फर्कने बेलामा विद्यार्थीहरूले उनै पीटरलाई घेर्दथे । विद्यार्थीहरू उनलाई तिमी अमेरिकी साम्राज्यवादी देशका नागरिक हौ, यहाँ जासुसी गर्दैछौ, यहाँ बस्न पाउँदैनौं, तिमी आफ्नो देश फर्क भन्दथे । विद्यार्थीहरू पीटरलाई पटक पटक उल्याँउँथे र निरुत्साहित पार्दथे । सायद उनले त्यसको जानकारी आफ्नो दूतावासलाई दिए होलान् ।

अब के होला भनेर हामी केटाकेटी सशङकित थियौं । नभन्दै एकदिन अमेरिकी राजदूत क्यारोल सी. लेस हेलिकप्टर चढेर हाङपाङ आइन् । हेलिकप्टर बस्ने स्थान हाम्रो विद्यालयमा बनाइएको थियो तर सो स्थानमा बसेन । गाउँको अलि माथि रहेको कालिका प्राविको खेलमैदानमा हेलिकप्टर बस्यो । सायद त्यसैमा हाम्रो गणेश सरलाई रिस अठ्यो होला । राजदूत साँझ ६–७ बजे विद्यालयमा आइन् । राति आएको पाहुनालाई गणेश सरले स्वागत गरेनन् । उनी ढोका लगाएर सुते । विद्यालयको मैदानमा तयार गरेको हेलिप्याडमा जहाज नउत्रेकाले हेडसर रिसाएको हामीलाई थाहा थियो । त्यसैले उनले राजदूतलाई आउनासाथ स्वागत गरेनन् । अरु शिक्षकहरूले राजदूतलाई स्वागत गरे । हामी केटाकेटी लाइनमा लाग्यौं र राजदूत क्यारोल सी लेसको हातबाट चकलेट थाप्दै थ्याङ्क्यू भन्यौं । किनभने सरहरूले हामीलाई चकलेट थापेपछि धन्यवाद भन्न सिकाएका थिए । एकजना विद्यार्थीले थ्याङ्क्यूमा भेरी मच पनि थपिदियो, हामी गलल हाँस्यौं ।

भोलिपल्ट बिहान मात्र गणेश सरले ती अमेरिकी विशिष्ठ नागरिकसंग भेट गरे । उनले अंग्रेजीमा फरर बोलेको देख्दा हामी दङ्ग पऱ्यौं । अहिले सम्झँदा मलाई अलि नमीठो लाग्दछ । हाङपाङको विद्यालयमा सायद सुरक्षाको कारणले

हेलिकप्टर अवतरण नगरेर छिमेकी विद्यालयमा गएको हुनसक्छ । त्यति विवेक राखिदिएको भए गणेश सरले चित्त दुखाउनु पर्दैनथ्यो । उनी त्यसबेला गाउँलेका अघोषित प्रतिनिधि पनि थिए । कमसेकम साँझपख गाउँमा आएको पाहुनालाई स्वागत गरिदिएको भए हुन्थ्यो ।

मलाई राजदूत भन्दा पनि उनी चढेर आएको हेलिकपप्टरले आकर्षित तुल्यायो । आकाशमा उडेको देखिन्थ्यो, त्यो वस्तुलाई त्यसबेला नजिकै देख्दा औधी खुशी र उद्वेलित भएँ । त्यसपछि त सपनामा पनि हेलिकप्टर मात्र देख्न थालें । लेख्ने कापीमा पनि जतातातै हेलिकप्टरको चित्र मात्र कोर्न थालें । एक दिन म पनि पाइलट हुन्छु भन्ने रहर जाग्यो । हेलिकप्टर वा हवाइजहाज चढ्न पाए कस्तो होला भनेर म दिनरात कल्पना गर्न थालें ।

**फुटबल खेलाडी**

मैले सुनेको मात्र गणेश सर राम्रो फुटबल खेलाडी थिए । हाम्रो विद्यालयमा ठूलो फुटबल मैदान थिएन । त्यसैले उनले विद्यालयको खेल मैदानमा फुटबल खेलेको देखिन । विद्यार्थीलाई मात्र विद्यालयको खेलमैदानमा फुटबल खेलाइन्थ्यो । खेल मैदान सानो भएको कारणले रहेछ रेफ्रीले दौडनु पर्दैन थियो । विद्यालयको बार्दलीमा बसेर गणेश सर रेफ्रीको काम गर्दथे । हामीलाई लाग्दथ्यो फुटबलको रेफ्री पनि भलिबलको रेफ्रीझैं एकै ठाउँ बसेर वा उभिएर खेल खेलाउँछ ।

आठराई सक्रान्तिमा वर्षेनी भव्य मदन मेला लाग्दथ्यो । त्यहाँको त्रिमोहन माद्यमिक विद्यायलमा हाम्रो भन्दा ठूलो फुटबल मैदान थियो जहाँ वर्षेनी फुटबल म्याचको आयोजना गरिन्थ्यो । मदन मेलामा ताप्लेजुङ, तेह्रथूम, फिदिम, खाम्लालुङ, सम्दु, साँघु, फेदापतिरबाट खेलाडीहरू भेला हुन्थे र प्रतियोगितात्मक प्रतिस्पर्धामा भिड्दथे ।

मदन मेलामा फुटबल, भलिबल, ब्याडमिण्टन, क्यारेमबोर्ड लगायतका प्रतियोगिता हुन्थे । हामी भुराभुरी छँदा गणेश सरले उक्त मदन मेलामा राम्रो फुटबल खेल प्रदर्शन गरे भनेर चर्चा सुन्दथ्यौं । त्यसबेला अर्का खेलाडी आठराईतिरकै रसाइली सर थिए । उनी लामो केश पालेर कपालमै काइँयो सिउरन्थे तर उनको फुटबल खेल भने राम्रो थियो । उनी सुनसरी धरान स्थित फुटबल टिमका एक खेलाडी भएको थाहा पायौं । एकपटक उनै रसाइली सर हाङपाङ चुँवाको खेल मैदानमा भएको फुटबल म्याचमा रेफ्री भए । उनी खेलाडीसंगै दौडेको देखेर हामी छक्क पर्‍यौं । पहाडतिरका खेलमैदान साना हुन्छन् यसैले हामीले रेफ्री मैदानका बीचमा उभिएर सिटी बजाएको मात्र देखेका थियौं । त्यसबेला रसाइली सरको चुरीफुरी देखेर हामी विद्यार्थीलाई रमाइलो लाग्यो । यिनै रसाइली सरको टिमलाई हाम्रो गणेश सरको टिमले मदन मेलामा जितेको रे भन्ने हल्ला हामीले सुनेका हौं ।

मैले गणेश सरबाट सिकेको महत्वपूर्ण कुरा हो– स्पोर्टसम्यानसीप अर्थात् खेलकुद भावना । उनी बारम्बार भन्दथे– खेलाडीले खेलमा अनुशासित भइ

नियमपूर्वक कलात्मक खेल प्रदर्शन गर्नुपर्दछ । तिमी अनुशासनपूर्वक राम्रो खेल र भरसक जित । यदि हार्‍यौ भने दुःख नमान, जिल्लेलाई बधाई देऊ, मित्रता स्थापित गर । खेल हारेमा दुस्मनी नराख । खेल खेल्नु भनेको मैत्रीभाव बढाउनु हो । खेल जिल्लाई मात्र खेलिन्न, उत्कृष्ट खेल प्रदर्शन गर्नु र रेकर्ड राख्नु पनि खेलकुदको मर्म हो भनेर उनले हामीलाई सिकाए । उनी खेलकुदमा होस् वा विद्यालयमा अनुशासनको बारेमा विद्यार्थीहरूलाई जोड दिन्थे ।

**गीतसङ्गीत**

गणेश सर गीतसङ्गीतमा रूची राख्ने स्रष्टा पनि थिए । उनले बिहान, बेलुका सङ्गीत साधना गर्दा हारमोनियम बजाएको म आफ्नो घरैबाट सुन्दथें । उनले बजाएको बाजाको ध्वनिले मभित्र पनि साङ्गीतिक राग जन्मायो । हारमोनियमका बज्ने मीठा धुन र मेलोडीले मलाई साँच्चै आकर्षित तुल्यायो । फलस्वरुप गीतसङ्गीतप्रति मेरो मोह बढ्यो । मभित्र हारमोनियम बजाउने वा सिक्ने इच्छा जागृत भयो ।

विद्यालयको सांस्कृतिक कार्यक्रममा उनी आफै गीत कम्पोज गर्दथे । उनले केही आधुनिक गीत रचना र सङ्गीत भर्ने काम पनि गरे । उनको स्वर पातलो भएकाले बेनु सर वा अन्य विद्यार्थीलाई गीत गाउन लगाउँथे । नाच्ने कलाकार पनि सिपालु थिए । केटा मान्छे नै केटी भएर नाच्नु पर्दथ्यो । कोही केटी केटा भएर अर्को केटीसित युगल नृत्य गर्दथे । त्यसबेला गणेश सरले बनाएका मौलिक गीतहरू पनि हामीले सुन्यौं ।

उनले नभ्याउँदा बेनु चुडाल सरले सांस्कृतिक कार्यक्रममा हारमोनियम बजाउँन थाले । बेनु सरको हातमा हारमोनियम परेपछि यदाकदा मौका पारेर मैले पनि हारमोनियम छुने र ट्याँट्याँ पार्ने मौका पाएँ । यसरी मेरो हृदयमा साङ्गीतिक चेतनाको विजारोपण गणेश सर, बेनु सरको सामीप्यताले पल्लवित भयो ।

**विवाह**

म गणेश सरको विवाह उत्सवलाई पनि भुल्न सक्दिन । म भुराभुरी नै छँदा उनको विवाह ताप्लेजुङ फुङलिङ निवासी शिक्षिका विद्या प्रधानसंग भयो । विवाह हुने दिनमा हामी विद्यार्थी अत्यन्तै प्रफुल्लित थियौं । गुरुमा अर्थात् बेहुली हेर्न भनेर हामी खुवा गाउँमा गएर पर्खियौं । बाटोमा दानाको फल टिप्दै पर्खेको अझै सम्झना आउँछ । ताप्लेजुङ फुङलिङबाट दोभान नभएर खडकुडे पुल तरेर फुलबारी, छिन्ताङ हुँदै बेहुली ल्याइयो । दुलही हाङपाङ आइपुग्दा करिव साँझ परिसकेको थियो ।

हाङपाङ निवासी कम्युनिष्ट नेता नन्दकुमार प्रसाई जो खोक्लिङ स्कुलमा शिक्षक थिए उनले बेहुला–बेहुलीको जोडी बाँधिदिएको भन्ने हल्ला हामीले सुन्यौं । हालको गाविस भवन जसलाई त्यसबेला पञ्चायत घर भनिन्थ्यो । जहाँ गणेश सरको निवास थियो त्यहीँ बेहुली भित्र्याइयो । केही महिनामा विद्या गुरुमाले मलाई र सरला बहिनीलाई निवासमा बोलाएर पसलमा सामाग्री प्याक गर्ने कागजको थूँगे

बनाउन सिकाइन् । हाङपाङमा हेडसरका दुई सन्तान अशोक र आलोकको जन्म भयो ।

**राजनीति**

गणेश सर राजनीतिक हिसाबले पनि सचेत थिए । मलाई ठ्याक्कै साल त याद आएन । दशकले हिसाब गर्दा तीस दशकको कुरो हुनुपर्दछ । एक पटक उनी हाङपाङमा प्रधानपञ्चको चुनावमा पनि उठेका थिए । चुनावलाई त्यसबेला हामी भोट भन्दथ्यौं । हाल हेल्थपोष्ट रहेको स्थान जसलाई त्यसबेला डिस्पेन्सरी भनिन्थ्यो, त्यहाँको सानो मैदानमा भोट सम्पन्न भएको थियो । मत खसाल्ने ठाउँमा दुई उम्मेदवारको अलग अलग रङ्गको बाकस थापिएको हुन्थ्यो । भोट थाप्ने बाकस सेतो र रातो रङ्गको थियो । भोट माग्दा रातो वा सेतो बक्समा मत खसाल्नु भनिन्थ्यो । मतदान केन्द्रमा मतपत्र टिपेर गोप्य मतदान गर्ने ब्यवस्था गरिएको थियो । मतदान सकिएपछि जसको बाकसमा धेरै मत खस्यो उसको जीत हुन्थ्यो । अपरान्ह ५ बजे चुनाव सकियो । साँझपख नतिजा घोषणा भयो । चुनावको नतिजा नरेन्द्र लिम्बूको पक्षमा गयो । अर्थात्, गणेशसर पराजित भए । हामी भुराभुरीले तल्लागाउँलेले भोट हार्‍यौं भन्ने बुझ्यौं ।

म त सानै थिएँ । भोट जिते वा हारेमा के हुन्छ? आमालाई खुसुक्क जिज्ञाशा राखें । आमाको जवाफ यस आसयको थियो– भोट जिते हेडसरलाई अबिर, फूलमाला लगाएर वासस्थानमा ल्याउँछन् । यदि उनी हारेको खण्डमा लाजले लुक्दै लुक्दै फर्कन्छन् नि । नभन्दै भोटको नतिजा आएपछि नरेन्द्र लिम्बूलाई अबिरमाला लगाएर बोक्दै–बोक्दै उँभो माथिल्लो गाउँतिर लगे । हाम्रो गणेश सर केही शिक्षकहरूका साथ बाटैबाटो लुरूलुरू हिडेर निवासतिर फर्के । आमाले भनेजस्तै गणेश सर कसरी लुक्दै फर्केलान् जस्तो लागेको थियो उनी त नलुकी बाटैबाटो फर्किए, अचम्ममा परें । अहिले सम्झँदा हाँस उठ्छ ।

हाङपाङ गाउँ राजनीतिक हिसाबले संवेदनशील पनि थियो । हाङपाङ गाउँ भौगोलिक हिसाबले तल्लो गाउँ र माथिल्लो गाउँमा विभाजित थियो । तल्लो गाउँमा बस्ने खहरे घरखाल, बाह्र भैयाखाल गणेश सरकोमा आउजाउ गर्दथे । माथिल्लो गाउँको समुदायको नेतृत्व अघोषित रुपमा क्याप्टेन खगेन्द्रसिंह आङबुहाङ लिम्बू गर्दथे । माथिल्लो गाउँमा यक्सो गाउँ, कालिका प्रा.वि. वरिपरिका घरहरू पर्दथे । गाउँ भित्रभित्रै कम्युनिष्ट र कांग्रेसमा पनि विभाजित थियो । मानिस धेरै पञ्चायत समर्थक थिए, कम मात्रामा कम्यूनिष्ट र काङग्रेसमा भित्रभित्रै लागेका थिए । पंचायत समर्थक खुल्ला रुपमा थिए भने अरु सुसुप्त अवस्थामा थिए ।

जिल्लाको राजनीतिक ध्रुवीकरणको प्रभाव गाउँमा पनि परेको थियो । गाउँ लामो समय विष्णु मादेन र विजयप्रकश थेबे समूहमा विभाजित थियो । क्याप्टेन खगेन्द्रसिंह मादेन पक्षीय व्यक्ति थिए । विद्यालयका शिक्षक प्रायः थेबे पक्षका थिए । यसरी हाम्रो गाउँ तल्लो गाउँ र माथिल्लो गाउँबीच प्रतिस्पर्धारत थियो ।

एक पटक गणेश सर विराटनगर झरेको बेला कम्यूनिष्टको आरोपमा पक्राउ

परे । हाङपाङबाटै विराटनगर झरेकाहरूले उनलाई अंचलाधीससमक्ष झोसपोल गरे भन्ने हल्ला हामीले सुन्यौं । यसरी गाउँको राजनीतिक प्रभाव हाङपाङबाट विराटनगर गएर बसेकाहरूमा सरेर गएको थियो । त्यसको सिकार उनी भएका थिए । उनी केही दिन विराटनगरमा थुनामा परेर मुक्त भएका थिए ।

**राजीनामा**

चालिस दशकको अन्त्यतिर हाङपाङ गाउँको राजनीतिले अनौंठो रूप लियो । एक दिन चाँगे, नेसुम, ढुँगेसाँगु, साँघुका विद्यार्थीहरूले सोबुवा खोलाको पुलमा बिछ्याइएको काठ भत्केकाले मर्मत गर्नुपर्ने आवाज निकाले । उनीहरूले उक्त माग विद्यालय व्यवस्थापनसमक्ष राखे । विद्यार्थीको मागलाई संचालक समितिले सही ढङ्गले सम्बोधन गर्न सकेन । यसमा राजनीति मिसिएको बहानामा विद्यार्थीमाथि दमन गरियो । सामान्य कुराले विद्यालयमा तनाव उत्पन्न भयो । हेडसरको प्रशासन मन नपराउने शिक्षक, विद्यार्थी संगठित हुने अवसर पाए । यसरी सानो निहुँले गाउँमा विस्तारै उग्र रूप लियो । विद्यालयमा विद्यार्थी आन्दोलन चर्कियो ।

विद्यालयको तनाव साम्य पार्न जिल्ला शिक्षा कार्यालय ताप्लेजुङबाट तत्कालीन सहायक जिल्ला शिक्षा अधिकारी लक्ष्मी प्रसाई आएका थिए । उनी हाङपाङ निवासी थिए । उनलाई गाउँको माया थियो । उनले हेडसर र विद्या गुरुमालाई राजीनामा नदिन सम्झाइबुझाइ गरे । लक्ष्मी प्रसाईले गणेश सरलाई विचलित नहुन तथा राजीनामा नदिन धेरै सम्झाए । तर, गणेश सरले राजिनामा नदिइ नछाड्ने अडान लिए । संभवतः अनपेक्षित रुपमा विद्यार्थीबाट आएको असन्तुष्टिले गाउँले राजनीतिको साथ पाएपछि हेडसर एकाएक विचलित बन्नपुगे । उनले एक्कासी हाङपाङ छाडे ।

उनलाई हाङपाङले जसरी ससम्मान दार्जिलिङबाट ल्यायो त्यसरी नै फुलमालाले विदाइ गर्न पाएको भए कत्ति राम्रो हुन्थ्यो । नियतिले त्यो हुन पाएन । उनको व्यक्तिगत कमी कमजोरीमा स्वार्थीतत्वले खेल्ने मौका पायो । स्वाभिमानी स्वभावका गणेशबहादुर राईले आफूविरुद्ध उठेको समूहसित सम्झौता गर्न मानेनन् । उनी आफ्नो अडानमा चट्टानझैं दृढ भइदिए । यसरी २०१८ सालमा हाङपाङ आएका गणेश सरले करिव दुई दशकसम्म हाङपाङको सेवा गरेर आफूखुसी ठाउँ त्याग गरे । उनले विद्यार्थी, शिक्षक, गाउँलेलाई उनको अवस्थाबारे कुनै जानकारी दिएनन् । उनको विदाई कार्यक्रम पनि भएन ।

उनले ससुराली गाउँ फुङलिङ ताप्लेजुङ सदरमुकाममा बोर्डिङ स्कुल खोले । पछि सुन्यौं उनले काठमाडौंमा पनि बोर्डिङ स्कुल चलाए । कालान्तरमा गणेश सर शिक्षककै रुपमा हङकङसम्म पुगे भन्ने पनि थाहा पायौं । हाङपाङ छाडेपछिको उनको शैक्षिक यात्राबारे म त्यत्ति जानकार छैन । यद्यपि, उनले सोचेजस्तो शैक्षिक यात्रा भएन भन्ने कुरा उनको अवस्थाले देखाउँथ्यो ।

जेहोस्, हाङपाङले दुई दशकपछि आकस्मिक रूपमा गणेशसरलाई

गुमाउनु पर्दा दुःख लाग्यो । आवेशमा विद्यालय छाड्दा पेन्सनबाट बञ्चित हुनपरेकामा गणेश सरलाई पनि पछुताउ भयो । लामो अन्तरालमा शिक्षाको उज्यालो हाङपाङले पायो तर सोहीअनुरुप विवेकसम्मत ब्यवहार कतैबाट देखिएन ।

२०७३ सालमा धेरै वर्षपछि गणेशसरलाई भेट्न भक्तपुरस्थित उनको निवासमा गएँ । आठ दशक उमेर पार गरेका गणेश सर पक्षाघातले थला परेको देखें । बोल्न खोजे पनि आवाज नबुझिने भएको थियो । उनका अनुहारमा झल्कने भाव र आँखामा छचल्किने आँशुले धेरै कुरा आभास भयो । कुराकानीमा विद्या गुरुमाले सघाइन् र भनिन्– कोही विद्यार्थी आउँदा उहाँ यसरी नै खुशी र भावविव्हल बन्नुहुन्छ, रूनुहुन्छ ।

**अन्त्यमा**

जेहोस्, गणेश सर एक असल र योग्य शिक्षक थिए । विषयवस्तुमा दक्ष थिए । व्यवहार सरल, शालीन थियो । इमान्दार स्वभावका थिए । उनी स्वाभिमानी थिए, उनले कसैको चाकरी र चाप्लुसी गरेनन् । उनीभित्र कतिपय मानवीय कमी र कमजोरी पनि थिए । यद्यपि, उनका गुन र योगदानका अघि ती अवगुन नगन्य थिए, यो मेरो व्यक्तिगत धारणा हो । हाल भौतिक संसार त्याग गरेका गणेशबहादुर राईले आफ्नो जीवनको उर्वर कालखण्ड गाउँ र गाउँलेलाई समर्पित गरेका थिए । त्यसैले आठराई हाङपाङ क्षेत्र, ताप्लेजुङको शैक्षिक उन्नयनमा उनले गरेको योगदानलाई हामीले कदापि भुल्नु हुँदैन ।

# १९ सम्झनामा जनस्वास्थ्यकर्मी

कक्षामा पढाउने प्रायः शिक्षक हुन् । गुरु ती हुन् जसले दिएको अर्तिले जीवनको बाटो हिड्दा स्वाभिमान चढिन्छ । गुरु ती हुन् जसले अवलम्बन गरेको जीवनशैलीमा आदर्श र जीवनको सत्य प्रकट हुन्छ । त्यसकारण मैले गुरुको परिभाषा केवल शिक्षक, प्रशिक्षकको साँगुरो दायराभन्दा बृहद जीवनयात्रामा भेटिने पात्रलाई समेत गुरु मान्ने गरेको छु । जनस्वास्थ्यलाई कसरी बुझ्ने भनेर व्यवहारमा सिकाउने अग्रज स्व. जनकदास श्रेष्ठलाई यहाँ अघि सार्दैछु ।

उनका बारेमा केही लेखौं भनेर सोचेको करिव डेढ दशक भयो । भोलि भोलि भन्दाभन्दै दिन गयो । त्यसलाई आज पूरा गर्दैछु । गाउँघरमा एउटा उखान छ– व्यवहार गर्दा म भोलि नै मर्छु भनेर गर्नु अनि पढ्दा म सधैँ बाँच्दछु भन्ठान्नु । पहिले कुरो बुझिएन । तर यो त एउटा जीवन दर्शन पो रहेछ । प्रस्तुत भनाइको गहिराई खोज्दा ब्यवहारिक अर्थ भेटिने रहेछ । हामीले आजको काम आजै पूरा गर्नुपर्दछ । ता कि भोलि आफूले गरेको काम आफै बोलोस् । आफू नभए पनि आफ्नो कामले आफै बोलिदेओस् ।

मानिसको जीवन मरणशील भएकाले आफूले गर्न चाहेको काम समयमै गर्नुपर्दछ भन्ने भनाइ ठिकै हो । किनभने सबै मानिसले एक दिन मरेर जाने नियति पालेका हुन्छन् । त्यसैले बाचुन्जेल एकअर्कासित मानवोचित व्यवहार गरौं भन्ने चेतना उक्त उखानमा भेट्न सकिन्छ । यो एक दार्शनिक भनाइ रहेछ । जसलाई हामीले विभिन्न कोणबाट हेर्न सक्दछौं । हामी त्यसबेला आफूलाई आध्यात्मनजिक पाउँछौं । ‘उहिलेका कुरा खुइले’ भनेझैं बुढापाकाका कुरा लत्याए घाटा आफैलाई हुन्छ ।

दुनियाँमा आज पढेलेखेका, जान्ने, गुन्ने मानिस कैंयौं छन् । विश्वविद्यालयबाट विभिन्न उपाधि लिएका विज्ञहरू छन् । कतिपयले विश्वविद्यालयमा पढाएका छन्, त्यहाँ पढ्ने अझ धेरैजना ज्ञानी भएर आउँछन् । तर तिनीहरू प्रायः आफूभित्रको ज्ञानलाई व्यवहारमा नल्याइकन संसारबाट विदा हुन्छन् । हामीले पढेर वा जानेर मात्र केही नहुने रहेछ । परिवार, समाज र जगतका लागि केही काम नगरी बित्यौं भने जीवन ब्यर्थ छ ।

जागिर खाँदै गर्दा कुरैकुरामा बा भन्थे – “नाथे पेट त कुकुरले पनि पाल्छ!

जीवनमा केही गर्नुपर्दछ" । आफूलाई उसबेला आफ्नो र परिवारको पेट पाल्नै हम्मे होला जस्तो लाग्दथ्यो । सरकारी जागिरे जीवनमा निकै मेहनत गरेपछि करिव दुई–तीन दशकमा जब मैले दुई छाक टार्ने व्यवस्था गरें । तब मात्र मलाई बाका भनाइरुपी घाम मनका घैंटामा लागे जस्तो भयो । तब मलाई थाहा हुँदै गयो कि पेटपालोका लागि लिएको शिक्षा अधुरो शिक्षा रहेछ । अब जीवनमा कसरी सिर्जनात्मक काम गरेर गुणात्मक जीवन हासिल गर्ने भनेर सोच्न थालें ।

धेरै पछि मात्र महसूस भयो आफूमा भएको ज्ञानलाई व्यवहारमा उतार्ने मानिस कम हुँदारहेछन् । त्यसैले कम मानिस सफल हुनेरहेछन् । यस्ता सामान्य सैदान्तिक ज्ञान सानैदेखि थाहा नभएको होइन । यस्ता कुरा हामीले वाल्यकालदेखि विद्यालयमा पढ्यौं । यद्यपि यसको मर्म बुझ्न भने मलाई मेरो दाह्रीजुँघा नै फुल्नु पऱ्यो ।

सैद्धान्तिक ज्ञानलाई कहिले, कसरी उतार्नुपर्दछ, यो अहम् सवाल रहेछ । सिक्नलाई वातावरण पनि चाहिने रहेछ । पाएको शिक्षालाई जीवनको कर्मस्थलमा प्रभावकारी ढङ्गले सिकाउने मान्छे पाउनु पनि भाग्य कै कुरा हो । यही अवसर मैले एक जना अग्रज जनस्वास्थ्यविद् जनकदास श्रेष्ठबाट प्राप्त गरे ।

उनले मेरो दिमागको बत्ती बालिदिने काम गरिदिए । उनी भन्दथे– नवराजजी, संसारमा तपाईजस्ता जनस्वास्थ्य विषय पढेका मानिस कैंयौं छन् । उनीहरू विश्वविद्यालयबाट जनस्वास्थयमा स्नातकोत्तर वा एमपीएच पढेपछि आफूलाई जनस्वास्थ्य विज्ञ ठान्दछन् । उनको आशय थियो, असल जनस्वास्थ्यकर्मी हुनलाई आफूमा भएको ज्ञानलाई तत्काल, समयानुकूल कार्यान्वयनमा ल्याउनु पर्दछ । उनी भन्दथे, जो व्यक्तिमा 'ड्राइभ पावर' हुन्छ अर्थात् कार्यान्वयनमा लगाव हुन्छ उसले मात्र प्रतियोगिता जित्दछ । गफ गरेर मात्र हुदैन, मनमा तर्कवितर्क मात्र गरेर हुदैन देखिने गरी काम हुनुपर्दछ । यदि सिर्जनात्मक रचना हो भने त्यसलाई लेखेर प्रकाशमा ल्याउनुपर्छ । तब मात्र तपाईभित्र रहेको ज्ञानको सार्थकता हुन्छ ।

तपाई मनमनै केही कुरा गर्छु भनेर सोच्नुहुन्छ, त्यो राम्रो कुरा हो । त्यसलाई लेखेर, गरेर देखाएपछि मात्र जगतले देख्छ र बुझ्छ । अनि तपाईलाई मानिसले पढ्छन्, बुझ्छन् र दुनियाँले चिन्छ । यसरी व्यक्तित्व निर्माण हुन्छ र त्यसले तपाईको असली पहिचान बन्दछ ।

जनक सरको भनाइ मेरो मनमा गढ्यो । उनले दिएको शिक्षालाई मैले जीवनमा यथासम्भव उतार्ने प्रयास गरें । जनस्वास्थ्यका क्षेत्रमा यसलाई मैले मन्त्रकै रुपमा लिएँ । फलस्वरुप जिल्ला जनस्वास्थ्य कार्यालयका गतिविधिलाई प्रभावकारी, जनमुखी र पारदर्शी बनाउने प्रयत्न गरे ।

जनस्वास्थ्यसम्बन्धी जनचेतना फैलाउन लेख, रचना पत्रपत्रिका, पुस्तकमा प्रकाशित गरे । रेडियो, टेलिभिजन अन्तर्वार्तामार्फत् सन्देश छर्ने प्रयास गरेँ । म कार्यरत जिल्ला जनस्वास्थ्य कार्यालयले देशमा पहिलोपटक एफएम रेडियोमा "समुदायको स्वास्थ्य कार्यक्रम जनस्वास्थ्य" रेडियो कार्यक्रम उत्पादन, प्रशारण

गरेको थियो । रेडियो कार्यक्रमको अवधारणा र सामग्री चयनमा मैले कार्यदललाई परिचालन गरें । श्रोताहरूको पत्रहरूको आधारमा उक्त रेडियो कार्यक्रमले मोरङ जिल्लालगायत पूर्वाञ्चलका हिमाली, पहाडी जिल्लामा पनि सेवा पुऱ्याएको थियो । त्यसअघि जिल्लाको जनस्वास्थ्यलाई ब्यवस्थित गर्न तथ्याङ्क सङ्कलन कार्यलाई जोड दिएँ । त्यस क्रममा मैले जिल्लाको जनस्वास्थ्यको पाश्वचित्र प्रोफायल खोटाङ जिल्लाबाट २०५५ सालमा निकालें, जुन यस क्षेत्रमा पहिलो थियो । त्यस दृष्टान्तलाई पछि सरकारले सबै जिल्लाहरूमा लागु गऱ्यो । हरेक जिल्लाले वार्षिक कार्यप्रगतिको रुपमा जिल्लागत तथ्याङ्क प्रकाशित गर्नुपर्ने चलन त्यसपछि चल्यो । जेहोस्, एउटा राम्रो परम्पराको आरम्भ गर्नमा मैले प्रणाली भित्रैबाट सरकारलाई सकारात्मक दवाव दिएँ ।

जनस्वास्थ्य बाहेक अध्ययन अनुसन्धान र साहित्य सिर्जनामा पनि त्यही मन्त्रलाई मैले अनुशरण गरें । जीवनका हरसम्भव क्षेत्रमा पाएको अर्तीलाई व्यवहारमा उतार्ने प्रयास गरें । मैले कैंयौं वर्षदेखि लेखेर थन्क्याएका रचनालाई प्रकाशमा ल्याएँ । डायरीमा सीमित मेरा गीत, कवितालाई पुस्तकाकार कृतिका रुपमा निकालें । मनमा रहेका संस्मरणलाई पनि मैले सम्पत्ति मानेर लिपिवद्ध गरिदिएँ । यसरी मनमा उठेका भावनालाई तत्काल सिर्जनामा परिणत गरें । सिर्जनालाई संग्रहित पुस्तकका रुपमा प्रकाशन गर्न पाउँदा मेरो ज्ञान र अनुभव सार्थक भएको ठानें । आ... भोलि गर्छु वा जागिर खाइसकेपछि गरौंला नि, भनेर छाडेको भए बुढेशकाल अनुकूल हुनेथिएन । शरीर दुर्वल बन्दै जाँदा साहित्य सेवा प्राथमिकतामा नपर्ने सम्भावना बढी हुन्थ्यो । प्रतिकूल अवस्थामा मेरा रचना, सपना छेपाराको कथाका नियतिमा पर्ने संभावना थियो । क्रियाशील रहेको अवस्थामा प्राप्त अनुभव र ज्ञानलाई लिपिवद्ध गर्ने र त्यसलाई प्रकाशनमा ल्याउने काममा मैले त्यसपछि ढिलासुस्ती गरिन । त्यसैले कतिपय साहित्यकार मैले छिटोछिटो कृति प्रकाशन गरेको देखेर ईर्ष्या गर्ने गर्दथे ।

जेहोस्, श्रेष्ठबाट समेत उत्प्रेरित आत्मबलले मलाई जीवनमा सकारात्मक परिवर्तनको महसूस भयो । फलस्वरुप व्यक्तित्व विकासमा मद्दत पुग्यो ।

पूर्वाञ्थलको जनस्वास्थ्य क्षेत्रमा फर्कौं । हामीले पसिना बगाइरहेको जनस्वास्थ्य क्षेत्रलाई कसरी हेर्ने, बुझ्ने ! सही धारणा बनाउन यसलाई कसरी केलाउने? यस्ता अहम् सवालमा श्रेष्ठको धारणा प्रस्ट थियो । उनी जनस्वास्थ्य कार्यक्रमलाई अत्यन्त सूक्ष्म र आलोचनात्मक नजरले हेर्ने र केलाउने गर्दथे । स्वास्थ्यकर्मीका मौखिक सूचना भन्दा तथ्याङ्कलाई आधार मान्दथे । उनी तथ्यको गहिराइमा पुगेर अवलोकनबाट देखिएका गुणात्मक र दिगोपनमा विश्वास गर्दथे । छलफलमा उनी प्रायः तथ्याङ्कलाई अघि सार्दथे । त्यसैले उनका विचारलाई ध्यानपूर्वक सुनिन्थ्यो । उनको यही विशेषता र दक्षताले जनस्वास्थ्य क्षेत्रमा जनकदास श्रेष्ठ पथप्रदर्शकका रुपमा स्थापित भए ।

अन्यत्रझैं पूर्वाञ्चल क्षेत्रमा हरेक वर्ष स्वास्थ्य कार्यक्रमहरूको समीक्षा गोष्ठीमा

हुने गर्दथ्यो । उक्त गोष्ठीहरूमा उनी प्राविधिक सवालमा सहजीकरण गर्दथे । उनी एक गैरसरकारी संस्था संयुक्त राष्ट्रसंघीय जनसंख्या कोशमा कार्यरत थिए । उनी क्षेत्रीय स्वास्थ्य निर्देशनालय धनकुटालाई प्राविधिक सल्लाह दिने गर्दथे । कार्यक्रम अनुगमन र योजना तर्जूमामा उनी सक्रिय भूमिका खेल्दथे । म क्षेत्रीय निर्देशनालयमा योजना तथा कार्यक्रम अधिकृतका रुपमा कार्यरत थिएँ । त्यहाँ रहँदा उनीसित उठबस भयो । फलस्वरुप औपचारिक, अनौपचारिक रुपमा गरिएका कुराले मनभित्र गहिरो छाप छाड्यो ।

मैले पढेको जनस्वास्थ्यका कोरा ज्ञानलाई यथार्थमा कसरी अनुवाद गर्नसकिने रहेछ भन्ने थाहा पाएँ । धनकुटामा रहँदा केही वर्ष क्षेत्रीय स्वास्थ्य निर्देशनालयको तर्फबाट प्राविधिक रिपोर्ट तयार पार्ने जिम्मेवारी पाएको थिएँ । त्यसबेला मलाई उनले र उनका सहकर्मी डा. के के मिश्रले प्राविधिक परामर्श दिएका थिए । मैले त्यसबेला पूर्वाञ्चलको जनस्वास्थ्यको स्थितिलाई केलाउने राम्रो अवसर पाएँ । उक्त ज्ञानले मलाई पछि जिल्लामा गएर जिल्ला जनस्वास्थ्य कार्यालयको व्यवस्थापन कार्यमा सहयोग पुग्यो । श्रेष्ठको भनाइलाई मैले मनमा नलिएको भए जिल्लामा म सायद त्यत्तिकै हराउँथे होला । यद्यपि जिल्लामा काम गरेर एकहदसम्म देखाउन सक्षम भएँ । यसमा अग्रज श्रेष्ठको समेत योगदान रहेको थियो । त्यसमा श्रेष्ठ र के के मिश्रलाई म कृतज्ञता ज्ञापन गर्दछु ।

मलाई उनको जीवनमा घटेको एउटा सत्यले भने नराम्ररी घायल बनायो । करिव डेढ दशक पूर्वाञ्चल क्षेत्रीय स्वास्थ्य निर्देशनालयसित सहकार्य गरेर वर्षेनी सम्पन्न हुने वार्षिक, अर्धवार्षिक समीक्षा गोष्ठीहरूमा सहजकर्ताका महत्वपूर्ण भूमिकामा रहेका उनै जनकदास श्रेष्ठ सबैका सहयोगी थिए । पूर्वाञ्चलका १६ जिल्लाका जिल्ला स्वास्थ्य कार्यालय, जनस्वास्थ्य कार्यालयमा कार्यरत प्राविधिकहरूका उनी मन मनमा थिए । म त्यसको एक साक्षी हुँ ।

एक साल उनको असामयिक निधन भयो । त्यो साल पनि निर्देशनालयले विराटनगरमा वार्षिक समीक्षा आयोजना गरेको थियो । त्यहाँ उनको भौतिक उपस्थिति अब रहेन । म मनमनै उनको अनुपस्थितिमा दुःखित थिएँ । जिल्लाको एक सहभागीको रुपमा म उपस्थित थिएँ । मलाई आश्चर्य केमा भयो भने, त्यसबेला आयोजक संस्था क्षेत्रीय स्वास्थ्य निर्देशनालयले उनलाई औपचारिक तथा अनौपचारिक रुपमा सम्झेन । उनलाई स्वास्थ्य सेवा विभाग, मंत्रालय तथा १६ जिल्लाका सहभागी कसैले एक सहकर्मीलाई सम्झिन आवश्यक ठानेनन् । कुनै पदाधिकारीले गोष्ठीमा स्वर्गीय जनकदास श्रेष्ठलाई सम्झिएनन् श्रद्धाञ्जली व्यक्त गरिएन । क्षेत्रीय स्वास्थ्य निर्देशनालय जो गोष्ठीको आयोजक संस्था थियो उसले गोष्ठीमा श्रेष्ठको योगदान सम्झेर श्रद्धाञ्जली दिन सक्दथ्यो । के हामी मेसिन भयौं? हामी मानव रहेनौं र? मलाई हाम्रो शैली देखेर आफैलाई धिक्कार लाग्यो ।

हिजोसम्म जसको बोलीलाई सहभागीले गम्भीरतापूर्वक सुन्दथे आज उनको मृत्युमा औपचारिक, अनौपचारिक सोधीखोजी गरिदैन । त्यस्तो अमानवीय दृश्य

देखेर मलाई सारै नरमाइलो लाग्यो । बुझें, आज हामी यसरी जति चुरीफुरी वा फाइँफुइँ गर्दैछौं, भविश्यमा हामीलाई कसैले नसम्झने रहेछन् । मलाई त्यस्तो भावना र ज्ञान प्रकट भयो । म मनमनै एकप्रकारको हतोत्साही भएँ । यो भाव मनमा यति खेल्यो कि अब मलाई यो जागिरे जीवन केही रहेनछ जस्तो लाग्न थाल्यो । मैले जागिर वा सेवा जे भने पनि त्यो केवल आफू छउञ्जेल मात्र रहेछ ।

परिवारलाई खान, लाउन, पढाउन नपुग्ने सरकारी तलब देख्दा देशको लागि काम गरेको भनेर चित्त बुझाइयो । जीवनमा खाउँ खाउँ लाउँ लाउँ भएको बेलामा सरकारी जागिरको बहानामा सधैं अभावको जिन्दगी बिताइयो । अब त यही अभावै अभावमा बाँच्ने बानी पनि परिसक्यो । तीन दशक घोटिँदा घोटिँदा दुई छाक खाने, ओत लाग्ने ब्यवस्था गरे । यहाँभन्दा बढी महत्वकांक्षा एउटा जागिरेको के नै हुन्छ र । मलाई थाहा भयो, मैले जागिर केवल आफ्नै लागि खाएको रहेछु । भयो अब पुग्यो । आर्थिक रुपमा एउटा मध्यम स्तरको नेपाली नागरिकले जिउने जीवन जिउन पाएकोमा म सन्तोष र गौरव मान्दछु ।

मनमा यस्तै कुरा खेल्न थाले । जागिरे जीवनमा मैले उर्जा मानेको व्यक्तिको स्वभाविक निधनमा मेरो मनभित्र अस्वभाविक भूइँचालो गयो । मेरो जागिरलाई मैले त्यसपछि अर्कै दृष्टिले हेर्न थाले । अब अनुकूल पारेर सेवानिवृत्त हुने टुङ्गोमा पुगें । हुन त जन्म, मृत्यु भनेको जीवनमा घट्ने सामान्य घटना हो । तर श्रेष्ठको शून्यताले मनमा  अप्रत्याशित भावनात्मक ज्वारभाटा उत्पन्न गरायो । त्यसबेला लागेको घाउलाई मलमपट्टी गर्न उनको बारेमा दुई शब्द कोर्ने अठोट गरेको थिएँ । त्यो चाहना पूरा हुन पनि झन्डै डेढ दशक लाग्यो ।

हामी मानिस कत्ति स्वार्थी जाती रहेछौं, म यही सोचमा परें । जनस्वास्थ्य क्षेत्रमा उनलाई चिन्ने आज एकसेएक जानिफकार छन् । तर, अग्रजलाई सम्झनासम्म गर्ने फुर्सद र चलन छैन । तुलनात्मक हिसाबले साहित्य जगतमा कुनै कृति वा व्यक्तित्वलाई कमसेकम सम्झना गर्ने गरिन्छ । यो राम्रो कुरो हो । साहित्य क्षेत्रमा दुई–चार पुस्तक लेखेपछि चर्चा हुन्छ । तर जनस्वास्थ्य क्षेत्रमा जति योगदान दिए पनि उसको नाम आउँदैन । त्यो देखेर मलाई नमज्जा लाग्यो । आज विकासका क्षेत्रमा योगदान दिने व्यक्तिको सम्झना गर्ने चलन छैन । यसमा कलमको ध्यान जान जरुरी छ । यसरी अनाम भएका सूचीमा समाजले भुल्नै नहुने कैयौं नाम छन् । यो लेखकहरूको निम्ति पक्कै चुनौति हो ।

हाम्रो देशमा पढेलेखेका दिग्गज, प्राविधिक, प्रशासक, व्यवस्थापक, जानकार मजदूर, किसान, कुशल गृहिणीका मनमा पर्याप्त ज्ञान र शीप छन् । तीमध्ये धेरै जसोले म यसो गर्छु, उसो  गर्छु भनी मनमनमा योजना बनाउँछन् । यद्यपि कार्यान्वयन भने यो वा त्यो बहानामा गर्दैनन् । त्यस्ता धेरै विज्ञ, ज्ञानी मानिसका ज्ञान र शीप उभित्रै सीमित रहन्छ । त्यो सदुपयोग हुनै नपाइ एक दिन उसितै विलिन भएर जान्छ ।

थोरै मानिसले मात्र अठोठ गरेका योजना कार्यान्वयन गर्दछन् । तीमध्ये

बहुसंख्यकले बीचैमा अधुरै छाड्छन् । नगन्य संख्यामा मात्र क्षमताको पूरा उपयोग गर्ने गरिन्छ । श्रेष्ठको जोड यहीँनेर थियो । मानिसमा ज्ञान र शीप मात्र भएर हुँदैन । पहिलो कुरो, उभित्र राम्रो सोंच वा योजना हुनुपर्दछ । योजना बनेर मात्र हुँदैन, त्यसको कार्यान्वयन र नतिजा देखिनुपर्दछ । गुणस्तरीय सेवाको आधारमा मानिसले कार्यक्रम र स्वास्थ्यकर्मीको मूल्याङ्कन गर्दछन् । त्यसैले राम्रो काम आज अहिल्यै थालिहाल्नुपर्दछ वा गरिहाल्नुपर्दछ ।

स्व. जनकदास श्रेष्ठ, मेरा गुरु जसले मलाई जीवनमा अघि बढ्ने दृष्टि, ज्ञान र आत्मबल दिए । म उनको ज्ञान र धारणालाई शिरोपर गर्दछु ।

गुरुको भनाइमा अलिकति के थप्न चाहन्छु भने, अघि बढ्नलाई हरेक मानिसमा आत्मविश्वास पनि चाहिन्छ । आत्मविश्वास भएन भने नतिजा के हुने हो भनेर सम्भावित नतिजाको डरले मानिस पाइला चाल्न हिच्किचाउँछन् । आफैप्रति विश्वास नभएर मानिस अलमल र बहानाबाजी गर्ने गर्दछन् ।

आत्मविश्वास त्यसै प्राप्त हुदैन, त्यो अध्ययन, अनुसन्धान, परीक्षण र अभ्यास वा प्राप्त अनुभवले मात्र हासिल हुन्छ । अतः जीवनमा ज्ञान, शीप, आत्मविश्वासका साथ तत्काल पहलकदमी हुनुपर्दछ । तब मात्र हाम्रा असीमित सपना एक दिन विपनामा परिणत हुनेछन् ।

# २० सम्झनामा महिला स्वास्थ्यकर्मी

सुशिला सुनाम एक लगनशील महिला स्वास्थ्यकर्मीको नाम हो । उनी दलित समुदायबाट उठेकी एक नारी हुन् । नेपाल सरकार स्वास्थ्य तथा जनसंख्या मंत्रालय अन्तर्गत विभिन्न जिल्ला अस्पताल तथा स्वास्थ्य चौकीहरूमा उनले स्वास्थ्य सेवा प्रदान गरिन् । एक महिला भएर पनि गाउँ गाउँमा गएर महिला, बालबालिका लगायतलाई एक परिचारिकाको हैसियतले आधारभूत स्वास्थ्य सेवा प्रदान गरिन् । तर, उनको अल्पायुमै देहवसान भयो । एक सहकर्मीका नाताले सम्झँदा उनले जीवनलाई सार्थक बनाएर गइन् । उनी नेपालकी सामान्य महिला स्वास्थ्यकर्मी तथा प्रतिनिधि पात्र हुन् । तै पनि म उनले स्वास्थ्य क्षेत्रमा पुऱ्याएको स्वभाविक योगदानको कदर गर्दछु ।

उनको पतिको नाम गजलकार खेम नेपाली हो । उनलाई मैले विराटनगरको साहित्यिक जमघट तथा बजारमा भेटें । त्यसपछि सुशिला सुनामसंग चिनजान भयो । सुनाम एक स्वास्थ्य परिचारिकाको रुपमा धनकुटा जिल्लामा एक स्वास्थ्य चौकीमा कार्यरत थिइन् ।

खेम नेपालीले आफ्नी पत्नी सुशिला लामो समय धनकुटा लगायतका पहाडी जिल्लामा कार्यरत रहेकाे बताए । त्यसपछि मैले सुनामको बारेमा चासो राखें । म क्षेत्रिय स्वास्थ्य सेवा निर्देशनालयबाट मोरङ जिल्ला जनस्वास्थय कार्यालयमा झरेको थिएँ । भर्खरै क्षेत्रिय निर्देशनालयबाट मोरङ आएकाले कतै श्रीमतिको सरुवा मिलाउन सकिन्थ्यो कि भन्ने आशय खेम नेपालीले प्रकट गरे । राजनीतिक स्तरबाट प्रयत्न गर्दा पनि पत्नीको सरुवासम्बन्धी काम पार नलागेकोले उनी चिन्तित देखिन्थे । किनभने बुढाबुढीको जागिर अलग स्थानमा भएकाले उनीहरूको दाम्पत्य जीवन अप्ठेरो अवस्थामा पुगेको थियो ।

मैले आफ्नो तर्फबाट प्रयास गर्ने वचन दिएँ किनभने आफ्ना एक सहकर्मी क्षेत्रीय स्वास्थ्य निर्देशनालयमा निर्देशक पदमा कार्यरत थिए । मैले उनलाई गजलकार नेपालीको व्यक्तिगत समस्या देखाएँ र उनीप्रति सहानुभूति राखिदिन आग्रह गरें । नभन्दै उनको सरुवा कोशी अञ्चल अस्पताल मोरङ भयो । यसरी

पहाडमा लामो काल सेवारत सुनामको मोरङ जिल्लामा सरुवा भयो । सुनामले कोशी अञ्चल अस्पतालको जनस्वास्थ्य फाँटमा जिम्मेवारी पाइन् । उनले बालबालिकालाई खोप लगाउने, गर्भवती महिलाको स्वास्थ्य परीक्षण गर्ने जस्ता सेवा दिइन् । म जिल्ला जनस्वास्थ्य कार्यालय मोरङमा कार्यरत थिएँ । एकै जिल्ला भएकाले त्यसको लगत जिल्ला जनस्वास्थ्य कार्यालय मोरङमा पनि आउँथ्यो । सेवाको अनुगमन र मुल्याङ्कन गर्ने काम भयो । यसरी हामी कार्यगत हिसाबले नजिक भयौं ।

सुशिला सुनाम कोशी अञ्चल अस्पतालको संस्थागत क्लिनिकको प्रतिनिधित्व गर्दै जिल्ला जनस्वास्थ्य कार्यालयमा आयोजित बैठकमा उपस्थित हुन्थिन् । महिला तथा बालबालिकालाई उपलब्ध प्राथमिक स्वास्थ्य सेवालाई प्रभावकारी बनाउन उनले महत्वपूर्ण सुझाव दिन्थिन् । हामी मोरङ जिल्लाभित्रका बालबालिका र महिलालाई दिइने आधारभूत स्वास्थ्य सेवालाई कसरी प्रभावकारी बनाउने भनेर छलफल गर्दथ्यौँ । उनी कोशी अञ्चल अस्पतालमा आउने सेवाग्राहीलाई कसरी प्रभावकारी सेवा दिन सकिन्छ भनेर जनस्वास्थ्यसित समन्वय गर्थिन् । विभिन्न बैठकमा हामी मातृशिसु सेवा प्रभावकारी बनाउन प्रतिवद्ध थियौं । मोरङमा साझेदार संस्थाहरूका अनुभव र सुझाव मूल्याङ्कन गर्दै हामो अघि बढ्यौं । सुशिला सुनाम त्यसमा एक पात्र थिइन् ।

एक दिन विहान अचानक कोशी अञ्चल अस्पतालकी नर्सिङ प्रमुख हाँङ्कोन युमा राईको फोन आयो । उनले सुशिला सुनाम विरामी भएर विराट नर्सिङ अस्पतालमा भर्ना भएको जानकारी दिइन् । मैले तत्काल खेम नेपालीलाई फोन गरेँ र एकीन गरें । त्यसपछि अस्पताल गएँ, उनलाई आइसियूमा राखिएको रहेछ । अस्पताल पुगेपछि थाहा भयो, सुनामलाई निमोनिया भएको रहेछ, ।

जनकारीअनुसार उनको छातीको संक्रमण समस्या भएर कोशी अञ्चल अस्पतालमा यसअघि पनि उपचार भइसकेको थियो । त्यहाँबाट उनी निको भएर घर फर्केको अवस्था थियो । रोग बल्झिएर निमोनिया भएको रहेछ । अस्पतालमा खेम नेपालीसंग भेट भएपछि विरामीको अवस्था सुधारोन्मुख छ भन्ने जानकारी पाएँ ।

एक स्वास्थ्यकर्मीको उपचार राम्ररी नै होला भन्ने लागेको थियो । सुनाम छिटै निको होलिन भन्ने विश्वासमा थिएँ । उनका पति नेपालीसित बीचमा फोनमार्फत् सम्पर्कमा थिएँ । उनीसित भएका कुराकानीमा अवस्था सुधार भइरहेको जानकारी पाइरहेको थिएँ ।

केही दिन पछि मोवाइलमा घण्टी बज्यो । फोन उठाउँदा दुःखद समाचार सुन्न पर्‍यो । सुनामको निधन भएको खबर रहेछ । खबरले म स्तब्ध भएँ । मेरा आँखामा सुशिला सुनाम र खेम नेपालीजीको मुहार झल्झली घुम्न थाले । नियतिको अस्वभाविक रुप देखें । आर्यघाटमा खेम नेपाली लगायत उनका शुभचिन्तक स्वास्थ्यकर्मी वरिपरि देखिन्थे । उनलाई परोपकार घाटमा अन्तिम संस्कारको लागि

लगियो । साँझपख दाहसंस्कार गरेर हामी अँध्यारो अनुहार लिएर घर फर्कियौं ।

घर फर्केपछि घरिघरि सम्झन्छु, चित्त बुझ्दैन । यति चाँडै मर्नै नहुने सुशिला अकालमा गइन् । अधवैंशे उमेरमा विदा गर्न कसैको मन मानिरहेको थिएन । किनभने बचाउन सकिने रोग निमोनियाबाट एक स्वास्थ्यकर्मीको ज्यान गएकामा मेरो मन मानिरहेको थिएन । सोचें, उनको स्वास्थ्यस्थितिमा कतै हाम्रो उचित ध्यान पो पुगेन कि ! यही जिज्ञाशाले मलाई घेरिरह्यो र सोच्न थालें ।

स्वास्थ्यकर्मीले श्वास प्रश्वास संक्रमणबाट विराटनगर जस्तो सुविधा सम्पन्न शहरमा उमेरमैं ज्यान गुमाउनु स्वभाविक मान्न सकिन्न । यो एक गम्भीर सवाल थियो । सुनामले कैंयौं महिला तथा बालबालिकाहरूको श्वासप्रश्वास लगायत अन्य रोगबाट बचाइन् । विभिन्न रोगविरुद्ध आफ्नो जीवन समर्पित गरिन् । यसरी यति चाँडै श्वासप्रश्वास संक्रमण भएर अकालमम स्वयम् बितिएला भन्ने हेक्का स्वास्थ्यकर्मी भएर पनि उनलाई भएन होला । फलस्वरुप उनको ज्यान असमयमा गयो ।

मलाई यसबेला हाम्रो स्वास्थ्य प्रणाली कति कमजोर रहेछ भन्ने विश्वास भयो । कोशी अञ्चल अस्पतालबाट समयमैं राम्रो स्वास्थ्य सेवा र परामर्श दिइएको भए सायद यो घटना हुँदैन थियो होला । रोग बल्झेर साधन सम्पन्न निजी अस्पतालमा निमोनियाको उपचार राम्ररी गर्न सकिन्थ्यो । विरामी आफै स्वास्थ्यकर्मी भएको र उनका पति पनि जागरुक भएकाले त्यसमा कुनै कमी नआउला भन्ने लागेको थियो । कहिलेकाहीँ अतिविश्वासले पनि ज्यान जानमा भूमिका खेल्दछ । मानिसको शरीर र मनस्थिति सधैं एकनास हुँदैन । सायद उनको घर र कार्यालयको कार्यबोझले सुनामले रोगलाई मिचेरै जित्छु भन्ने उनले ठानिन् होला । अब समय बितिसकेपछि यस्ता सोच अब बेकार छन् तर पनि म आफैलाई चिमोटिरहेछु ।

बेला बेला सुशिला मेरा आँखा वरिपरि झुल्किन्छिन् । कोशी अञ्चल अस्पताल जाँदा उनलाई कतै देख्छु कि वा भेट्छु कि जस्तो लाग्छ । नाम जस्तै एक सुशील स्वास्थ्यकर्मी, एक मित्रकी धर्मपत्नी सुशिला आज हामीले असमयमै गुमाएका छौं । मैले एकजना जनस्वास्थ्यकर्मीलाई गुमाएको छु । कोशी अञ्चल अस्पतालको संस्थागत क्लिनिकमा उनको कमी महसूस भइरहेको छ ।

आज हाम्रो देशमा कैंयौं सुशिलाहरू विरामीको स्याहार सुसार गर्दागर्दै आफ्नो शरीरको उचित ख्याल गर्न नपाएर बेला नभइ बितेका छन् । तिनको हिसाबकिताब स्वयम् परिवारले राखेको छ कि छैन थाहा छैन । तर, सरकारले यसको लेखाजोखा कतै राखेको छैन । सरकारले स्वाथ्यकर्मी मेसिन जस्तै सधै चल्नुपर्दछ भन्ने मान्यता राख्दछ । जनताको अपेक्षा पनि त्यस्तै नै हुन्छ । जागिरेले तलव खाएपछि जस्तोसुकै दुःख पीरमर्का सहेर भए पनि सेवा दिनुपर्दछ भन्ने सबैको बुझाइ छ ।

यही मानसिक दवाव, महिला स्वास्थ्यकर्मीको सहनशीलता र पारिवारिक अवस्थाले कहिलेकाहीँ नसोचेको परिणाम आउँछ । यिनै परिवेशमा बाँचेकी

सुशिला र हाम्रो राज्यको स्वास्थ्य प्रणालीको हार भयो । सुशिलाको यस्तै नियति भोग्न आज नेपालका जिल्ला, गाउँ, शहरमा कार्यरत स्वास्थ्यकर्मी बाध्य छन् ।

कोरोना कोभिड–१९ महामारीमा नेपालमा धेरै चिकित्सक, नर्स, स्वास्थ्यकर्मी, जनस्वास्थ्यकर्मी, सुरक्षाकर्मी, स्वयमसेवकहरूको भाइरस सङ्क्रमणबाट मृत्यु भएको छ । उनीहरू विरामीको सेवा गर्दा, कोभिड– १९ भाइरसबाट सङ्क्रमित भएर अकालैमा ज्यान गुमाए ।

यसरी जनतालाई रातदिन स्वास्थ्य सेवा दिँदादिँदै आफ्नो अमूल्य जीवन असमयमै गुमाउने सम्पूर्ण स्वास्थ्यकर्मी, सुरक्षाकर्मी, स्वयमसेवक, सबैलाई यस अवसरमा एकमुष्ठ हार्दिक श्रद्धाञ्जली चढाउँछु ।

# २१ सम्झनामा कवि

मेरा एक चीरस्मरणीय कवि पात्र स्व. विश्वनाथ तोदी अग्रवाल जसको कविता पढ्दा मन उद्वेलित भएर आउँछ । उनका पद्यका पङ्ति मेरा मानसपटलमा यताउति नाचिरहेका हुन्छन् । त्यसैले म ती सर्जक जसलाई समाजले कहिल्यै कविको रुपमा चिनेन, यद्यपि, मैले उनलाई एउटा असली कविको रुपमा पाएँ ।

शिक्षाले उनी इञ्जिनियर तथा पेसाले व्यापारी थिए । कार्यक्रममा जब उनी काव्यवाचन गर्दथे तब म उनलाई एक अग्लो साहित्यिक आत्माझैं देख्दथें । नेपाली पाठकमाझ उनको काव्यिक लेखनमा केही मात्रामा भाषा वाधक बन्दथ्यो । उनको प्रस्तुतिमा झल्कने साहित्यिक चेतना र भावनाको उडानका अघि खस नेपाली भाषिक मौलिकता गौण हुन्थे ।

विभिन्न भेलामा उनले उद्घोषणा गर्दा बीच बीचमा घुसाइएका साहित्यिक सामग्रीले उनको प्रतिभाको परिचय दिन्थ्यो । यद्यपि, उनले कवितासङ्ग्रह नै निकाल्ने गरी कविता रचेको कुरो मलाई थाहा थिएन । हुन पनि उनले जीवनको अन्तिम वर्षतिर आफ्ना पद्यमाला प्रकाशित गरेका रहेछन् । ती सामग्री मैले उनको जीवनकालमा पढ्न पाइन । त्यो पढ्ने अवसर मैले उनको जीवनपछि मात्र पाएँ ।

उनको असामयिक निधनको समवेदना दिन गएको बेला उनका सुपुत्रमार्फत् उनको रचनाको छायाप्रति प्राप्त भयो । उनका रचनाभित्र डुब्दै जाँदा मेरा आँखा रसाए । उनलाई मैले साँच्ची कवि नै पाएँ । जस्तो उनको स्वच्छ स्वभाव र बोली त्यस्तै उनको कविता देख्दा मलाई उनको अभाव महसूस भयो । मैले उनलाई श्रद्धाञ्जली दिनलाई अब उनकै काव्यिक शब्दहरू नै पर्याप्त भए ।

काव्यभित्र भाषागत दृष्टिले हिन्दी शब्द प्रचुर मात्रामा भए तापनि तिनले साहित्यिक गहिराइ बढाएका थिए । उनका यही काव्यांशलाई समातेर श्रद्धाञ्जली लेख कोर्दैछु । एक आकर्षक व्यक्तित्व तोदीलाई मेरो लेख–निबन्धसङ्ग्रहको मालामा सप्रेम गाँसेर श्रद्धाञ्जली दिदैछु । यसले मलाई आत्मसन्तुष्टि दिएको छ । काव्यको गहिराइमा जीवनको अर्थ भेटिने छन् । यस अर्थमा उनका नाममा मसी सार्थक पोतिने छन् ।

पिता कालुरामजी तोदी तथा माता मनभरि देवी तोदीको कोखबाट वि.स. २००४ सालमा विराटनगरमा विश्वनाथ तोदीको जन्म भएको थियो । करिव ७४

वर्षको उमेरमा तोदीको हालसालै २०७८ सालमा असामयिक निधन भयो । परिवारले एक असल पिता मात्र नभएर विराटनगरको व्यापार जगतले असल सहकर्मी गुमायो । एक इमान्दार, कर्मठ सामाजिक व्यक्ति अस्तायो । साहित्यिक मनले एक मेघावी कवि मन गुमायो । विराटनगर र आसपासका धार्मिक तथा आध्यात्मिक संघसंस्थाले एक दानवीर संरक्षक गुमायो । किनभने धार्मिक र आध्यात्मिक क्षेत्रमा उनले आर्थिक दान मात्र होइन समय र जीवन खर्चेका थिए ।

उनी विरानगरको सामाजिक संघसंस्थामा सक्रिय थिए । उनले नेपाल सतमत संघका अध्यक्ष पदमा काम गरे, तत्पश्चात संरक्षक पदमा रहेर काम गरे । ती संस्थाहरूले नित्य भजन किर्तन लगायतका धार्मिक आध्यात्मिक गतिविधि संचालन गर्ने गर्दछन् । उनी बजरङ्ग भजन मण्डलका पनि संस्थापक अध्यक्ष हुन् । रोटरी क्लब विराटनगरमा उनी सन् २००५–६ को अध्यक्ष पदमा आसिन थिए । उनी यसअघि र पछि पनि रोटरी क्लब विराटनगरमा लामो काल आबद्ध रहे । तोदी कुनै सार्वजनिक समारोह सञ्चालन गर्न सिपालु थिए । उनी आफूले सञ्चालन गरेका कार्यक्रमहरूमा बीचबीचमा पद्यांश सुनाएर स्रोतालाई मन्त्रमुग्ध तुल्याउँथे ।

विराटनगरको साहित्यिक इतिहासमा वि.स. २०६८ सालको विशेष महत्व छ । यो वर्ष विराटनगरमा विश्व मारवाडी साहित्य सम्मेलन–२०६८ आयोजना भएको थियो । जहाँ भारतीय कविहरू प्रमुख अतिथिका रुपमा उपस्थित थिए । नेपाली भाषाका केही कविलाई पनि उक्त सम्मेलनमा निमन्त्रणा गरिएको थियो । एक प्रतिनिधि कविको रुपमा मैले पनि कविता सुनाउने अवसर पाएँ । कविता सुनाउनु कुनै नौलो वा ठूलो कुरो नभए तापनि त्यहाँको साहित्यक माहौल र मारवाडी संस्कार देखेर म चकित भएँ ।

उक्त विश्व मारवाडी कवि सम्मेलन समारोहको संचालक कवि विश्वनाथ तोदी थिए । उनले कार्यक्रम संचालन आकर्षक ढङ्गले गरेका थिए । उनको अग्लो कदमाथि स्पष्ट, मीठो भाषा, विनम्र शैलीले उनी थप अग्ला देखिन्थे । मारवाडी शैलीमा चलेको काव्यगोष्ठी मलाई रमाइलो लागेको थियो । त्यहाँ महिला कविहरूको उल्लेख्य उपस्थितिले नयाँ सन्देश दिइरहेको थियो । हामीलाई लाग्दथ्यो मारवाडी समुदायमा महिलालाई बाहिर निस्केर बोल्ने स्वतन्त्रता त्यति हुँदैन । तर, त्यहाँ महिला मारवाडी कविहरूको उपस्थिति र उनीहरूका कविता सुन्दा त्यो धारणा परिवर्तन भयो । उनीहरूले वाचन गरेका कविता स्तरीय थिए । उनीहरूको प्रतिभा देखेर म प्रभावित भएँ ।

यही विश्व मारवाडी कवि सम्मेलनको करिव एक दशकपछि हामीले उनलाई विदा गर्नुपर्ने दिन आयो । विश्वमा सन् २०२०–२१ मा फैलेको कोरोना कोभिड–१९ महामारीको कहर विराटनगरमा पनि उर्लियो । जाडो मौसम थियो, हामी घर भित्रै थुनिएर बसेका थियौं । त्यस्तो अवस्थामा पनि तोदी गरिव झुपडीमा पुगेर जाडोबाट बच्नलाई कम्बल बाँड्दै गरेको तस्वीर मैले सामाजिक सञ्जाल फेसबुकमा देखेँ । उनको समाजसेवा दखेर मनमनै प्रशंसा गरें र फेसबुकमा पनि लाइक गरेँ ।

यो परिदृश्य देखेको करिव एकमहिना बित्दा नबित्दै एउटा दुःखद समाचार मैले उही सामाजिक सञ्जालमा पढ्नु पऱ्यो । उनै विश्वनाथ तोदीको असामयिक निधन भएको समाचार पढनासाथ पत्याउनै सकिन । यद्यपि, कोरोना कोभिड महामारीले दिनदिनै सयौं मानिसको मृत्युको समाचारले विराटनगरको माहौल अन्यौल र विष्मयले भरिपूर्ण भैसकेको थियो । विराटनगरमा कोभिडबाट ज्यान जानेहरूको दाहसंस्कार आफन्तले नै गर्न नपाउने स्थिति आएको थियो । नगरपालिका, प्रशासन तथा सैनिकले मृतकको अन्त्येष्ठि गरिदिने व्यवस्था मिलाएका थिए । त्यसबेला को कहाँ मऱ्यो? कहिले मऱ्यो? सोधीखोजी गर्ने, मलामी जाने अवस्था थिएन । त्यस्तो बेला आफू कसरी बाँच्ने भन्ने मात्र चिन्ता व्याप्त थियो । अकल्पनीय त्यस्तो सून्यकालमा हामीलाई एक्लै पारेर कवि मोदी संसारबाट विदा लिए ।

एकदिन महामारीको तिव्रता केही कम भएपछि प्रशासनले हिडडुलमा खुकुलो बनायो । त्यही अवस्थामा म पनि बजार निस्किएँ । बाटोमा पर्ने उनको पसलमा छिरें । उनका सुपुत्र अभिषेकलाई पिताजीको असामयिक निधनप्रति समवेदना प्रकट गरें । उनले मलाई भारी स्वरमा पिताजीका बारेमा केही कोरिदिन आग्रह गरे । मैले पनि तत्काल स्वीकार गरिदिएँ । तर, केही कोर्नलाई उनको जीवनी र कृतिहरू मसित थिएनन् । सामग्री इमेलमा पठाइदिन उनलाई भनें । उनले केही सामग्री भाइबरमार्फत् पठाइदिए । सामग्री निकै लामो थियो । समय लगाएर अध्ययन गरें । हुन त मैले उनका छोरा अभिषेकलाई केही महिनामा लेखेर पठाउँला भनेको थिएँ । भने बमोजिम समयमा लेखन पूरा गर्न र पठाउन सकिन । आज निकै महिनापछि कवि तोदीलाई उनकै काव्यिक लहरी समातेर भावपूर्ण श्रद्धाञ्जली दिँदैछु ।

मैले कवि तोदीसित गरेका कुराकानी सम्झिएँ । उनी मेरा रचना र कृतिका एक प्रिय पाठक थिए । आज उनको अन्त्यपछि मात्र म उनको प्रिय पाठक भएँ । यसअघि उनले मेरा कविता, निबन्धसङ्ग्रह र गीतिएल्बम् सुनेर मलाई प्रशंसा गर्ने गर्दथे । म त्यसलाई केवल एक औपचारिकता ठान्दथें । वास्तवमा मैले त्यसबेला उनलाई राम्ररी चिन्न सकेको रहेनछु । उनका काव्य रचना पढ्दा मात्र मलाई थाहा भयो उनी कति गम्भीर साहित्यकार रहेछन् । फलस्वरुप म अहिले केही हरफ कोर्न अभिप्रेरित भएको छु ।

कवि तोदीको फुटकर पद्यसङ्ग्रह उनको मृत्युपश्चात् मलाई हात लागेको छ । काव्यमा उनले भाषाले भन्दा भावनाले जितेका छन् । नेपाली भाषामा लेखिएका कतिपय कवितामा हिन्दी शब्द मिसिएका छन् । यो उनको सांस्कृतिक पृष्ठभूमिले गर्दा हुनगएको थियो । उनको पारिवारिक वातावरणमा मारवाडी भाषा र हिन्दी भाषाको प्रयोग हुन्छ । यसको प्रभाव उनको कवितामा पर्नु स्वभाविक छ । यद्यपि, हिन्दी शब्द स्वयममा सुन्दर र खँदिला हुन्छन् । त्यसले उनको भावनालाई उचालेका छन् । यहाँ मानिसको भावना र साहित्यलाई भाषिक कसीमा मात्र घोटेर

दाँज्न मिल्दैन । साहित्यले केवल भाषा मात्र नबोकेर भावनामा उचालिएको हुन्छ । त्यसैले उनका काव्यले मेरो मन भित्रैसम्म छोयो ।

यद्यपि, यहाँ हिन्दी मिश्रित नेपाली कविताभन्दा विशुद्ध हिन्दी कवितालाई मैले छानेको छु । हिन्दी कवितामा उनको कवित्वको विशेष झल्को पाइन्छ । उनका कविताका विशेषता भन्नुपर्दा उनी एक मानवतावादी, स्वच्छन्दवादी कवि हुन् । उनले जीवनको अतियथार्थलाई सहज रुपमा प्रकट गरेका छन् । उनले प्रयोग गरेका अलङ्कार, बिम्व र रुपकले उनी एक परिपक्व आध्यात्मिक कवि भएको छर्लङ्ग हुन्छ । म उनका केही कविता यहाँ राख्दैछु ।

आप जब हँस रहे होते हैं,
तो ईश्वर की “इबादत” कर रहे होते हैं ।
तो ईश्वर आपके लिए “इबादत” कर रहा होता है ।।
पलटु
जगत हँसे तो हँसन दे
“पलटु” हँसे न राम ।
लोक लाज कुल छाडि के,
करलो अपना काम ।।

कवि तोदी आध्यात्मिक जगतसित आबद्ध छन् । यसको संकेत उनको गुरुभक्ति र कर्मशील बन्ने सन्देश बोकेको काव्यांशले दिन्छ । उनी गुरुलाई आफ्नो आदर्श मान्दछन् । गुरुको मार्गनिर्देलाई जीवनको लक्ष्य बनाउँछन् । धर्म, कर्म र आध्यात्मले जीवनलाई सतमार्गमा डोऱ्याउँछ । यिनीहरू नै उनका मार्गदर्शक सिद्धान्त हुन् । यही ज्ञानले उनको काव्यचेतना प्रभावित छ, पल्लवित छ ।

कुनै काम सानो हुँदैन । यदि आफूले गरेको कामलाई कसैले हेयदृष्टिले हेरेमा त्यसलाई वास्ता गर्नु हुँदैन । अरूका आलोचना सहेर भए पनि आफ्नो व्यवसायमा अघि बढ्नु पर्दछ भन्ने सन्देश उनको काव्यमा पाइन्छ । यो ज्ञान जीवनोपयोगी सन्देश हो । आज नेपालमा खेतीपाती गर्न, गाईवस्तु पाल्ने कामलाई हेय दृष्टिले हेरिन्छ । त्यही भ्रममा लाखौं नेपाली युवा विदेश जान्छन् । विदेशमा सोही काम गरेर पैसा कमाएपछि बल्ल उनीहरूको आँखा खुल्दछ । त्यसैले उनीहरू नेपाल फर्केर कृषि पेशामा लागेका छन् । यो सन्देश नेपाली युवालाई उत्तिकै कामलाग्ने पाठ हो ।

उनले रचना गरेको ‘महाप्रणय का गीत’ कवितामा उनको गुरुभक्तिको भाव प्रकट भएको छ । आध्यात्मिक सुर र तालमा बगेका काव्यांशले जीवनको सत्य प्रकाशित गरेका छन् । हेरौं कविता, ‘महाप्रणय का गीत’

जाने से पहले, गीत मुझे एक गाना है
महाप्रयाण की बेला में, छन्द एम गुनगुनाना है ।

गीत तो वही है जो हँस हँस कर
अपने कंठो से गाए हों
भाव तो वही जो नाच नाच
अपने प्राणों मे छाये हो
क्या होगा, दुनियाँकी सुरताल से?
मुझको निज सरगम पर आना है ।।१।।

"आहत" नाद की दुनियाँने
आहत मुझे बनाया है
हृदय की चोट विदारक थी
सद्‌गुरु ने उसे सहलाया है
अपने ही गीतों का मुझको व्याह रचाना है
मन–प्राण का साज बजाना है ।।२।।

अब तो कृपा करो हे भगवन
अपने घर वापस आउँ मैं
अब तो दया करो हे गुरुवर!
अपने मितवा को पाउँ मैं
परम उत्सव के उस पल को
अनाहत नाद से सजाना है ।।३।।

आफ्नो जीवनको अन्तिम क्षणको अनुमान उनले गरेका रहेछन् । यतिञ्जेल उनलाई गुरुले दिएको आत्मज्ञानले बचाएको रहेछ । यो भौतिक संसारले लगाएको चोटलाई उनले गुरुकै वचनले मलहमपट्टि गरेका रहेछन् । अब उनको महाप्रस्थानको लागि उनी मानसिक रुपमा थकित र चकित दुवै भएको झल्को काव्यमा झल्कन्छ । यो नियति केवल कवि विश्वनाथ तोदीको मात्र नभएर उच्च, मध्यम, निम्नवर्गीय नेपाली समाजका ज्येष्ठ नागरिकका साझा पीडा हो । उनको यो भावले आम वृद्धवृद्धाको पीडालाई प्रतिबिम्वित गर्दछ ।

कवि विश्वनाथ तोदी दिल्लीस्थित मेदान्त अस्पतालको शैय्यामा जब छट्पटाइरहेका थिए तब उनी मृत्युसित गहन सम्बादमा तल्लीन थिए । त्यसको साक्षी प्रस्तुत 'मेरी मौत, मेरी महबूबा' कविता छ । आखिर म तिमीसित जाने नै भएँ, मेरा केही चाहना तिमी किन सोध्दैनौं भनेर मृत्युलाई उनी सोधनी गर्दैछन् । त्यो अन्तिम अवस्थासम्म पनि उनी शिष्टाचार पूरा गर्न खोजिरहेका छन् । उनले जीवन जिउँदा लागेको ऋण बाँकी भए त्यो सबै चुक्ता गर्न चाहन्छन् । आफ्ना आदरणीय गुरुसित अन्तिम ढोगभेट गर्ने इच्छा प्रकट गर्दछन् ।

कवितामा उनले आफ्ना साथीभाइसित विदाईका हात हल्लाउँदै छन् । आफ्नी प्राणप्यारीलाई अब उतै भेट्ने र उनको लागि चुरा र सिंदूर लगिदिने उत्कट

चाहना राखेका छन् । मृत्युले उनको एक हात समाएर घिसारिरहेको बेला कवि तोदी अर्को हातले आफ्ना चाहनालाई आँशुले अक्षरमा पोतिरहेका छन् । उनको काव्यांशमा डुब्दा उनका आफन्तका मन मात्र होइन मानव हृदय टोहोलाउँछ ।

आध्यात्मलाई राम्ररी आत्मसात गरेका कवि तोदीको कवितामा म जताततै आध्यात्मको सुगन्ध पाउँछु । कवितामा व्यक्त भावना जति स्वभाविक र सुन्दर छन्, उत्तिकै हृदयविदारक पनि । आहा, आध्यात्मले मानिसलाई मृत्युसित जुझ्नभन्दा पनि सम्झौता गर्न सिकाउँदो रहेछ । सबैसित हाँसिहाँसि विदा लिन सिकाउँदो रहेछ । हुन पनि जतिसुकै छट्पटाएर मृत्युसित लाप्पा खेले पनि आखिर उसले एकदिन लान्छ नै । त्यो बुझेका कवि तादीले आफ्नो मृत्युलाई सहज स्वीकारेर भौतिक दुनियाँसित हात हल्लाउँदै विदा मागेका छन् । आफ्नो जीवनमा दर्शाएको संस्कार र शिष्टाचार पूरा गर्दै काव्यरुपी हात उठाएर विदा भएका छन् । उनलाई विदा दिन मन नमाने पनि कर लागेको छ, आज । उनको 'मेरी मौत, मेरी महबूबा' कविता यहाँ भावनाको उच्च पहाड बनेर यसरी उभिएको छ–

सब्र कर ! ठहर जरा !
जल्दी क्या है?
चलता हूँ, अभी चलता हूँ ।।

जिन्दगी तो वेवफा है,
एक दिन ठुकरायेगी !
तूँ (मृत्यु) तो महबूबा है मेरी
एक दिन ले के जाएगी ।१।।

ठहर जरा !
गुरु–गीत एक गा लूँ, तो चलूँ ।
मुहब्बत का एक तराना गुनगुना लूँ,
तो चलूँ ।२।।

ठहर जरा !
संतों से विदा ले लूँ, तो चलूँ ।
दोस्तों से अलविदा कह दूँ,
तो चलूँ ।३।।

ठहर जरा !
कुछ कर्ज उतार लूँ, तो चलूँ ।
कुछ फर्ज निभा लूँ,

तो चलूँ ।४।।

ठहर जरा !
उस दो जहाँ के मालिक, के लिए,
पाप–पुण्य की पोटली बनालूँ,
तो चलूँ ।५।।

ठहर जरा,
मेरी जाने–जाँ मुझे, वहीँ मिलेगी ।
उसके लिए कुछ चुडियाँ–सिन्दूर ले लूँ,
तो चलूँ ।६।।

अन्त्यमा,

हामी पाठकलाई मर्मस्पर्शी हरफ लेखेर कवि तोदीले आखिर महाप्रस्थान गरेका छन् । उच्चस्तरको भावनाले भरिएका मानवतावदी काव्य रचना दिएर उनले आफन्त, शुभचिन्तक, पाठकलाई भारी मन बनाइदिएका छन् । उनका तिनै हृदयस्पर्शी काव्य रचनाले हामीलाई उनको रिक्तता र उपस्थिति दुवैको आभास दिनेछन् ।

उनले समाजसेवामा हिँडेका पाइला र सतप्रयासका छाप समाजले सदा सम्झनेछ । यदी जीवनलाई ऋण मान्ने हो भने उनले जीवनको सम्पूर्ण कर्जा चुकाएर गएका छन् । भौतिक भार सबै बिसाएका छन् । म उनको कवि आत्माको चीरशान्तिको कामना गर्दछु ।

**सन्दर्भ सामग्री**

तोदी, कालुराम (२०७९) आत्मकथा,
तोदी, कालुराम (२०७९) भजनसङ्ग्रह ।

# २२ बौद्धिक सम्पत्ति

कुनै व्यक्तिले आफ्नो ज्ञान, विवेक, कलाको प्रयोग गरेर सिर्जना गरेको वस्तुलाई बौद्धिक सम्पत्ति भनिन्छ । साहित्य, सङ्गीत, कला क्षेत्रमा उत्पादित सिर्जना गद्य, पद्य, नाटक, गीतसङ्गीत बौद्धिक सम्पत्ति हुन् । जस्तै, साहित्यकारले लेखेका कथा, कविता, नाटक उनीहरूको बौद्धिक सम्पत्ति हुन् । कुनै गीत रचनाकार, सङ्गीतकार तथा गायकका बौद्धिक सम्पत्ति हुन् । यी बौद्धिक सम्पत्तिलाई प्रतिलिपि अधिकार कानुनले सुरक्षित गरेको हुन्छ ।

विश्वमा हरेक वर्ष अप्रिल २६ का दिन विश्वमा यो बौद्धिक सम्पत्ति दिवस मनाइन्छ । यो दिवस मनाउनलाई कुनै प्लेकार्ड वा ब्यानर बोकेर नगर परिक्रमा गरिरहन पर्दैन । सकिन्छ भने बौद्धिक जमात एकै ठाउँमा बसेर यसबारे छलफल गर्न सकिन्छ । एक्लै बसेर भए पनि यसको मूल्य र मान्यताबारे चिन्तन मनन् गरेर वौद्धिक दिवसलाई सार्थक तुल्याउन सकिन्छ ।

मान्छेले आफ्नो बुद्धिले सिर्जना गरेका सबै कुरा बौद्धिक सम्पत्ति हुन् । यद्यपि मूर्त वा अमूर्त रचना वा अभिव्यक्ति जो बौद्धिक सम्पत्ति हुनलाई मौलिक हुनै पर्दछ । यसपछि यो अधिकार स्रष्टालाई स्वतः प्राप्त हुन्छ चाहे त्यो वस्तु गुणस्तरीय, उपयोगी वा मूल्यवान होस् वा नहोस् ।

यस्तो अधिकार प्राप्त गर्न सर्जकले कुनै औपचारिकता पूरा गरिरहनु पर्दैन । सार्वजनिक अभिलेख राख्नका लागि वा प्रमाण पुऱ्याउनका लागि स्वैच्छिक रूपमा दर्ता गर्न सकिने ब्यवस्था गरिएको छ । नेपालमा पनि यस सम्बन्धि ब्यवस्था प्रतिलिपि अधिकार ऐन २०५९ र प्रतिलिपि अधिकार नियमावली २०६१ मा व्यवस्था छ । उपरोक्त ऐन, नियम कार्यान्वयन गर्न नेपाल प्रतिलिपि अधिकार रजिष्ट्रारको कार्यालय स्थापना भएको छ ।

बौद्धिक सम्पतिलाई सामान्यतयाः दुई भागमा बाँड्न सकिन्छ— (१) प्रतिलिपि अधिकार (२) औद्योगिक सम्पत्ति अधिकार । लेखन, कला, सिर्जना आदि प्रतिलिपि अधिकार अन्तर्गत पर्दछ । आविष्कारमूलक काम पेटेन्ट अधिकारमा पर्दछ । वस्तुको मौलिक डिजाइन आदिको संरक्षण डिजाइन अधिकारले गर्दछ । कुनै उत्पादकले आफ्नो वस्तु तथा सेवाहरूलाई अरूको भन्दा फरक देखाउन वा चिनाउन विशेष चिन्ह ट्रेडमार्कको प्रयोग गर्ने गर्दछन् । त्यसको संरक्षण औद्योगिक सम्पत्तिसम्बन्धी बौद्धिक अधिकारले गर्दछ ।

प्रतिलिपि अधिकारका क्षेत्रहरूमा मानिसका रचनात्मक र सिर्जनात्मक

कामहरू पर्दछन् । एक दृष्टिकोणले हेर्दा यो क्षेत्र असीमित छ, तापनि यसलाई ब्यवस्थित बनाउन वौद्धिक सम्पत्तिलाई निम्नानुसार बर्गीकरण गरिएको छ । (१) लेखनकार्यः लेख, निबन्ध, उपन्यास, कथा, कविता, नाटक, पाठ्यपुस्तक, वेभपेज, विज्ञापन सन्देश, सङ्गीत तथा नृत्यका संकेतहरू आदि । (२) सांगीतिक कार्यः गीत, सङ्गीत आदि । (३) कलात्मक कार्यः चित्रकला, मूर्तिकला, रेखाचित्र, फोटोग्राफी, नक्सा, खाकाचित्र आदि । (४) नाट्य वा नृत्य रचनाः नाटक, ओपेरा, नाच आदि । (५) चलचित्रजन्य रचनाः चलचित्र, भिडियो खेल, टेलिभिजन कार्यक्रम, कार्टुन फिल्म आदि । (६) कम्प्यूटर रचनाः कम्प्यूटर प्रोग्राम, सफ्टवेयर आदि ।

वर्न महासन्धिका अनुसार प्रतिलिपि अधिकारका किसिमहरूमा सामान्यतयाः दुईवटा अधिकार मुख्य मानिन्छन् । (१) आर्थिक अधिकार (२) नैतिक अधिकार । कुनै स्रष्टाले रचनाबाट प्राप्त हुने आयमा उसलाई लाभको अधिकार प्राप्त हुन्छ । अर्कातिर कृतिकारको नाम वा जस पाउने अधिकार पनि कानूनले सुरक्षित राखेको हुन्छ । साथै, रचनामा सर्जकको सर्वाधिकार वा लाभांश पाउने अधिकार रहन्छ ।

आर्थिक अधिकार अन्तर्गत पुनः उत्पादन गर्ने, अनुवाद गर्ने, शैली परिवर्तन गर्ने, वितरण गर्ने, प्रशारण गर्ने, सार्वजनिक सञ्चार गर्ने प्रावधान पर्दछन् । नैतिक अधिकार अन्तर्गत आफ्नो रचनाको ख्याति, सम्मान, प्रतिष्ठा कायम राख्ने अधिकार पर्दछन् । यस अन्तर्गत रचनामा वास्तविक वा छद्म नाम उल्लेख गर्न पाउने अधिकार निहित रहन्छ ।

प्रतिलिपि अधिकार प्राप्त हुने अवधि पनि कानुनमा ब्यवस्था गरिएको हुन्छ । यो अधिकार सर्जकलाई सदा उपलब्ध रहँदैन । राज्यको कानुनले रचनाकार वा रचनाको किसिम अनुसार प्रतिलिपि अधिकार संरक्षण अवधिको सीमा तोकेको छ । उक्त संरक्षण अवधि समाप्त भएपछि त्यस्ता रचना सार्वजनिक सम्पत्ति हुन्छन् । वर्न महासन्धिले रचयिताको जीवनभर र मृत्युपछि ५० वर्षसम्म प्रतिलिपि अधिकार संरक्षण गरिदिनु पर्ने न्यूनतम शर्त तोकेको छ । कतिपय मुलुकले यो समयावधि भन्दा बढी समयावधि तोकेका छन् । अज्ञात रचनाकारको हकमा भने रचना प्रकाशित भएको मितिले ५० वर्ष प्रतिलिपि अधिकार सुरक्षित रहन्छ । कुनै रचनाको धनी ब्यक्ति नभइ संस्था भएमा प्रकाशित भएको मितिले ५० वर्षसम्म मात्र प्रतिलिपि अधिकार कायम रहने ब्यवस्था गरिएको छ ।

प्रतिलिपि अधिकार अन्तर्गत धनीको स्वीकृति नलिइकन पनि कुनै रचनाको प्रयोग गर्न पाइदैन । केही अवस्थामा भने प्रयोग गर्न पाइने विशेष ब्यवस्था प्रतिलिपि अधिकारसम्बन्धी कानुनमा गरिएको छ । जसलाई असल नियतको सिद्धान्त भनिन्छ । यस अन्तर्गत अरूको रचना प्रयोग गर्दा सकिने अवस्था निम्नानुसार छन्—

(१) कुनै रचनाको सानो अंश उद्धरण गर्दा,
(२) पढाउने कामको लागि प्रयोग गर्दा,
(३) समाचार सम्प्रेषण गर्दा,

(४) संग्रह वा व्यक्तिगत रूपमा प्रयोग गर्न एक प्रति प्रतिलिपि बनाउँदा ।

उल्लेखित अवस्थामा अरूको रचनाको कुनै सानो अंश उद्धरण गर्दा वा शैक्षिक प्रयोजन वा समाचारको लागि अन्यको रचना प्रयोग गर्दा मूल रचना वा रचनाकारको नाम तथा स्रोत खुलाउनै पर्दछ । व्यक्तिगत प्रयोजनको लागि एक प्रति बनाउन सकिन्छ तर त्यसको व्यवसायिक वा आर्थिक लाभ हुने गरी प्रयोग गर्न भने पाइदैन ।

प्रतिलिपि अधिकारको उल्लङ्घन विभिन्न प्रवृत्ति र स्वरुपमा हुने गरेका छन् । त्यसलाई अपराध मानिन्छ । त्यस्ता अपराध क्षेत्रहरू अनेक छन् । जस्तै, अरूको रचनाका पूरै वा आंशिक अंश नक्कल गरेर आफ्नो रचना हो भनेर उत्पादन बिक्री वितरण गर्नेलाई नक्कली प्रवृत्ति पाइरेसी (डकैती) भनिन्छ । त्यस्तै अरूको रचना जस्तै पुस्तक, सङ्गीत, चलचित्र, कम्प्यूटर सफ्टवेयर, भिडियो गेम आदिको बिना अनुमति नक्कली कपी उत्पादन गरी बिक्री वितरण गर्नु डकैती हो । आजकल डिजिटल प्रविधि तथा इन्टरनेटको माध्यमबाट हुने सामग्रीहरूको डाउनलोड, अपलोड, पीटूपी फायल सेयरिङ गरेर बिक्री वितरण तथा आदान प्रदान हुने गरेका छन् । यसबाट प्रतिलिपि अधिकार संरक्षणमा थप चुनौति थपिएको छ ।

विश्वमा बौद्धिक सम्पत्ति संरक्षणमा धेरै काम भएका छन् । रोम महासन्धि १९६१, विश्व बौद्धिक सम्पत्ति प्रतिलिपि अधिकार सम्झौता १९९६ र विश्व बौद्धिक सम्पत्ति कार्यान्वयन सन्धि १९९६ महत्वपूर्ण छन् । ती सन्धि कार्यान्वयनले मानव जातिको बौद्धिक सिर्जनशीलतालाई टेवा दिएको छ । यसबाट भावी पुस्ता पनि लाभान्वित हुनेछन् ।

बौद्धिक सम्पत्ति सम्बन्धी अन्तराष्ट्रिय सन्धि सम्झौताहरूका शर्त सबै राष्ट्रले पालना गर्नुपर्दछ । मेलमिलाप तथा मध्यस्थता जस्ता विवाद समाधानका सरल उपायहरू पनि अपनाउन सकिने प्रचलन रहेको पाइन्छ । वर्न महासन्धि जसमा नेपाल लगायत १६० मुलुकहरूले हस्ताक्षर गरेका छन् । जसअनुसार सदस्य राष्ट्रले अर्को मुलुकको नागरिकको रचनालाई पनि आफ्नो मुलुकको नागरिकलाई दिने सरहको बौद्धिक सम्पत्ति सुरक्षा दिनु पर्दछ ।

जेनेभामा प्रधान कार्यालय रहेको संयुक्त राष्ट्र संघको विशिष्टीकृत अन्तर्राष्ट्रिय संस्था विश्व बौद्धिक सम्पत्ति संगठनले यो अधिकारलाई सुदृढ बनाउने जिम्मेवारी लिएको छ । एक सदस्य राष्ट्रको हैसियतले नेपाल पनि त्यसमा प्रतिबद्ध छ ।

प्रतिलिपि अधिकारलाई प्रभावकारी बनाउन अपराध नियन्त्रणमा ध्यान दिनु पर्दछ । त्यसका लागि देवानी र फौजदारी दुवै प्रकारका कानुनी उपचारको ब्यवस्था अद्यावधिक गर्दै जानुपर्दछ । अन्य मुलुकबाट प्रतिलिपि अधिकार उल्लंघन गरेका माल वस्तु आयात रोक्न भन्सारमा नै नियन्त्रण गर्नु पर्दछ । देशभित्र राज्यका सयन्त्रहरूले नियमित अनुगमन गरी कानुन कार्यान्वयन गर्नुपर्दछ ।

अन्त्यमा, हरेक धनी वा लेखकले आफ्नो प्रतिलिपि अधिकार र अरुको अधिकारबारे सचेत रहनुपर्दछ ।

**सन्दर्भ सामग्री**

डब्लुआइपी (२०३१, नोभेम्बर २७) कपिराइट, वाट इज कपिराइट, https://www.wipo.int/copyright/en/

डब्लुआइपी (१९९६) कपिराइट ट्रिटी (डब्लुसिटी)– १९९६,

नेपाल कपिराइट रजिष्ट्रार अफिस (२०२१, नोभेम्बर २७) अ ब्रिफ इन्ट्रोडक्सन अफ कपिराइट एण्ड इट्स डिफरेन्ट एसपेक्ट्स्, www.nepalcopyright.gov.np

# २३ मेरो गीतियात्राको संक्षिप्त आत्मसमीक्षा

चार दशक लामो सांगीतिक यात्रामा अब मलाई केही बेर आत्मसमीक्षा गर्न मन लाग्यो । चालीस वर्ष अघिदेखिका बेलाबखत उदाउने भावनालाई मैले मेरा सांगीतिक सिर्जनामा समेटेँ । औंला भाँचेर गन्नुपर्दा हालसम्म ६ थान एलबम् र दुई थान गीतिसङ्ग्रह रचना गरेँछु ।

एल्बमतर्फ हालसम्म 'देशको माया' (देशभक्तिगीत, २०६३), 'लुकेको रहर' (गजल, २०६७), 'अमूल्य जीवन' (आधुनिकगीत, २०६८), 'हामी पहिले नेपाली' (देशभक्तिगीत, २०६९), 'हिमालैमा हिउँ' (लोकगीत, २०७०), 'बहारसंग' (आधुनिकगीत, २०७२) ल्याइएका छन् । यसै गरी गीतसङ्ग्रहतर्फ 'सहिदलाई सलाम' (गीतसंग्रह, २०६७), र 'मन र माटो' (गीतसंग्रह, २०७३) प्रकाशित छन् ।

मैले करिव २०३० सालतिर सरमग सिक्दै सङ्गीत क्षेत्रमा प्रवेश गर्दा एउटा गीत कथेँछु । त्यसबेला यो क्षेत्र मलाई जति रोमाञ्चक लाग्दथ्यो । आज अतीत फर्किहेर्दा सोचेजस्तो त पाइन तर यो क्षेत्रलाई भुल्न पनि सकिन । हुन त यो क्षेत्रमा मेरो ठूलो लक्ष्य वा आकांक्षा केही पनि थिएन । त्यसबेला एकदिन म पनि रेडियोमा गीत गाउँछु भन्नेसम्म रहर जागेको थियो । त्यो धोको मैले पूरा गरें । अलि पछि पलाएको चाहना थियो केही गीत लेख्ने त्यो पनि पूरा गरें ।

ताप्लेजुङ जस्तो दुर्गम जिल्लाबाट त्यसबेला काठमाडौं पढ्न जानु चानचुने कुरो थिएन । धेरै बाधा व्यवधान नाघेर घरपरिवारको ठूलो सपनाको भारी बोकेर चिकित्साशास्त्र जस्तो कठिन विषय अध्ययन गर्न २०३४ सालमा म काठमाडौं गएको थिएँ । गीतसङ्गीतमा लाग्ने समय मसित थिएन । तापनि, मनमा सल्केको सांगीतिक तलतल मेटाउन बेलाबेला रेडियो नेपालको प्राङ्गण टेकेँ । २०३६ सालतिर रेडियो नेपालद्वारा आयोजित आधुनिक गीत प्रतियोगितामा भाग लिएँ । प्रतियोगितामा आफ्नो शब्द रचनालाई प्रेम भट्टचनको सङ्गीतमा गीत गाएँ ।

त्यसबेला लोकगीत प्रतियोगितामा साथी पारसमणि बराल र गणेश आचार्यलाई मैले आफ्नो सङ्कलनको 'हिमालैमा' भन्ने बोलको गीत गाउन दिएँ । पछि पारसमणिलाई मेरो सङ्कलनको अर्को लोकगीत 'फर्केर आऊ' बोलको गीत गाउन दिएँ । उनको स्वरमा उक्त लोकगीत रेडियो नेपालमा रेकर्ड भयो । लोकगीत रेडियोमा निकै बज्यो । आधुनिक गीततर्फ मैले त्यसबेला सि. के.

रसाइलीको सङ्गीतमा 'आज मलाई मेरो आँगन सिङ्गो एउटा संसार भो' बोलको गीत रेडियो नेपालमा रेकर्ड गरें । उक्त गीत रेडियोको ईन्द्रेनी कार्यक्रममा बजेको सुनें । केही समयपछि म प्रमाणपत्र तहको पढाइ सकेर आफ्नै जिल्ला ताप्लेजुङमा जागिर खान गएँ । त्यसपछि मैले रेडियो नेपालमा गीत रेकर्ड गर्ने अवसर पाइन ।

रेडियोमा आधुनिक गीत आफूले थप रेकर्ड गराउन नसके पनि मेरो रचना 'विवशताले बाँधिएको मान्छेको जीवन' बोलको गीतलाई सूर्य थुलुङले रेडियो नेपालमा रेकर्ड गरिदिए । म पहाडमा रहँदा बेलाबखत उक्त गीत रेडियोमा बज्दा रमाइलो लाग्दथ्यो । रेडियो नेपालमा गीत बज्न थालेको करिव एकदुई सालपछि त्यो गीतको एउटा अन्तरालाई परिवर्तन गरेर २०३८ सालमा पुनः रेकर्ड गरियो । पंचायतकालमा गीतमा सेन्सरसीप हुने गर्दथ्यो सायद सोही कारणले गर्दा 'तिम्रो एक नजरले मनमा अनेक लहर उठ्छ' भन्ने अन्तरा परिवर्तन गर्नुपर्ने अवस्था आयो । अन्तरा परिवर्तन गरी रेकर्ड गरेपछि उक्त गीत पनि रेडियोमा निकै बज्यो ।

कालान्तरमा ती पुराना गीत रेडियो नेपालमा बज्न छाडे । स्टुडियोमा बुझ्दा गीत भेटिएन हरायो भन्ने जानकारी पाएँ । सायद टेप बिग्रियो वा बिगारियो होला । क्यासेट संरक्षित रुपमा राख्न नसकिएकामा दुःख लाग्यो । गीत भुल्न सकिन ती गीत सम्झना आइरहे । हुन त ती दुईचार पुराना गीत पुनः गाएर मात्र एल्बम निकाल्न सम्भव थिएन । तापनि आफ्ना गीति रचना रेडियो नेपालबाट हराएकामा म चिन्तित भएँ ।

जीवनको आधा शताब्दी उमेर काटेपछि त्यसले थप पोल्न थाल्यो । सांगीतिक धरातलमा एकपल्ट पुनः उभिएर वर्तमानको आकासमा नयाँ सम्भावना खोजी गरें । मेरो पहिलो कवितासंग्रह 'जीवन मेरो शब्दकोशमा' २०६३ सालमा प्रकाशित भएको थियो । त्यसमा मेरा केही पुराना गीत संग्रहित थिए । तिनै सिर्जना बोकेर मैले सङ्गीतकारको खोजी गरें । एकदिन युवा सङ्गीतकार साजन राईसंग भेट भयो । उनले मेरा केही पुराना गीतरचनालाई सङ्गीत भरेर सुनाए । उनको सङ्गीत सिर्जना मलाई मन पर्‍यो । त्यसपछि उनीसंग मिलेर देशभक्ति गीतहरू समेत तयार गर्‍यौं । यही क्रममा 'नेपाली नेपाली हामी नेपाली' बोलको गीत निकै चर्चित भयो ।

एल्बम निकाल्न सजिलो थिएन । मैले पुराना मित्र शक्ति बल्लभलाई सम्झें । उनले थप केही देशभक्ति गीत सङ्गीतबद्ध गरिदिए । त्यसबेला चलेका गायकको स्वरमा गीत रेकर्ड गरियो । साजन राईले गाएको देशभक्ति गीत 'नेपाली नेपाली' सहित दश गीतहरूको पहिलो एल्बम् 'देशको माया' निकालें ।

विराटनगरको साहित्यिक माहोलमा म भिज्दै गएँ । साहित्यिक कार्यक्रमहरूमा बेलाबखत गजलवाचन सुन्दथें । साहित्यिक बजारमा वाह वाह आउने वा ताली खाने गजलको वोलवाला थियो । मलाई भने प्रेमील भावका गेयगजल कोर्न मन लाग्यो । नेपाली सङ्गीत क्षेत्रमा गजल लेखेर साहित्य र सङ्गीत दुवैको सेवा गर्ने रहर थियो । यही लुकेको रहर पुरा गर्ने अठोट गरें । यो कार्यमा

मलाई सङ्गीतकार शक्ति बल्लभले साथ दिए । उनको सहकार्यमा मैले नौं वटा गजल सङ्गीतबद्ध गरियो । गायक गायिका अन्जु पन्त, नरेन्द्र प्यासी, जगदिश समाल, शिशिर योगी, सुमित खड्का, स्वरुपराज आचार्य, माण्डवी त्रिपाठी, सुरेश मानन्धर, भीम चापागाईका आवाजमा गजलहरू स्वरवद्ध गराएँ । उक्त सङ्ग्रहलाई मैले 'लुकेको रहर' शिर्षक दिएँ र गजल एल्बम बजारमा निकालें ।

जनस्वास्थ्य क्षेत्र मेरो कर्मभूमि हो । यस क्षेत्रमा मैले देखेका युवा र किशोरकिशोरीको स्वास्थ्य समस्या, मानसिक स्वास्थ्यलाई सम्बोधन गर्न सन्देशमूलक गीत लेखें । किशोरकिशोरी तथा युवालाई दुर्व्यसनबाट बचाउन मैले एउटा सन्देशमूलक गीत र सङ्गीत सहित तयार गरें । मेरो यही गीत तथा सङ्गीतलाई विराटनगरका कलाकार सुरज श्रेष्ठले सङ्गीत संयोजन गरिदिए । विराटनगरस्थित एक स्टुडियोमा गीत रेकर्ड भयो । सुमित खड्काले उक्त गीतमा मीठो स्वर दिए । साथै, मैले अघि रेडियोमा बज्ने सूर्य थुलुङको स्वरको 'विवशताले बाँधिएको' बोलको सेन्सर भएको पुरानो गीत थुलुङबाट प्राप्त गरें । त्यो गीतसमेत राखेर मैले तेस्रो एल्बम 'अमूल्य जीवन' बजारमा ल्याएँ ।

मेरो शब्द रचना, साजन राईको सङ्गीत तथा साजन राई, नितु गोस्वामी, सरिता राईको स्वर रहेको 'नेपाली नेपाली हामी नेपाली' बोलको गीतले बजारमा निकै तरङ्ग ल्याउँदै थियो । यही लहरलाई समातेर अघि बढ्ने क्रम चल्यो । अर्का प्रतिभाशाली राष्ट्रिय गीतका चर्चित गायक सुमित खड्कासित मेरो भेट भयो । उनले पनि मलाई देशभक्ति एल्बम् निकाल्न प्रेरित गरे । देशमा जातीय राज्यको मागले देश विखण्डन उन्मुख थियो । यही परिप्रेक्षमा 'हामी पहिले नेपाली' बोलको गीत तथा यसै लहरका गीतहरू लेखें । सङ्गीतकार शक्ति बल्लभले गीतहरूमा सङ्गीत भरिदिएका छन् । सुमित खड्काको एकल स्वरमा गीतले मूर्तरुप पायो । यसरी मैले चौथो एल्बम 'हामी पहिले नेपाली' बजारमा ल्याएँ ।

मेरो लोकगीतप्रतिको माया छँदै थियो । मैले सङ्कलन गरेका केही गीत रेडियो नेपालमा निकै बजे । त्यसले पनि मलाई लोकगीतप्रति जिम्मेवारीबोध गरायो । गीत त्यसै हराउँदा ती गीतले मलाई बेलाबेला घच्घच्याउँथे । रेडियोमा रेकर्ड भएका लोकगीत तथा प्रतियोगितामा गाइएका लोकगीत अब लोप भए । तिनलाई पुनःरेकर्ड गरी पुनःर्जीवित गर्ने चुनौति थियो । त्यसैले लामो प्रतीक्षा गरेर मैले ती सबै रचनालाई पुनः रेकर्ड गरें । बाल्यकालमा किरात लिम्बू संस्कृतिमा हुर्कदा सुनेका सांगीतिक लयलाई सम्झिएँ । त्यसैलाई आधार बनाएर केही लोकगीत सिर्जना गरें । यसरी लोकलयमा आधारित गीतहरूको एल्बम् 'हिमालैमा हिउँ' तयार भयो । जुन मेरो पाँचौ एल्बम् बन्यो ।

अझै पनि मेरा पुराना केही सिर्जनालाई मर्न नदिने कार्य बाँकी थिए । म तिनलाई पूरा गर्नेतर्फ लागें । मेरो जीवनको पहिलो गीत रचना 'ए बहार' बोलको गीत रेकर्ड गराएँ । एकदिन रेडियो नेपालमा सुरुमा सेन्सर भएको शब्दलाई पुनःर्जीवित गर्दै 'बिवशताले बाँधिएको मान्छेको जीवन' बोलको गीत सूर्य थुलुङकै

स्वरमा पुनः रेकर्ड गराएँ । आफूले रेडियो नेपालको आधुनिक गीत प्रतियोगितामा गाएको गीत 'गुलाफको थूँगाभित्र' बोलको गीत पनि आफ्नै स्वरमा रेकर्ड गरें । महाराजगञ्ज क्याम्पसमा मेरा विद्यार्थी कालका एक सङ्गीतिक सहयात्री प्रेम भट्टचनको सङ्गीतलाई पनि मर्न दिइन । उनले मलाई छाडेको साङगीतिक नासोलाई मैले आफ्नै स्वरमा गीत रेकर्ड गरें । अघि महाराजगञ्ज क्याम्पस पढ्दाका अर्का एक पुराना मित्र एन्ड्रयू सिथलिङसित पछि भेट भयो । उनले मेरो एउटा गीतमा सङ्गीत भरिदिए । उनको मीठो सङ्गीतमा मेरो शब्द रचना 'गमलाको छातीभरी' बोलको गीत म आफैले गाएँ । यसरी मैले मेरो छैटौं एल्बम् 'बहारसंग' साङ्गीतिक बजारमा लोकार्पित गरें ।

आरम्भिक सांगीतिक प्रयासका अधूरा पाइला मेटिनबाट जोगाउन मलाई झण्डै तीनचार दशक लाग्यो । अब म आफ्नो रहरको बोझबाट मुक्त भएँ । यद्यपि, मनमा एउटा कुरा भने खड्किरहेको छ । वि.स. २०३६ सालतिर सिके रसाइलीको सङ्गीतमा रेडियो नेपालमा रेकर्ड भएको 'आज मलाई मेरो आँगन' बोलको गीत रेडियो नेपालमा हरायो ।

जेहोस्, एल्बम् निकाल्दा मैले सहकार्य गरेका सबै कलाकार साथीहरू सबैलाई म पुनः धन्यवादज्ञापन गर्दछु ।

# २४ महामारीमा देखिएका सामाजिक व्यवहार

सन् २०२०–२२ मा कोरोना कोभिड– १९ को महामारीमा मानव समुदायमा नौलो ब्यवहार देखियो । यस अवधिमा विश्वमा प्रलय, भावना र मानवता शब्दहरू एकाएक ब्युँतिएर समानार्थी बने । त्यसबेला कोरोना कोविड–१९ भाइरसले मानव जातिको परीक्षा लियो । जुनबेला मानिसभित्रका जिजीबिषा यत्रतत्र छट्पटाएका थिए । मान्छेभित्रका नकारात्मक ब्यवहार बढी र सकारात्मक भावना कम मात्रामा प्रकट भएको पाइयो ।

महामारीमा रोगबाट भन्दा पनि मानिसका अनौंठा व्यवहारले हैरान बनायो । यस्ता विषम् परिरिस्थतिमा  कालो बादलमा चाँदिको घेराझैं केही उदाहरणीय मानवीय व्यवहार देखिए । सर्वत्र स्वार्थीमन छट्पटाएका बेलामा यदाकदा विवेकशील हात देखिए । कतिपय मान्छेभित्र रहेको सुसुप्त मानवीय भावना प्रकट भए जसबाट धेरै मानिसले जीवन पाए । स्वास्थ्यकर्मी, सुरक्षाकर्मी, स्वयमसेवकका उदाहरणीय व्यहारले महामारीमा धेरै मानिसको ज्यान जोगियो ।

कोरोना महामारीको बेलामा घरबाहिरको अवस्था निस्किनसक्नु छ। यद्यपि, सामाजिक सञ्जाल, टेलिभिजन, रेडियोले विश्वलाई जोडिदिएको छ । विश्व नै सिङ्गो विद्युतीय समाज बनेको छ । महामारीमा ईटालीमा घटेको एउटा घटना टेलिभिजनमा देख्दा हामी नेपालीलाई त्यसबेला छिमेकमै परेजस्तो दुःख महसूस भयो । एक दाजुले आफ्नी बहिनी कोरोना संक्रमित हुँदा विरामीलाई अस्पतालमा उपचार गराउन पाएनन् । बहिनीको मृत्युपछि उचित दाहसंस्कार पनि उनले गर्न सकेनन् । न त विरामी पर्दा वा दाहसंस्कारमा उनले छिमेकी, आफन्त कसैको सहयोग पाएनन् । उनले क्यामेरामा आलाप विलाप गरेको देख्दा विश्वको मन हल्लियो । बहिनीको लासछेउ उभिएका दाजुको अनुहार देख्दा त्यहाँ छरछिमेक र सरकारको व्यवहारप्रति संसारमा असन्तोष, आक्रोश र ब्यङ्ग्य देखिन्थ्यो । मृतक बहिनीको शव देखाउँदै रुँदै सामाजिक सञ्जालमा भाइरल उनको अभिव्यक्तिले दर्शकको मन विचलित तुल्यायो । सञ्चारमा देखिएको यस्तो अनौठो व्यवहार र दृश्यले संसारलाई झक्झकाइदियो ।

नेपालमा पनि सोही प्रकृतिको घटना दोहोरियो । केही दिन अघि काठमाडौँमा आफ्ना मृत पतिको शव कसैले छुन नमानेपछि किँकर्तव्यविमूढ बनेकी एक

शोकसन्तप्त असहाय महिलाको तस्वीर हामीले सामाजिक सञ्जालमा देख्यौं । नेपालमा घटेको उक्त दृश्य देखेर नेपाली दर्शक, पाठकको मन नराम्ररी कुढियो । राजधानीमा महामारी संकटमा सहयोगी साथ र हात कतै देखिएनन् । मानवताशुन्य भएको अवस्था छ । मान्छेप्रतिको सद्भाव कतै देखिदैन । मान्छे सडकमा औषधीको खोजीमा प्रहरीको लठ्ठी छल्दै लुकिछिपी हिड्छन् । लकडाउनको उराठलाग्दो दृश्यबारे कोर्न मलाई गाह्रो भइरहेको छ ।

मान्छेको आधार सञ्चार माध्यम बनेको छ । तर, सञ्चारमाध्यम स्वयम् पनि रोगग्रस्त बनिसकेको छ । यो कोरोना कोभिड–१९ विश्वव्यापी महामारीबारे सञ्चार माध्यममा विभिन्न अनर्गल हल्ला चलेका छन् । कहिले भ्याक्सिन बन्ला र महामारीबाट छुटकारा पाइएला भनेर मानिस समाचार सुन्न आतुर छन् । सबैतिरबाट छिटो भ्याक्सिन बनोस् भन्ने माग भइरहेको बेला कोही मानिस कोरोना भ्याक्सिनबारे नकारात्मक सन्देश फैलाइरहेका छन् । उनीहरूले भ्याक्सिन निर्माता कम्पनीले आफ्नो व्यापार चलाउनलाई यो रोग फैलाएको हो भन्ने अनर्गल अफवाह फैलाउन समेत भ्याए ।

महामारीमा शक्तिशाली देशहरू आरोप प्रत्यारोपमा ओर्लिए । अमेरिकाले महामारीको दोष चीनलाई दियो भने चीनले त्यसको दोष उल्टै अमेरिकामाथि थोपऱ्यो । महामारीको त्राशदीमा नश्लीय भेदभावले थप नराम्रो रूप लियो । अमेरिका, बेलायत तथा पश्चिमेली मुलुकमा एशियाली र निग्रोवटु नश्लमाथि भेदभाव र हिँसा भए । ती देशहरूमा महामारीका बेला काला जाति तथा एशियालीमाथि उपचारमा समेत भेदभाव भयो भन्ने प्रतिवेदन बाहिर आए । यसले गोरा नश्लको अनुहारमा नमेटिने धब्बा लगाइदियो ।

सामाजिक सञ्जालमा आएका हल्लाको कुरा गरिसाध्य छैन । संसारका कतिपय राष्ट्रका सरकारले यस्ता बेलामा पर्याप्त संवेदनशीलता देखाएनन् । राजनीतिक नेता, धार्मिक नेता कोरोनाविरुद्ध अर्ति उपदेश, आदेश दिन अघि सरेका थिए । मास्क लगाएका नेताहरूको चुरीफुरी टेलिभिजनमा यदाकदा देखिन्थ्यो । नेपाल सरकारले औषधी, भ्याक्सिन तथा स्वास्थ्य सामग्री व्यवस्था गर्न समयमा सकेन । सरकारको व्यवस्थापकीय क्षमता जनतामाझ उदाङ्गियो ।

आज जनता नितान्त एक्लो र असहाय बन्न पुगेका छन् । महामारी फैलिएका कुनै कुनै वस्ती समेत बहिस्करणमा परेका अचम्मलाग्दा समाचार आएका छन् । त्यहाँका मानिसले त्यसबेला अत्यावश्यक चामल समेत किनमेल गरेर खान पाएनन् । यस्तो कठीन समयमा स्थानीय प्रशासनले पीडित जनतालाई आवश्यक सहयोग र राहत दिन सकेन ।

यद्यपि मानिस भित्रभित्रै महामारीविरुद्ध एकजूट भए । अब मान्छेले मानिस र नेता चिन्ने बेला आएको बुझे । आफ्नो देशमा सरकार भएको नभएको महसुस गर्ने बेला भएको थाहा पाए । साथै, मानव जातिको मानवीय भावना र मनोविज्ञानको परीक्षा आएको मानिसले चाल पाए ।

कोरोना महामारीमा नेपाल र छिमेकी मुलुक भारत समान रुपमा ग्रस्त भएका छन् । दुवै देशमा घट्ने सामाजिक घटना रुपमा फरक भए पनि सारमा समान प्रकृतिका छन् । एकदिन समाचार माध्यमको वेभसाइट नियाल्दै जाँदा एनडिटिभीको अप्रैल ८, २०२१ मा प्रकाशित एउटा समाचारमा नजर पुग्यो । समाचार घटनाक्रम पढेपछि मभित्रको मानवीय संवेदना चल्मलायो । समाचारअनुसार, मध्यप्रदेश ईन्दोरको तोडाजूना गणेश मन्दिर नजिकै एक असहाय बृद्ध महिला बस्दथिन् । उनलाई दुर्गा माँ नामले चिनिन्थ्यो । कोरोना महामारीकै दौरान उनको सोही मन्दिर परिशरमा देहान्त भयो । कोरोनाको कहर छ, फलस्वरुप देशभर हप्तौं लागेको लकडाउनले गर्दा स्थिति भयावह छ । मानिस खाना खान नपाएर, औषधोपचार नपाएर मरिरहेका छन् । यी दुवै कारणले दुर्गा माँको मृत्यु भएको अनुमान गर्न सहज छ ।

अहिले उनको मृत्युको कारण खोज्नु भन्दा पनि उनको शवलाई उचित तवरले तह लगाउने समस्या परेको छ । उनको शवलाई व्यवस्था गरिदिने त्यहाँ उनका आफन्त कोही थिएनन् । कुनै उपायले टाढा रहेका उनका दुई छोरालाई बोलाइयो । दुर्भाग्य, बुढी आमालाई ज्यूँदो हुँदा स्याहार गर्न नसक्ने ती छोराहरूसित आमाको अन्तिम संस्कार गर्न समेत आर्थिक क्षमता थिएन । एक्ली असहाय आमाकी सन्तान पनि उस्तै दरिद्र रहेछन् । त्यो विषम स्थितिमा एक वेवारिसे हिन्दू नारीलाई तह लाउन धर्मको पर्खाल नाघेर मुसलमान अघि सरे । नाजुक घडीमा त्यसै टोलका अकील भाइ, असलम भाइ, मुदस्सर भाइ, सशिद इब्राहिम, इमरान सिराज नामका मुसलमान दाजुभाइले उक्त दुःखमा साथ र हात दिए । उनीहरूले दुर्गा माँको अन्त्येष्ठी गरिदिए । त्यसरी एक हिन्दू आमाको मृत्यु कर्म सम्पन्न गर्न उनका छोराहरूलाई मुसलमान भाइहरूले मानवीय साथ दिए ।

समाचार पढ्दा एक हिन्दुलाई मुसलमानले सहयोग गरेको देखिन्छ तर यो कृया धर्मभन्दा माथि उठेको घटना हो । धर्मको आधारमा भन्दा पनि मानवताको नाता बलियो रहेछ भन्ने पाठ प्रस्तुत घटनाले देखाएको छ । मानवता कुनै वर्ग, जाति, धर्म, विचार भन्दा कति महान् हुँदो रहेछ, समाचारले सन्देश संसारभर फैलिएको छ । मानवीय सेवा राजनीतिभन्दा धेरै अग्लो रहेछ भन्ने देखाएको छ ।

समाजसेवा कुनै अमूक धर्मिक संस्कारभन्दा सत्य र सुन्दर हुँदो रहेछ । यस्ता आपद विपद्मा राजनीतिक विचार, धर्म, वर्ग भन्दा माथि उठेर हामी पहिले मानिस हामी सबै एक हौं भन्ने स्वस्फूर्त भावना प्रकट भएका छन् । यसको श्रेय कुनै वर्ग, जाति, धर्म वा राजनीति विशेषलाई दिनुभन्दा पनि मानवजातीको श्रेष्ठतम् भावनालाई भित्री आँखाले चिन्नुपर्दछ । यस्ता दृष्टान्त हामी संसारको जुनसुकै कुनामा फाट्टफुट्ट देख्न, सुन्न पाउँछौं । त्यस्ता मानवप्रेमी भावनालाई देख्नु पर्दछ, त्यस्ता घटनाका सुपात्रलाई पुरस्कृत गरेर मानवताको प्रबर्धन गर्नुपर्दछ । कुनै वाद, धर्म, वर्ग, जातिको घेराबाहिर निस्केर मानवतालाई हुर्काउनु पर्दछ । सबै खाले समाजमा यस्ता महान दृष्टिकोणको प्रबर्धन गर्नुपर्दछ ।

अर्को एक दुःखद समाचार भारतको पञ्जावबाट आयो । एक ६९ वर्षिय एक सेवानिवृत्त इञ्जिनियरको कोरोनाबाट मृत्यु एक अस्पतालमा भयो । मृतकको भाइरस आफूलाई सर्ने भयले उनको शव लिन आफ्नै परिवारजनले अस्वीकार गरे । जीवनभर कर्मशील इन्जिनियरको मृत्युपछि शवलाई सरकारले नै अन्त्येष्ठी गरिदियो । सरकारले शवलाई एक मुष्ठ भेला पारेर सामुहिक दाहसंस्कार गरिदियो । सामुहिक अन्त्येष्ठीको नयाँ शैली टेलिभिजनमा देखियो । शायद त्यही सामुहिक अन्त्येष्टिको उराठलाग्दो दृश्यभित्र उनको पनि शव थियो । हामी केवल अनुमान गर्न सक्दछौं ।

उनको मृत्युसंस्कारमा कुनै परिवारजनको उपस्थितिसम्म भएन भन्ने सुन्दा पहिले मलाई अचम्म लाग्यो । बिडम्बना भनौं ती अभागी बाबुका भाग्यमानी छोरी जो एम.बी.बी.एस. पढ्दै थिइन, उनी समेत बाबुको मुख हेर्न आइनन् । एक मेडिकल विद्यार्थीले त्यसबेला स्वास्थ्य सुरक्षाका मापदण्डसहित पिताको मुख हेर्न सक्थिन् । तर, उनी समेत पछि हटिन् र आफूलाई जन्माउने, हुर्काउने र पढाउने उनै बुबालाई अन्तिम विदाइसम्म गर्ने हिम्मत उनले गरिनन् । यसबाट थाहा हुन्छ, त्यसबेला वातावरण कत्ति त्रासदीपूर्ण थियो । सुरक्षाकर्मी अस्पतालमा लासका चाङ उठाएर ट्रकमा हाल्दथे र कुनै अनकण्टार स्थलमा शवको सामुहिक दाहसंस्कार गरिन्थ्यो । हामी यस्ता दृश्य दिनहुँ टेलिभिजनको पर्दामा हेर्न विवश थियौँ ।

यता नेपाल सरकारले आरम्भमा कोरोना भए नभएको थाहा पाउन विभिन्न शहरमा पिसिआर परीक्षण गर्‍यो । पोजिटिभ देखिएमा सद्धे मानिसलाई प्रहरीसहितको टोलीले एम्बुलेन्समा जबर्जस्ती हालेर क्वारेन्टाइनमा पुर्‍यायो । मानिसलाई घरबाट निकाल्दा कुनै आतङ्ककारी पक्रिएको शैलीको व्यवहार गरियो । अग्रपङ्तीका कार्यकर्ताको त्यो अमानवीय व्यवहार अस्वभाविक थियो । सेता पहिरन लगाएका सुरक्षाकर्मीले मान्छेलाई ल्याब परीक्षण पोजिटिव भएको आधारमा घरबाट लछारपछार पार्दै क्वारेन्टाइनमा पुर्‍याए ।

क्वारेन्टाइनको हालत नाजुक छ । एउटा क्वारेन्टाइनमा स्वास्थ्यकर्मीबाटै महिला संक्रमित यौन दुर्व्यवहारमा परेको समाचार बाहिर आयो । त्यस्ता समाचारले समुदायमा थप त्रासदी फैलियो । कोरोनाका लक्षण नदेखिएका सामान्य मानिस पनि सरकारको रवैयाले भयभीत भए । त्यसबेला कोरोना कोभिड रोगले भन्दा पनि पिसिआर रिपोर्ट पोजिटिभ आएमा टोल छिमेकमा बेइजती गर्ने खालको सरकारको व्यवहारले मान्छेलाई बढी तनाव दियो । धेरैले क्वारेन्टाइनमा स्वास्थ्यकर्मी तथा सुरक्षाकर्मीका अमैत्रीपूर्ण व्यवहारबाट सास्ती पाए । क्वारेन्टाइनमा भए गरिएका दुर्व्यवहारबाट कतिपयको अकालमा मृत्यु भयो । यस्ता जनगुनासाले सञ्चार जगत भरियो ।

जनस्तरमा नेपालमा सरकारले सामान्य मानिसलाई गर्ने व्यवहार र शैलीको तीव्र विरोध भयो । पोजिटिभ देखिएमा भोग्नुपर्ने सास्ती देखेर मासिनले स्वेच्छाले पिसिआर परीक्षण गर्न छाडे । उदयपुरमा एउटा टोलमा कोरोना कोभिड–१९

भाइरस देखिएपछि त्यो टोललाई छिमेकी समुदायले बहिस्कार गरिदियो । उनीहरूलाई आवश्यक पर्ने दाल चामल किन्न, घरबाहिर निस्कन आफ्नै छिमेकले बन्देज गरेको समाचारले अचम्मित तुल्यायो । त्यसरी धेरै मानिस रोगभन्दा पनि भोकले छट्पटाए ।

त्यसबेला स्वास्थ्यकर्मी समेत दुर्व्यवहारमा परे । नेपालमा विभिन्न अस्पतालका चिकित्सक, नर्स तथा स्वास्थ्यकर्मीलाई टोल छिमेकमा आउन जान प्रतिवन्ध लगाइयो । काठमाडौंमा एक टोलवासीले एकजना चिकित्सकको घरको ढोकामा कोरोना कोभिड भाइरस भएको खतराबोधक ब्यानर टाँगिदिए । चिकित्सकलाई बाहिर निस्कन टोलवासीले प्रतिबन्ध लगाए । स्वास्थ्यकर्मीका घरको ढोकामा विरोध र सतर्कता जनाउन कालो ब्यानरले सङ्केत दिने नौलो चलन त्यहाँ देखियो । कतिपय नर्सहरूलाई डेराबाट घरधनीले निकालिदिए । त्यसरी नेपालमा अनौंठो नकारात्मक सामाजिक व्यवहार महामारीमा प्रकट भए ।

यता मेरै छिमेकमा पनि केही मानिसको कोरोना कोभिड–१९ का कारण ज्यान गयो । त्यसबेला उनीहरूको मृत्युसंस्कार परिवारजनले गर्न पाएनन् । अस्पतालमा मृतकका लासलाई नेपाली सेना र नगरपालिकाले अन्तिम संस्कार गरिदिने व्यवस्था मिलाइएको थियो । त्यस्तो बेलामा परिवारजनले धार्मिक विधिले शोक मान्ने, कृयापुत्री बस्ने जस्ता परम्परागत संस्कार गर्न सकेनन् ।

एक दिन भारतीय च्यानलले शवका बोरालाई बाहनबाट निकालेर सिधै गङ्गानदीमा बगाइदिएको दृश्य देखायो । महामारीमा मरेका मान्छेका छरपस्ट लासले गङ्गा नदीको बगर भरिएर दुर्गन्ध फैलिएको भयानक दृश्य टेलिभिजनमा देख्दा मन खिन्न भयो । मानिस कति त्राशदीपूर्ण अवस्वामा बाँच्न विवश थिए यही दृश्यले बताउँछ ।

यसरी, महामारीमा मान्छे घर मित्रिभत्रै निस्सासिएका छन् । अब आफूलाई के हुने हो भनेर मानिस घरभित्र दिनरात तनावमा बसेका छन् । म पनि तिनैमध्ये एक थिएँ । राती एक तमासले बज्ने एम्बुलेन्सको साइरनले मलाई राती सुत्न दिइराखेको छैन । लकडाउनमा कडाइ भएको सङ्केत घरिघरि बज्ने पुलिसको साइरनबाट थाहा हुन्थ्यो ।

यो कलम कोरोना कोभिड–१९ महामारीमा विराटनगरको एक चौकमा रहेको घरभित्र एम्बुलेन्स र पुलिसको साइरनको आवाजबीच टोलाइरहेको छ । सन्चारमा जेलिएर पनि बेलाबेला घोत्लिन्छ र कागजमा केही कोरिरहेछ । त्यही विष्मययुक्त स्वादले लत्पतिएका केही पाना पाठकलाई मैले साझा गरें ।

# २५ आत्मघाती गाँजा खेती

हाल देशमा एक स्वार्थसमूह प्रतिबन्धित नशालु पदार्थ गाँजाको खेती आरम्भ गरेर देश समृद्ध बढाउने ताकमा छ । तिनीहरूको आवाज सञ्चारदेखि संसदसम्म सुनिन्छ । उनीहरूको तर्क छ, गाँजासेवन महादेवका पालादेखि चलिआएकाले रोक्नु हुँदैन । यसको खेतीले समृद्धि ल्याउने आकर्षण देखाइएको छ । स्वार्थसमूहभित्र गैरसरकारी संस्था र बहुराष्ट्रिय कम्पनीहरू छन् । यो उनीहरूद्वारा प्रायोजित अभियान हो । यसमा विदेशी दातृनिकासंग आबद्ध व्यक्ति, सामाजिक अभियन्ता र दलका नेता परिचालित छन् ।

धार्मिक क्षेत्रमा भएको यसको प्रयोगले समाजमा कस्तो प्रभाव पारेको छ? यसले समाजमा के कस्तो कुप्रभाव पारेको छ भनेर चर्को बहस भैसकेको र भइरहेको छ । धार्मिक आडमा गाँजालाई पवित्र उपहार मानेर सेवन गर्ने व्यक्ति र समुदायले परिवार, समाजिक सुरक्षा र मानसिक स्वास्थ्यमा प्रभाव पारेको तथ्य जगजाहेर छ । समय समयमा प्रकाशित प्रहरी रिपोर्टअनुसार नशालु पदार्थको सेवनपछि हुनेगरेका अपराधलाई कम गर्न गाँजा, मादक पदार्थ, लागुपदार्थ कानुनी रुपमा बन्देज गरेर मात्र हुँदैन यसको कुप्रभावबारे जनचेतनाअभिवृद्धि गर्नुपर्दछ ।

गाँजा नशालु एवम् दुर्व्यशनकारक वस्तु हो । यद्यपि, शिवरात्रीमा यसको प्रयोग हुन्छ, यसको औषधीय गुण आयुर्वेदमा उल्लेख छ । गाँजा खेती गरेर, आफू नखाइ अरुलाई बेचेर देशलाई समृद्ध बनाउँछु भन्नु दिवास्वप्न मात्र हो । एकदुई दशक अघि यही देशका अर्थमन्त्री यही शैलीमा देशका युवा जनशक्ति विदेशमा पठाएर रेमिटेन्सले देश धनि बनाउँछु भन्ने गर्दथे । यथार्थमा रेमिटेन्सले सोचेजस्तो देश विकास भएन । खेतबारी बाँझै पारेर ल्याएको पैसाले दिगो विकासभन्दा बढी परनिर्भरता र विकृति ल्याएको छ । अहिले देशमा युवा रित्तिएका छन् । अब बचेखुचेका मानिसले गाँजा खेती गर म किनिदिन्छु भनेर उराल्नु विदेशी बहुराष्ट्रिय कम्पनीको गोटि बनेर देश बर्बाद पार्नु हो ।

आज धनि देशले गरिव देशका साधनस्रोतलाई युद्ध नगरिकनै हात पार्ने गर्दछन् । विदेशी स्वार्थले कुनै देशको सरकारी संयन्त्रलाई अनुदान, सहयोग, गैरसरकारी संस्थाद्वारा प्रभावित पार्दछ । त्यहाँकै नेता, अभियन्तालाई हात लिएर कुनै विवादास्पद कुरा उछाल्दछ । यसले समाजमा एक किसिमको तरङ्ग ल्याउँछ । समाज पक्ष र विपक्षमा अभिन्छ र तनाव सिर्जना गरिन्छ । प्रजातान्त्रिक विधिको

नाममा देश र समाजको दीर्घकालीन हितलाई भन्दा पनि कुनै स्वार्थसमूहको पक्षमा तत्काल तनावलाई मत्थर पारिन्छ । नेपालको संसदले विदेशीको इसारामा काम गर्दछ भन्ने कुरा २०७९ सालमा पारित गरेको विवादास्पद नागरिकतासम्बन्धी कानुनबाट छर्लङ्ग भयो ।  प्रधान न्यायधीस चोलेन्द्र समशेरको महाभियोगका बेलामा ब्यक्त स्पष्टिकरणबाट पनि त्यो पुष्टि भयो । यसरी विभिन्न हत्कण्डा अपनाएर विदेशीले हामीबाटै उनीहरूको स्वार्थ पूरा गर्ने गर्दछन् । आज उठेको गाँजा खेतीको सवाल पनि त्यसकै एक रुप हो ।

हालै भारतीय फिल्मी नायक सुशान्त सिंह राजपुतको आत्महत्या घटना सञ्चारमा छायो । यो घटनामा उनकी प्रेमिका लागुपदार्थ दुर्व्यसनसित गाँसिएकी थिइन् । घटनालाई त्यहाँको आधिकारिक संस्था सिबिआईले अनुसन्धान गऱ्यो । अर्का फिल्मी नायक शाहरूख खानका छोरा पनि लागुपदार्थ दुर्व्यसन काण्डमा पक्राउ परे । उनी पनि अदालती कारवाहीमा परे । यसरी आज भारतीय चलचित्र जगत लागुपदार्थका कारण बदनाम भएको छ । विभिन्न घटनालाई अनुसन्धान गर्दा लागुपदार्थ, नशालुपदार्थ, मादकपदार्थ, सुर्तिजन्य पदार्थ सेवन र त्यहाँ घटित विभिन्न अपराध घटना गाँसिएका थिए । समय समयमा घटित सडक दुर्घटना, हत्या अपराध, घरेलु हिंसा र आत्महत्यासित लागुपदार्थ तथा मादकपदार्थ जोडिएर आउँने गर्दछन् । अतः लागुपदार्थ, सूर्तिजन्य पदार्थ, नशालु पदार्थले मानिसको अमूल्य जीवनलाई जोखिमपूर्ण स्थितिमा धकेल्छ भन्ने कुरा घामझैं छर्लङ्ग छ ।

अन्तराष्ट्रिय गिरोहद्वारा नियन्त्रित बजार आफूलाई आवश्यक पर्ने लागुपदार्थको खेती गराउन विकासशील मुलुकभित्र प्रवेश गर्दछन् । यसको खेतीले समृद्धि ल्याउँछ भनेर स्यालको हुइँया चलाउँछन् । अफगानिस्तानको वर्तमान आर्थिक जर्जरताको प्रमुख कारण लागुपदार्थ खेती थियो । किसानलाई लागुपदार्थ उत्पादन गर्न लगाएर त्यहाँका आतङ्ककारीले युरोपलगायतका देशमा निर्यात गर्दथे । त्यसबाट प्राप्त मोटो रकमले हतियार खरिद गरिन्थ्यो । आखिर हतियारले त्यहाँ प्रजातन्त्र ल्याएन । आतङ्ककारी सत्तामा आएपछि अफगानिस्तानमा सर्वसाधरण बस्न नसकेर धेरै जनता विदेश पलायन भएका छन् । के हामीले उनीहरूकै नियति ब्यहोर्ने हो?

अफगानिस्तान, पाकिस्तान विश्व राजनीतिमा आज पश्चिमा मुलुकअनुकूल छैन । त्यहाँको बजार अर्कैको हातमा पुगेपछि पश्चिमेली आँखा अब नेपालमा परेको छ । उनीहरूका स्वार्थी लयमा विभिन्न गैरसरकारी संस्था, जनप्रतिनिधि, स्वार्थसमूह स्वर मिलाएर गाँजा खेतीले आर्थिक समृद्धि ल्याउने गीत चील आयो कै शैलीमा गाइरहेका छन् । अन्तर्राष्ट्रिय व्यापारी समूहले गरिब मुलुकको असहायपनबाट फाइदा उठाउँछन् । प्रलोभन देखाएर जालोमा पार्छन् । उनीहरूले गाँजा खेती, अफिम खेती गरेमा किसानबाट उच्च मूल्यमा खरिद गरिदिने आशा देखाइदिन्छन् । सोझा किसान धान, गहुँ रोप्न छाडेर गाँजा रोप्न थाल्दछन् । केही वर्ष राम्रै मूल्य देलान् तर कालान्तरमा उनीहरूले खेती गर्दा

लागेको मूल्य पनि नउठ्ने मूल्यमा लिन खोज्छन् । यसको दृष्टान्त उखु किसानको हाल हेरे पुग्छ ।

गाँजा रोप्ने किसान उखु किसानकै नियतिमा पुग्नेछन् । उखु स्वयमले त केही बिगार्दैन त्यो खाए पनि गुलियै हुन्छ । उखु पेले सख्खर बन्छ । गाँजा नबिकेपछि आफै खाने कुरो भएन । नखाउँ भने पनि कोही न कोही घर परिवारका सदस्य दिन रात गाँजासित उठबस गरेपछि शिवको प्रसाद सम्झेर सेवन गरिहाल्छन् । लागुपदार्थको पहुँच बढेपछि दुर्व्यशनीको संख्या स्वतः बढ्नेछ । यसरी किसान परिवारको नियति दर्दनाक अवस्थामा पुग्न एक दशक पनि लाग्ने छैन ।

गाँजा खेतीबाट प्राप्त हुने आर्थिक लाभले किसानको पेट हैन ब्यापारीको पेट मात्र भरिनेछ । देशमा समृद्धि होइन बहुराष्ट्रिय कम्पनीको स्वार्थसिद्धि हुनेछ । हामीले न भने जति नगद पाउँछौं न त हामीलाई चाहिने अन्न फलाउँछौं । घरमा दुर्व्यसनी परिवार सदस्य मात्र जन्माउँछौं । के गर्नु, हाम्रा जनप्रतिनिधि तिनकै दलाल भएका छन् । रातारात फेरिएको तिनीहरूको आर्थिक हैशियतले त्यही पुष्टि गर्दछ ।

आज विश्वमा हातहतियार, गोलाबारुदको उद्योग धन्दा फष्टाएको छ । लागुपदार्थ व्यापारमा आतङ्ककारी सङ्गठन जोडिएका हुन्छन् । आज अशान्त देशका अर्थतन्त्रभित्र लागुपदार्थ र हातहतियारले धमिराले देशलाई जर्जर पारेको अवस्था छ । अफ्रिकी मुलुकको आर्थिक अवस्था बिग्रनु र सामाजिक अस्थिरता हुनुमा त्यहाँ मौलाएको आतङ्कबाद प्रमुख कारण हो । त्यो अवस्था आउनुमा त्यहाँ गरिने लागुपदार्थको खेती र ब्यापार पनि जिम्मेवार छन् भनेर विभिन्न प्रतिवेदन प्रकाशित छन् । लागुजन्य उत्पादनको व्यापारले देशको शान्ति सुरक्षा धरापमा पर्दछ । त्यसकारण गाँजा खेतीबाट कालान्तरमा देश गम्भीर रुपमा अशान्त र अस्थिर बन्दछ ।

यदि गाँजा खेती गर्दै जाँदा यसमा लाग्ने सय परिवारमध्ये पाँच परिवारका सदस्य कुलतमा फसे भने त्यसको मूल्य बाँकी ९५ परिवारले कमाएको मूल्यले चुकाउन सक्दैन । किनभने यसको प्रभाव जटिल र दीर्घकालीन प्रकृतिको हुन्छ । यसले व्यक्ति, परिवार मात्र हैन राष्ट्रको अर्थतन्त्र र शान्ति अमन चयनमा दूरगामी प्रभाव पार्दछ । तसर्थ गाँजा खेतीबाट हुने व्यापारको फाइदाले समाजलाई कहिल्यै क्षतिपूर्ति नहुने गरी नोक्सान गर्दछ ।

छिमेकी मुलुकको इतिहास साक्षी छ । चीनको अफिम युद्धले सिकाएको पाठबाट सिक्नुपर्दछ । उन्नाइसौं शताब्दीमा जुनबेला चीनको ब्यापार बलियो थियो त्यसबेला बेलायतले निर्यात गर्ने वस्तु पाएन । चीनमा भित्रभित्रै अफिमको कुलतले समस्या पारिरहेको बेलायतले थाहा पायो । त्यही कमजोरीको फायदा उठाउन बेलायतले भारतको बंगालमा अफिम खेती गर्‍यो । उक्त अफिम बेलायती ईष्ट ईण्डिया कम्पनीले चीनमा तस्करी गर्‍यो । फलस्वरुप चिनीया समाजमा अफिम सेवन विस्तारले देशलाई अस्तव्यस्त बनाइदियो । त्यहाँका राष्ट्रवादी चिनियाँले

लागुपदार्थ दुर्व्यसनले देश तहसनहस भएकाले त्यो ब्यापारको विरोध गरे । परिणामस्वरुप बेलायत र फ्रान्सले चीनसित युद्ध भयो । अफिम युद्धमा चीन पराजित भयो । परिणामस्वरुप चीन मकाओ, हङकङ लगायतका व्यापारिक केन्द्रहरू पश्चिमा मुलुकलाई सुम्पन चीन बाध्य भयो । अवधि भुक्तानपछि हाल हङकङ, मकाओ चीनले फिर्ता पाएको छ । तर अफिम युद्धदेखिको प्रतिशोधले आज चीन र पश्चिमेली मुलुकबीच सम्बन्ध चिसो छ ।

हामीले अध्ययन अनुसन्धानका नतिजाबाट पनि सिक्नुपर्दछ । छिमेकी मुलुकका इतिहास र घटनाबाट धेरै कुरा सिक्न सकिन्छ । निकासी गर्न भनी खेती गरिएका त्यस्ता कुलतजन्य वस्तु स्थानीय बजारमा सहज उपलब्ध हुन्छ र जनसंख्याको सानो अंशले मात्रै पनि यसको खपत गरिदिएमा कुलतले युवाजगतमा डढेलोझैं सल्कन्छ । जसले देशलाई खरानी पार्दछ । जनताले मुलुक चलाउन नसकेपछि अरुको शासन देशमा चल्नेछ । हामीले विचार नगरिकन लागुपदार्थ खेतीमा हात हाल्यौं भने भोलि युद्धभन्दा भयावह दशा भोग्नु पर्नेछ । त्यसैले कसैको लहै लहैमा लागेर नशालु वस्तु उमारेर समृद्ध बन्ने सपना त्यागौं ।

मानव जातिलाई घातक वस्तुको व्यापारले मासिनलाई समृद्ध बनाउँछ भन्नु मानवताविरोधी कुतर्क हो । हामी उमारौं मात्र, तर आफू नखाऔं अरु मात्र खाउन् अर्थात् हामी सप्रिऔं अरु बिग्रिउन भन्ने गैरजिम्मेवारी नीतिले कदापि विश्वशान्ति आउँदैन । आज संसारमा कुनै पनि देश यस्ता कुवस्तु उमारेर बेचेर धनि भएका छैनन् । बरु त्यस्ता देश आतङ्कवादीको कब्जामा पुगेका छन् । आज हतियार बनाएर विश्वमा शान्ति ल्याउँछु भन्ने मुलकहरू विश्वयुद्धउन्मुख छन् । अतः हतियार र लागुपदार्थ मानवविरोधी वस्तु हुन् ।

गाँजालाई जडिबुटिको रुपमा उत्पादन गर्नलाई नियन्त्रित खेती गर्नुपर्दछ । यद्यपि, गाँजा खेतीलाई आम खेतीसरह नगदे बालीको रुपमा खेती गर्नु वा प्रोत्साहित गर्नु कदाचित हुँदैन । देशलाई समृद्ध बनाउने सपना देख्ने अभियन्तालाई छिमेकी मुलुक भारत, चीन र अफगानिस्तानमा भएका दृष्टान्त र इतिहास हेर्न आग्रह गर्दछु । गाँजा खेती गरेर नेपाल र नेपालीको भविष्यलाई अनिश्चयको भुमरीमा नधकेलौँ ।

धान, गहुँ वा अन्य नगदे बाली, फलफूल खेती, चिया खेती आदि गरौं । समयमा किसानलाई मल पुऱ्याऔं, सिचाई पुऱ्याऔं । यस्ता कुरामा सरकारलाई दवाव दिनु पर्दछ । जनप्रतिनिधिले किसानको माग र आवश्यकताको चिन्तन र वकालत गरुन् । त्यस अनुकूलका कानून बनाउन्, योजना र नीति ल्याउन् । हामी त्यही अपेक्षा गर्दछौं ।

हेक्का रहोस्, घरमा जाँडरक्सी बनाएपछि जसरी परिवारका एकदुई सदस्य कुलतबाट प्रभावित हुन्छन् । कुनै घर बिगार्नलाई एक जना नै काफी हुन्छ । त्यसैले लागुपदार्थ फलाउने खेती गर्नु भनेको भावी पुस्ताको भविष्य नाश गर्ने वातावरण तयार पार्नु हो । यस्ता कुलतजन्य वस्तु मौलाएमा देश र विश्वमा कहिल्यै शान्ति

आउँदैन ।

लागुपदार्थ, नशालुपदार्थ, मादकपदार्थ, सूर्तिजन्य पदार्थलाई प्रबर्धन गर्नु जनस्वास्थ्यविरुद्ध मात्र नभएर समाजविरोधी, राष्ट्रघाती वा आत्मधाती छ ।

## सन्दर्भ सामग्री

अफगानिस्तान ओपियम सर्भे (२०२१) कल्टिभेसन एण्ड प्रडक्सन, यूएनडिओसी रिसर्च, यूनाइटेड नेसन्स अफिस अन ड्रग एण्ड क्राइम–२०२१

गुडहेण्ड, जोनाथन (२००४) फ्रन्टियर एण्ड वार्स, दि ओपियम इकोनमी इन अफगानिस्थान १९१, जर्नल अफ अग्रारियन चेञ्ज, भोलुम ४, न. १ र २, जनवरी र अप्रिल २००४

जियाइ, मोजटाबा, हाजिजादेह, रेजा, खोरामी, अरास एट अल, (२०१९) कार्डियोभास्कुलर कम्प्लिकेसन्स अफ क्रोनिक ओपियम कन्ज्युम्पसन, अ न्यारेटिव रिभ्यू आर्टिकल, इरान जर्नल अफ पब्लिक हेल्थ

पीटर, ग्रेचेन (२००९) हाउ ओपियम प्रफिट्स दि तालिवान, युनाइटेड स्टेट्स इन्स्टिच्यूट अफ पिस

प्लेचर, केनेथ, (२०२१, डिसेम्बर ९) ओपियम वार, इन्साइक्लोपिडिया ब्रिटानिका, https://www.britannica.com/topic/Opium-Wars.

यूएस गभर्मेण्ट प्रिन्टिङ अफिस (२००१) ड्रग ट्रेड एण्ड दि टेरर नेटवर्क, हियरिङ विफोर दि सबकमिटि अन दि क्रिमिनल जस्टिस, ड्रग पोलिसी एण्ड ह्युमन रिसोर्सेज ड्रग ट्रेड एण्ड दि टेरर नेटवर्क ।

# २६ मंगलग्रहमा मानव उत्रेको दिन

२०७५ मंसिर ११ का दिन मानव इतिहासमा महत्वपूर्ण ऐतिहासिक घटना भएको छ । अमेरिकी अन्तरिक्ष संस्था नासाले पठाएको अन्तरिक्ष यान 'ईनसाइट लेंडर' ६ महिनापछि मङ्गल ग्रहमा अवतरण गर्न सफल भएको छ । मङ्गल ग्रह त्यस्तो ग्रह हो जहाँको भूबनौट र वातावरण पृथ्वीसंग मिल्दोजुल्दो छ । समाचारअनुसार अब यान मार्फत् पुगेको रोबोटले त्यहाँको जमीनको सतह र जमीनभित्र ५ मीटरसम्मको अवस्था अध्ययन गर्नेछ । अतीत र वर्तमानमा त्यहाँ जीवन रहे–नरहेको अध्ययन गरिनेछ । भविष्यमा त्यहाँ मानव बस्ती बसाउन सकिने–नसकिने संभावनाको खोजी हुनेछ । त्यत्ति मात्र नभएर अध्ययनले पृथ्वी उत्पत्तिबारे नवीन तथ्य उजागर गर्ने संभावना भएको स्रोतले जनाएको छ । अतः यो अन्तरिक्ष अभियानले मानव अस्तित्व र भविष्य बारेमा नौलो आयाम थप्नेछ । यस अवसरमा अमेरिकी सरकार, नासा र वैज्ञानिकहरूलाई शुभकामना छ ।

आज विश्वको चासो अन्तरिक्ष जगतमा बढेको छ । हाल नासाको मङ्गल अभियानमा भारतका वैज्ञानिकले पनि भाग लिएको खबर छ । उक्त महान अभियानमा एक नेपाली युवा वैज्ञानिक लुजेन्द्र ओझाको नाम पनि जोडिएको छ । लुजेन्द्र मंगल ग्रहमा पानीको खोजी अध्ययन टोलीमा संलग्न छन् । नेपाली शोधकर्ताले अमेरिकाको नासाजस्तो प्रतिष्ठित संस्थामा आबद्ध रहेर काम गर्नु देशकै लागि गौरव हो । अनुसन्धानकर्ता लुजेन्द्र लगायत आबद्ध सबैलाई शुभकामना छ ।

देशको नाम राख्नमा नेपाली खेलाडीहरूले पनि मेहनत गर्दैछन् । नेपाली क्रिकेट खेलाडी सन्दीप लामिछानेले भारतीय क्रिकेट जगतमा क्षमता प्रदर्शन गर्दैछन् । उनले हिडेको बाटो देखेर भविष्यमा नेपाली खेल क्षेत्रमा नयाँ प्रतिभा जन्मने संभावना बढेको छ । उल्लिखित केही दृष्टान्तले नेपाल र नेपालीको गौरव बढाएका छन् । यस्ता समाचारले नेपालमा प्रतिभाको कमी छैन, केवल अवसर चाहिएको छ भन्ने सन्देश दिएको छ । आजको प्रतिस्पर्धात्मक युगमा हरेक व्यक्तिमा अनुशासन, अठोट र अग्रसरताको खाँचो छ ।

मङ्गल ग्रहमा यान अवतरण गरेर ब्रम्हाण्डलाई नजिक ल्याएको ऐतिहासिक दिनमा यता नेपालमा ओली सरकारले सामाजिक सुरक्षामा एउटा गतिलो कार्यक्रम अघि सारेको छ । मजदूरका हितमा श्रमजीवी, कम्पनी र सरकारबीच सहकार्य गर्ने

कार्यक्रम सरकारले ल्याएको छ । कार्यक्रम सफल भएमा अब राज्यभित्र कुनै पनि निजी प्रतिष्ठानमा काम गर्ने कर्मचारी, मजदूरको आर्थिक भविष्य एक हदसम्म सुनिश्चित हुनेछ । निजी क्षेत्रका कर्मचारीको आर्थिक सुरक्षास्वरुप पेन्सनको व्यवस्था गर्न लागिएको हो । सहभागितामा आधारित पेन्सन प्रणाली सरकारले घोषणा गरेको छ । यस्ता पेन्सन सुविधा सम्पूर्ण मजदूर र किसानसम्म पुऱ्याउने लक्ष्य सरकारले राखेको कुरा सार्वजनिक भयो, जुन स्वागतयोग्य छ ।

हाल संचालित सामाजिक सुरक्षा कार्यक्रम प्रभावकारी बनाउन बीमा, बैंकलाई सहभागी गराउन आवश्यक छ । विश्वासिला र पारदर्शी कार्यक्रम ल्याएर निजी क्षेत्रको मन जित्नसके सामाजिक सुरक्षा अभियान सफल हुनेछ । यसमा सरकारी अनुदान पनि अपेक्षित छ ।

अमेरिकामा जस्तो आर्थिक रुपमा समृद्ध देशमा पनि तथ्याङ्कअनुसार ९ प्रतिशत बृद्ध गरिबी रेखामुनि छन् । उनीहरूको बृद्धावस्था कठीन भएको रिपोर्ट बाहिर आएको छ । हाल विश्वमा सरदर आयु बढ्दो क्रममा छ । नेपालमा हाल सरदर आयु ७० वर्ष माथि पुगेको छ । सरकारले बृद्धावस्थामा चाहिने न्यूनतम् आधारभूत आवश्यकता पूरा गर्नुपर्दछ । अब यसमा सरकारले विशेष ध्यान दिनुपर्दछ । देशमा बृद्धभत्ता आरम्भ गर्ने सरकारलाई जसरी नेपाली जनताले सदा सम्झेका छन् उसरी नै लोककल्याणकारी पाइला चाल्ने सरकारलाई जनताले सम्झनेछन् । श्रमिकलाई सामाजिक आर्थिक सुरक्षा प्रदान गर्नु सरकारको अग्रगामी कदम हो । सरकार र निजी क्षेत्रलाई यसमा सफलता मिलोस्, हार्दिक शुभकामना ।

यो अभियानको आरम्भताका देखिएको भड्किलो प्रचारशैली भने आलोच्य छ । सडक सडकमा उहिले राजाको शैलीमा प्रधानमंत्री खड्गप्रसाद ओलीको पूर्णकदको तस्वीर टाँसेर प्रचार गरियो जुन आवश्यक थिएन । यो जनताको सरकार हो । सरकारले पुरानै पाराको उत्ताउलो प्रचारशैली देखायो, जुन पचेन । यस्ता कमी कमजोरी फेरि नदोहोरिउन् ।

अहिले त कार्यक्रम आरम्भ भएको मात्र हो, जसको फल पाक्न अझै धेरै वर्ष लाग्दछ । त्यसैले यो कार्यक्रमको प्रचार सरकारले सडकमा गर्नुभन्दा पनि सम्बन्धित क्षेत्रमा गएर गर्नुपर्दछ । सरोकारवालासित अन्तरक्रिया र उत्प्रेरणा गर्नु श्रेयस्कर हुन्छ । प्रचारमुखी शैलीभन्दा सिर्जनात्मक कार्यशालामा ध्यान केन्द्रित गर्नु पर्दछ ।

विदेशको समकालीन एक विपद्लाई पनि नियालौं । अमेरिकाको क्यालिफोर्नियामा हालै भीषण आगलागी भयो । जहाँ धेरै जनधनको क्षति भयो । यस प्राकृतिक विपदलाई जलवायु परिवर्तनसित गाँसेर हेरिन्छ । यही जलवायु परिवर्तनको विषयमा हालै अमेरिकी सरकार र ३०० भन्दा बढी बैज्ञानिकहरूले तयार पारेका १६ सय पृष्ठको प्रतिवेदनलाई अमेरिकी राष्ट्रपति ट्रम्पले खारेज गरिदिएका छन् । ट्रम्प सरकारको जलवायुसम्बन्धी बर्तमान नीतिले निकट

भविष्यमा अमेरिका लगायत विश्वले ठूलो क्षति व्यहोर्नु पर्ने सुझाव उक्त प्रतिवेदनमा छ । ट्रम्पले चीनको हवाला दिएर सुझावलाई ठाडै अस्वीकार गरिदिएका छन् । शक्तिराष्ट्रको यो गैरजिम्मेवार कार्य विश्वका वातावरणप्रेमी जनताको लागि दुःखद समाचार हो ।

व्यापारिक पृष्ठभूमिका राष्ट्रपति ट्रम्पको वातावरणसम्बन्धी नीति र दृष्टिकोण मानवमैत्री भएन । उनको नारा अमेरिका र अमेरिकी सबैभन्दा श्रेष्ठ देश र जाति भन्ने अहङ्कारवादले भरिपूर्ण छ । केवल अमेरिका पहिलो (अमेरिका फस्ट) मुखमा झुन्डिएको छ । उनी जे कुरामा पनि 'पहिलो अमेरिका' भन्ने नारा लगाउँछन । उनले आफ्नो दल (रिपब्लिकन पार्टी) लाई नवराष्ट्रवाद (नियोनेसनलिज्म) मा होमेको आरोप लागेको छ । जेहोस्, विश्वको अग्रणी मुलुक अमेरिकाले विश्वमा देखिएको जलवायु परिवर्तनको चुनौतिप्रति देखाएको उदासिनता अक्षम्य छ । ट्रम्प प्रशासनको यो नीतिले वर्तमान राष्ट्रपति पदको गरिमा मात्र नभएर सिङ्गो अमेरिकाको छविलाई धुमिल तुल्याइदिएको छ । यद्यपि, अमेरिका भित्रै यसको विरोध भएको छ । हामी विश्वका विकासशील मुलुकका जनता अमेरिकी सरकारले जलवायु परिवर्तन सवालमा दायित्वबोध गरोस् भन्ने चाहन्छौं । विश्वको जलवायु वातावरणमैत्री नीतिलाई अमेरिकाले निरन्तरता देओस् ।

अब जनसंख्यासम्बन्धी समाचारको चर्चा गरौं । मेक्सिको भएर अमेरिका प्रवेश गर्न खोज्ने आप्रवासीलाई रोक्न अमेरिकी राष्ट्रपति ट्रम्प प्रशासनले कठोर कदम चालेको छ । हाल अमेरिकी प्रशासनले विदेशी नागरिकप्रति पूर्वाग्रही र अमानवीय नीति अवलम्बन गरेको छ । अर्कातर्फ अमेरिकी टिभी च्यानल सिएनएनले द्वन्द्वबाट प्रभावित अफगानिस्तानको एउटा स्थलगत रिपोर्ट प्रसारण गरेको छ । उक्त च्यानलले हाल अफगानिस्तानमा सुख्खाबाट प्रभावित जनताको दरिद्रताको हृदयविदारक दृश्य देखाइदिएको छ । उक्त रिपोर्टमा गरिबीका कारणले जीवन धान्नको लागि त्यहाँका किसानहरू आफ्ना बालबालिकालाई विक्री गर्दछन् । मानिसलाई गाई–वस्तु वा सामग्रीसित विनिमय गरिरहेका छन् । उक्त टेलिभिजन कार्यक्रम हेर्दा रङ्गीन पर्दामा सुन्दर फूलजस्ता बालबालिकाहरू रुँदै रुँदै आफ्ना आमाबासित छुट्टिदै गरेको दृश्य देख्दा यो मन रोयो । मैले साहित्यमा यदाकदा यस्ता कुरा पढेको थिएँ । आज आँखाले काँचको पर्दामा देखें । हाम्रै नजिकैको भूगोलको यथार्थ देख्दा मनमा अनेक कुरा खेल्न थाले । भावनात्मक रुपमा म पनि केही दिन विचलित भएँ । केही दिन त्यो च्यानल नै हेरिन । के गर्नु, आखिर यथार्थ आत्मसात गर्नै पर्दछ । मनमा लागेका भावनात्मक डामलाई शब्दमा पोखेरै भए पनि मन शान्त पार्न खोज्दैछु ।

अन्त्यमा, अब केही सुखद समाचारका चर्चा गरौं । सञ्चार माध्यममा यदाकदा सुखद समाचार पनि सुनिन्छन् । चीनमा हालै वैज्ञानिकहरूले आनुवंशिकी डिएनएको सफल परीक्षण गरेको समाचार प्रकाशमा आएको छ । डा. सनयात सेन विश्व विद्यालका वैज्ञानिकहरूले मानव कोषभित्र डिएनएको

पुनःसंरचना गर्न सफलता पाएका छन् । थलसेमिया नामक एक घातक रक्तरोगको उपचारमा उक्त प्रविधि उपयोगी हुने टोली–नेता जुनजुवाहो ह्वाङले बताएका छन् । यसअघि चीनमा गरिएका कतिपय आनुवंशिकी अनुसन्धानलाई पश्चिमेली मुलुकका वैज्ञानिकले नैतिकताको सवाल उठाएर आलोचना गरेका थिए । 'प्रोग्राम गरिएका बालक 'जन्माउने चीनको आविष्कारप्रति युरोपका वैज्ञानिकहरूले नैतिक प्रतिवन्धात्मक सवाल उठाएका थिए । सफल परीक्षण पश्चात ती कोषहरू नष्ट गरिएकाले चिन्तित नहुन चिनियाँ शोधकर्ताहरूले दावी गरेका छन् ।

विज्ञान र प्रविधि क्षेत्र सदा लोकहितमा लागोस् । यो क्षेत्रले जिम्मेवारपूर्वक विवेकसम्मत शोधकार्य गर्नुपर्दछ । मानवीय मूल्य, मान्यता र मानव अस्मितालाई चोट पुग्ने गरी कुनै पनि काम वैज्ञानिक जगतबाट नहोस् । शुभकामना ।

# २७ हामीलाई कस्तो खुशीको चाहिन्छ?

मानिसले सबैभन्दा बढी चाहेको कुरा के हो भनेर सोधेमा प्राय: सबैको उत्तर आउँछ, खुशी । मानिसले धेरै अघिदेखि खोजेको र अझै पनि पूर्ण रुपमा पाउन नसकेको चीज खुशी नै हो । खुशीको बारेमा मानिसले धेरै सोचे, विचारे तर अझै पनि मानिस निर्क्यौलमा पुगेका छैनन् आखिर यो खुशी भनेको हो के?

खुशी सम्बन्धमा ग्रीसेली दार्शनिक अरस्तुले सर्वप्रथम दर्शन नै स्थापित गरिदिएका छन् । उनका अनुसार खुशी भनेको असल मानिस हुनु हो । मानिस कसैको दासत्वमा नपरिकन स्वाभिमानमपूर्वक बाँच्न पाउनुलाई उनी खुशी मान्दथे । त्यसैले खुशी एउटा लक्ष्य बनेको छ जुन पाउन असम्भव नभए पनि कठिन छ ।

अर्का ग्रीसेली दार्शनिक एपिक्युरसअनुसार खुशी सानातिना कुराबाटै प्राप्त हुने चीज हो । ठुला कुराले मात्र होइन मानिसलाई साना कुराले नै बढी खुसी दिन्छन् । यसकारण हामी सानातिना कुराबाट पनि सन्तोष र खुशी प्राप्त गर्न सक्दछौं ।

पश्चिमेली जगतमा क्रिश्चियन धर्मको उदयपछि खुशीको अवधारणामा परिवर्तन आयो । ईसाई दर्शनानुसार खुशी यो लोकमा नपाइने वस्तु हो । खुशी परलोकमा मात्र पाइने चीज हो भनेर ईसाई दर्शन व्याख्या गर्दछ । यसरी धर्मले खुशीलाई अलौकिक वस्तु मान्दै आदिभौतिक शैलीमा व्याख्या गर्दछ । आस्थानुसार खुशी पाउन मानिसले धर्मगुरुले भनेबमोजिम गर्नुपर्दछ । ईसाइ दर्शनमा अझ जीवन बलिदान दिनुलाई खुशी मानिन्छ । मानिसले ईश्वरका नाममा शरीर त्यागेपछि अर्को जुनीमा मात्र खुशी पाइन्छ भन्ने ईसाई मान्यता छ ।

खुशी सम्बन्धी हिन्दू दर्शनको व्याख्या पनि उस्तै नै छ । हिन्दू धर्मग्रन्थले क्षत्रीय धर्मको व्याख्या गर्दा आफ्नो जीवन वलिदान दिनुलाई खुशीको मार्ग बताइएको छ । युद्धमा जिते सिंहासन पाइने अनि वीरगति पाए स्वर्गको सुखासन मिल्ने भनेर हिन्दू धर्मले लडाईकालागि क्षत्रीयलाई अभिप्रेरित गर्दछ । यसरी धर्मशास्त्रले क्षत्रीय धर्म सुखको नाममा मानिसलाई युद्धोन्मुख तुल्याइदिएको छ । साहित्य रचनाकर्ता पुरोहित वर्गले शासक अर्थात् बलिया, बाङ्गालाई युद्धनिम्ति उक्साएको प्रष्ट देखिन्छ । सत्तालाई खुशी र सुखलाई धर्म मान्ने मूल्यमा नै महाभारत कथा बुनिएको छ । सबै धर्मले मोक्ष, सत्ता, खुशी वा सुखका पक्षमा वकालत गर्दछन् । खुशीको बाटो देखाउने क्रममा साहित्यकारले मानिसको भावनामा खेलेर सुन्दर रचनामार्फत्

भुल्याउने वा स्वार्थसिद्धि गर्ने काम गरेका छन् ।

पश्चिमेली मुलुकमा पूँजीवादको विकासले शिक्षाको प्रकाश छायो र बजारको विकास पनि भयो । पूँजीवादको उदयपछि पश्चिमी जगतमा खुशीको परिभाषामा परिवर्तन आयो । पूँजीवादले व्यक्तिगत स्वार्थ पूरा गर्दै पूँजी र वस्तु संकलन गर्नुलाई खुशी मान्न थालियो । उनीहरू भौतिक वस्तुले मानिसको इच्छापूर्ति हुने र त्यसबाट खुशी मिल्नेमा विश्वास गर्न थाले । पश्चिमेली जगतमा वस्तुको संग्रहलाई खुशी मानिन्छ । त्यसकारण उनीहरूले विभिन्न मुलुकहरूलाई उपनिवेश बनाएर त्यहाँबाट प्राकृतिक साधनको दोहन गरे । त्यहाँका पुरातात्विक वस्तु लुटेर, चोरेर लगे अनि व्यक्तिगत म्युजियम बनाए । हाम्रा देवीदेवताका पुराना मूर्तिहरू त्यसकै सिकार भए । पश्चिमाको सिको एसियालीले पनि गरे । नेपालमा पनि हुनेखानेले आजकल मोटर, गाडी, बंगला बनाउनुलाई खुशी ठान्दछन् । उहिले बुढापाका तीर्थ जानुलाई खुसी मान्दथे । आज उनीहरूका सन्तान पश्चिमेलीको सिको गरेर देश, विदेश घुमेर खुशी पाइन्छ भन्ने ठान्दछन् ।

सन् ५० र ६० को दशकमा विश्वमा खुशी राजनीतिक तथा सामाजिक–सांस्कृतिक मूल्य र मान्यतामा आधारित थियो । समाजमा मानिसले दासताबाट मुक्ति पाउनुलाई खुशी भन्दथे । विदेशीको शासनबाट मुलुक स्वतन्त्र हुनुलाई सुख मान्दथे । त्यही क्रममा विश्वमा मानिसले बाँच्नलाई चाहिने विभिन्न नैसर्गिक अधिकार पाउनलाई खुशी मान्न थाले । यो क्रम पश्चिमबाट पूर्वमा सरेको थियो । फलस्वरुप हाम्रो छिमेकी मुलुक भारत र चीन पश्चिमेली साम्राज्यवादको प्रत्यक्ष निसानामा परे । नेपाल पनि लामो कालदेखि विकसित मुलुकहरूको अर्धउपनिवेश भएको छ । यहाँका राष्ट्रप्रेमी जनता स्वतन्त्र, सक्षम मुलुक नेपाल चाहन्छन् । उनीहरू स्वतन्त्र, समावेशी राष्ट्रको नागरिक हुनपाउनुलाई खुसी मान्दछन् ।

विश्वमा विस्तारै उपभोगवादी सोच र शैलीको विकास भयो । बहुराष्ट्रिय व्यापारिक कम्पनी र आमसञ्चारले उपभोगवादलाई प्रबर्द्धन गरिरहेका छन् । ब्यापारबाट कमाउने धन्दामा सबै लिप्त छन् । उनीहरू आमसञ्चारमार्फत् खुशी भनेको उपभोगबाट आउने वस्तु हो भनी झ्याली पिट्दछन् । उत्पादित सामग्रीबाट प्राप्त हुने नयाँ स्वाद वा अवस्थालाई खुशी भन्दै धुँवाधार विज्ञापन गर्दछन् । यसरी पूँजीवादले नयाँ नयाँ वस्तुको उपभोगले नै मानिसलाई खुशी मिल्छ भनेर दुनियाँलाई दिग्भ्रमित तुल्याइरहेछन् । पूँजीवादका विभिन्न साधनले मानिसको दिमागमा रङ घोलिदिएको छ । फलस्वरुप मानिस यही सोंचका पछि खुसी खोज्दै दौडिरहेका छन् ।

खुशीलाई ब्याख्या गर्ने मनोवैज्ञानिक सिद्धान्तको पनि विकास भएको छ । आज यौन मनोविज्ञानले मानिसमा अलग धारणा विकसित गरिदिएको छ । बीसौं शताब्दीमा सिग्मण्ड फ्रायडको यौनवादी सिद्धान्त ल्याए । उनले मानिसको यौनेच्छा, सन्तुष्टि र व्यवहारको व्याख्या गरे । यौनलाई आनन्द, खुसी भनी ब्याख्या गरियो । अर्का यौन मनोवैज्ञानिक विलियम रिकले पनि स्वच्छन्द प्रेम र

यौनिकतासित खुशीलाई जोडिदिए । उनले पनि यौन र खुशीको सम्बन्धबारे थप व्याखा गरे । यौनवादी दृष्टिकोणले खुसीको व्याख्या गर्ने तथा यौनबाट खुशी खोज्नेको संख्या आज उल्लेख्य मात्रामा बढेको छ । समाजमा यौन आनन्दलाई खुशी मान्ने बुझाइ पुरानै भए तापनि यसको आयाम विस्तार भएको छ ।

कार्ल सेडरस्ट्रोमको ह्युमन पोटेन्सिय मुभमेण्ट (१९६०) ले खुशीलाई जटिल ढङ्गले ब्याख्या गरिदिएका छन् । उनका अनुसार खुशी केवल कल्पना (फेन्ट्यासी) मात्र हो । उनको यो धारणामा पूँजीवादले खेल्ने मौका पायो । साहित्य पनि कल्पना (फेन्ट्यासी) भित्र रूमल्लियो । पूँजीवादले मानिसलाई खुशी प्राप्तिका लागि सम्पत्ति जोड्ने र वस्तु संकलन गर्न सिकाएको थियो । फलस्वरुप मानिसबीच असमानताको खाडल बढ्दै गयो । पूँजीवाद भित्र व्यक्तिको इच्छा, प्रतिस्पर्धा, इज्जत जस्ता तत्वहरूले प्रश्रय पाए । पूँजीवादले मानिसको व्यक्तिगत खुशीलाई खोजीको केन्द्र बनाइदियो । मानिसको खुशीलाई व्यक्तिगत स्तरमा केन्द्रीत गर्नुलाई पूँजीवादको गलत प्रवृत्ति, परम्परा र परिणाम हो भनेर विद्वानहरूले बताएका छन् । पूँजीवादले सदा आनन्दानुभूति र सन्तुष्टीको मात्र वकालत गर्ने गरेको छ । उसले त्यसमा वस्तुलाई सदा जोड्ने गर्दछ ।

सन् ८० को दशकपछि विश्वमा भएका राजनीतिक परिवर्तनले व्यापारिकरणको गतिलाई तीव्रता दिएको छ । उपभोक्तावादको वकालत र विकास गर्न अमेरिका लगायत पश्चिमा जगतमा सञ्चार माध्ययले ठूलो भूमिका खेलेको छ । यसले व्यक्तिवादी सोंच र उपभोक्तावादी चेतनालाई नै मलजल गरिदिएको छ । फलस्वरुप विश्वको संस्कृति परिवर्तन र सोंचमा खुशी भनेको उपभोगवाद हो भन्ने सिद्धान्तको पक्षपोपण भइरहेको छ । उपभोगवादी शैली, संस्कारको प्रबर्द्धन र विकासले हरेक समाजलाई बजार बनाइदिएको छ । उदाहरणका लागि आज हामीलाई हरेक वर्ष नयाँ नयाँ मोडलका मोबाइल फोन, गाडी आदिको खोजी गर्ने गर्दछौँ ।

यसैबीच आजकल कोही मानिसहरू प्राचीन महर्षिझैं योग र ध्यान गरेर खुशी हासिल गर्न पट्टि लागेका छन् । यो हाम्रो शैव दर्शन वा पूर्वीय सभ्यता र संस्कृति हो । यसमा सत्यता नहुने कुरै छैन । यसलाई अध्यात्मसित गाँसेर हेरेमा खुशी चिन्ने अन्तर्दृष्टि त्यहाँ पाइन्छ । भगवान वुद्धले पनि आत्मकेन्द्रीत दर्शनको वकालत गरेका छन् ।

एकातिर अन्तर्मुखी भएर खुशीको बाटो खोजिन्छ अर्कातिर, खुशीको खोजीमा चलेको दौडमा मानिस स्वयम् खुशी दिलाउने साधन बनिरहेकामा कार्ल सेडरस्ट्रोम सचेत गराउँछन् । उनको विचारमा मानिस एक्लैले खुशी प्राप्त हुने कुरो होइन । सेडरट्रोमअनुसार मानिसले खुशी प्राप्त गर्न पहिले वरिपरिको समाज, वातावरणसित उसले घुलमिल हुन सक्नुपर्दछ । समानता, समुदाय, समस्या, सहानुभूति जस्ता यथार्थसित मानिसले साक्षात्कार गरेर मात्र मानिसलाई खुशी मिल्दछ । उनको यो सिद्धान्त मानवतावदी दर्शन हो ।

हामीसित खुशी व्याख्या गर्ने सिद्धान्तको कमी छैन । तैपनि हामी खुशी हुन सकेका छैनौं । विश्वमञ्चमा प्रक्षेपित खुशीको नयाँ परिभाषा समेट्न व्यवहारवादी, सामुदायिक र जनमुखी सिद्धान्तको वकालत हुन थालेकोमा मलाई खुशी लागेको छ । जुन दृष्टिकोण अन्तर्मुखी हैन वाह्यमुखी, व्यक्तिवादी हैन समुदायमुखी चेतनाले ओतप्रोत छ । आफूले मात्र मोक्ष वा शान्ति पाएर विश्वशान्ति नहुने रहेछ भन्ने तथ्य सिद्ध भइसकेको छ । त्यसैले हामीलाई आज सामुहिक, बाह्यमुखी, पारदर्शी चेतना, शैली र व्यवहारको खाँचो परेको छ । त्यस्ता मानवोपयोगी व्यवहारिक दर्शनबाट हासिल हुने खुशी मात्र दिगो हुन्छ ।

विश्व शान्तिलाई मलजल पुग्ने खालका सोंच र शैलीको आज आवश्यकता छ । मुख्य कुरो, खुशी मभित्रबाट भएर मात्र हुदैन हामीभित्रबाट निस्कनु पर्दछ तब मात्र दिगो खुशी वा सुख मिल्दछ ।

## सन्दर्भसामग्री

सेडेस्ट्रम, कार्ल (२०१८) दि हेप्पीनेस फेन्ट्यासी: आइएसबिएन ९७८–१–५०९–५२३८०–१, वेले ।

# २८ जीवन– ज्ञान, विज्ञान र विवेकको त्रिवेणी

उहिले विद्यालय पढ्दा कक्षाकोठामा धन ठूलो कि विद्या ठूलो? कलम ठूलो कि तरवार ठूलो? गाउँले जीवन राम्रो कि शहरी जीवन राम्रो? भनेर हामी वादविवाद गर्ने गर्दथ्यौं । हामीले पक्ष र विपक्षबारे अध्ययन र विश्लेषण गरेर पक्ष र विपक्षमा राखिने तर्कहरू मनमनै तयार पार्दथ्यौं । यी दुई पक्ष र विपक्षमा कुनमा बोल्ने हो भन्ने कुरा प्रतियोगिताकै बेला गुरूको सामु गएर गोलाप्रथाद्वारा तत्काल निर्धारण हुने गर्दथ्यो । हेर्दा सरल लाग्ने वादविवाद प्रतियोगिताको त्यो अभ्यासले जीवन जिउने कला सिकाएको रहेछ । भविश्यमा आइपर्ने जुनसुकै चुनौती स्वीकार गर्न मानसिक रूपमा तयार पारेको रहेछ । यसरी विद्यालयले विद्यार्थीलाई जीवन हेर्ने द्दष्टिकोण र मार्गको प्रारम्भिक दर्शन गराएको थियो ।

यस क्रियाकलापमा विभिन्न सन्देशहरू अन्तर्निहित थिए, जस्तै– तिमी कुनै पक्ष र विपक्षको कुरा सुन, जान, मनमा गुन अर्थात् दुवै पक्षको राम्ररी अध्ययन र विश्लेषण गर । जीवन र जगतका विषयवस्तुलाई दुवैतर्फबाट नियालेर हेर । दुवैका राम्रा र नराम्रा पक्ष केलाऊ तर पूर्वाग्राही नबन इत्याादि ।

जीवनको अन्तिम चरण अर्थात् मर्ने बेलामा कतिपय साहित्यकारहरूले विज्ञानको महत्व अवमूल्यन गर्दै अभिव्यक्ति दिएका छन् । कोही अनायास आफू ज्ञानको पक्षपाति भएको घोषणा गर्ने गर्दछन् । विज्ञानले दिएको उपहार कलम, कागज, मोबाइल, ल्यापटप, इन्टरनेट लेखकले उपयोग गर्दछ । विज्ञान निर्मित साधनसित जीवनभर सिर्जनामा ऊ रम्दछ र मर्ने बेलामा उल्टै विज्ञानलाई अपजस दिन्छ । म यसलाई पूर्वाग्रही सोंच ठान्दछु । यो बुझाइको फरकपन वा एकाङ्गीपन हो । यसरी विज्ञानलाई चोर औंलाले कमी देखाउँदा बाँकी चार औंलाले हामीलाई हाम्रो अज्ञानतातिर संकेत गर्दछ । हुन त यो पङ्तिकार साहित्यकारहरूलाई उपदेश दिने हैसियतको त होइन । यद्यपि, एउटा पाठक तथा एक सामान्य लेखकको रूपमा समकालीन नेपाली साहित्यमा रहेको जनधारणाप्रति गरिएको यो एक विश्लेषण हो । ज्ञान, विज्ञान र विवेकलाई हेर्ने यो मेरो व्यक्तिगत अवधारणा हो ।

यिनका शब्द व्युत्पत्ति नियालौं । वि+ज्ञान= विज्ञान । ज्ञानमा 'वि' उपसर्ग लागेर विज्ञान बनेको छ । यसले विज्ञान र ज्ञान आपसमा सम्बन्धित छन् भन्ने देखिन्छ । वि+देश= विदेश भए जस्तो यिनीहरू विपरार्थी शब्द (देश/विदेश) होइनन् । वि+नियम= विनियम जस्तै एकअर्काका परिपूरक हुन् । समष्टिमा ज्ञान

भनेको गन्तव्यको अन्त्य हो भने त्यहाँ पुगिने माध्यम विज्ञान हो । यसैले विज्ञान भनेको विधि वा तरिका हो भने त्यसको सहयोगले प्राप्त अद्यावधिक निष्कर्ष नै ज्ञान हो । अतः विज्ञानले अद्यावधिक ज्ञानलाई परीक्षण गरेर परिमार्जित निष्कर्षमा पुऱ्याउँछ ।

कतिपय साहित्यकारहरूले विज्ञानको आधारभूत मूल्य र मान्यताबारे चासो नराखेको प्रतीत हुन्छ । पाश्चात्य वाङ्मयमा समेत आधुनिक कालको आरम्भमा विज्ञानलाई अधुरो र अपूरो भनेर काव्यिक प्रलाप प्रकट भए । प्रथम र दोस्रो युद्ध तथा नागासाकी र हिरोसिमामा भएको बमविस्फोटले गरेको नरसंहारपश्चात् विज्ञानलाई गाली गरियो । जसको प्रभाव नेपाली वाङ्मयमा पनि परेको छ । 'ज्ञान मर्दछ हाँसेर रोइ मर्दछ' विज्ञान भन्ने उक्तिले साहित्यमा निर्धक्क प्रवेश पाएपछि परिवेश, परिणाम र पात्रको तालमेल मिलाएर गरिएका साहित्यिक सम्प्रेषणले पाठकमा गहिरो प्रभाव जमाएको छ । तर्कशास्त्रको कशीमा यथेष्ट मात्रामा नघोटिकन पाठकले त्यसलाई सहज पत्याइदिएका छन् । होमा हो, बोलीमा लोली मिलाउँदा आम जनमानसमा उक्त भनाइले साँच्चै एकप्रकारको भ्रम पारेको छ कि भन्ने मेरो ठहर छ । त्यसो भए हाम्रा धर्मग्रन्थ र पुराणहरूमा वर्णित ब्रम्हास्त्र आदि शास्त्रहरूको उपस्थितिलाई के भन्ने? यिनीहरूले युद्धमा गरेको नरसंहारलाई अभिशाप भन्ने कि नभन्ने? ती युद्धहरूमा पनि ज्ञान र शस्त्र वा विज्ञान दुवैको प्रयोग भएको छ । शस्त्र आफै प्रकट नभएर विजय हासिल गर्ने ज्ञानको उदयपश्चात युद्धमा अस्त्रशस्त्रको ताण्डव नृत्य मञ्चित भएका हुन् ।

विश्वमा आज जातीय भेदभावको ज्ञान र चेतना फैलाएर तनाव, द्वन्द्व र नरसंहार सम्मको स्थिति उत्पन्न गरियो । मानिस शिक्षित र सचेत भएपछि स्वतन्त्रता खोज्छ त्यसपछि ऊ आन्दोलन, विद्रोह र द्वन्द्व अनि नरसंहारसम्मको स्थिति ल्याउन समेत तम्सन्छ । के उसो भए यसलाई पनि ज्ञानको अभिशाप मानेर भोलिदेखि ज्ञानको मूल्यलाई अवमूल्यन गर्ने? यसमा सहमत हुने ठाउँ छैन । बरू, ज्ञान र विज्ञानको बीचमा विवेक घुसाएको खण्डमा समस्या समाधान हुन सक्दछ । ज्ञानले ज्ञानसम्मत निष्कर्ष निकालेको अर्थात् विज्ञानले विज्ञानसम्मत निष्कर्ष निकालेको तर विवेकसम्मत निष्कर्ष निकाल्न नसक्दा ज्ञान वा विज्ञान असफल भएको मान्न सकिन्छ । तर, अल्पज्ञानको आधारमा हुन गएको विज्ञानको प्रयोगबाट उत्पन्न दुष्परिणामलाई केवल विज्ञानको मात्र दोष देख्नु पक्कै न्यायोचित हुदैन ।

वैज्ञानिक साधनलाई आज मानिसले सेवक बनाएर काममा लगाएका छन् । कलकारखाना चल्ने रोबोटले औद्योगिक उत्पादन र निजी कम्प्यूटरले मानिसको क्षमता, उत्पादकत्व र गुणस्तरमा अभूतपूर्व उन्नति गरिदिएको छ । विज्ञानले आविष्कार गरेर विकास गरेको हवाइजहाज, मोटर, रेल चढेर मानिस सजिलै देशविदेश घुमफिर गर्दछन् । यसरी विज्ञानले मानव जीवन र जगतलाई सहज तुल्याइदिएको छ । यसो भन्दैमा वैज्ञानिक उन्नतिको फलस्वरूप मानिस अल्छि भएकाले नसर्ने रोग लाग्यो भनेर त्यो दोष पनि विज्ञानलाई नै दिनु तर्कसम्मत छैन

। बीसजना मानिसले गर्ने काम एउटै मेशीनले गरिदियो भनेर मजदुरी खोसियो भन्दै विज्ञानलाई सराप्न मिल्ला र? अवश्य मिल्दैन । हो, हतियारले मालिक चिन्दैन । गाडिले पनि मालिक चिन्दैन । त्यसो भन्दैमा मेसिन वा गाडि चलाउन जानेन भने त्यो आफैलाई घातक हुनसक्छ । चलाउन नजानेर हुने ज्यानको नोक्सानीको दोष पनि त्यो हतियार वा गाडिलाई वा विज्ञानलाई नै दिनु पनि पूर्वाग्रही सोच हो ।

विज्ञान अपूर्ण छ भनेर तर्क गरिन्छ । यो अवश्य सत्य कुरो हो । किनभने विज्ञानले कुनै पनि सत्यलाई तथ्यसम्मत ढंगले प्रमाणित गर्नुपर्दछ । यो विज्ञानको विशिष्ठता हो, सीमा वा कमी हो । यस अर्थमा विज्ञान अधूरो छ वा अपूर्ण नै छ । त्यसैले विज्ञानले ज्ञान जस्तो म अन्तिम सत्य हुँ भनेर आफू घमण्ड गर्दैन । बरू ज्ञान आफू अन्तिम सत्य हुँ भनेर घमण्ड गर्न पछि पर्दैन । संसारका वैज्ञानिकहरू कुनै पनि सत्यउपर तथ्यपरक ढङ्गले निष्कर्षमा पुगेपछि सवाल कालो सेतोमा छुट्टिन्छ, र विश्वव्यापी तथ्यको रूपमा स्वीकार्य हुन्छ । विज्ञानले पानीमा हाइड्रोजनको दुइटा र अक्सिजनको एउटा परमाणु मिलेर पानीको एउटा अणु बन्दछ भनेर जब भन्दछ, मेरो देशमा परमाणुको संख्या अलि फरक पर्छ भनेर कुनै वैज्ञानिकले विवाद गर्दैन । किनभने यसले परीक्षण र तर्कको लामो चरण पूरा गरिसकेको छ । तर, नेपालको एउटा ज्ञानीको ज्ञान अर्को जात, धर्म वा भूगोलका मानिसलाई नजच्न सक्दछ । किनभने ज्ञान तथ्यपरक नहुन पनि सक्छ । ज्ञानलाई ज्ञानीहरूले जडशुत्र बनाएर पेवा बनाउन पनि खोज्छन् । तर, विज्ञान खुल्ला सत्य हो सर्वत्र तथ्य हो । हो, सबै सत्यलाई विज्ञानजस्तो तथ्यले प्रमाणित गर्न असम्भव छ, भन्ने सुविधाको आड़मा सबै ज्ञान सबैलाई जच्दैनन् भन्ने कुरा ज्ञानीहरू स्वयमले बुझ्नुपर्दछ । म ठूलो, तँ सानो भन्ने भावना त्याग्नु जरूरी छ । अर्थात् ज्ञान ठूलो, विज्ञान सानो अर्थात् विज्ञान ठूलो, ज्ञान सानो भन्ने पूर्वाग्रहबाट मुक्त सोंचको खाँचो छ ।

ज्ञान वा विज्ञान मध्ये कुनै एक सानो वा अर्को ठूलो अवश्य होइन । साहित्यकारहरूले जीवनभर त्यही विज्ञानको सुखसुविधा लिएर मर्ने बेलामा विज्ञानप्रति कृतघ्नता जनाउनु पटक्कै शोभनीय देखिदैन । औषधी गर्दा निको भएन भनेर निराश भएपछि हिजो विज्ञानले गरेका सबै गुनलाई विर्सेर त्यही विज्ञान अधूरो रहेछ भनेर सत्तोसराप गर्नु भन्दा पनि हरेकको आफ्नो सीमा हुन्छ भनेर बुझ्नु पर्दछ । मानिस जन्मेपछि मर्दछ यो ज्ञानले पनि भन्छ विज्ञानले पनि त्यही भन्छ । एलोपैथी चिकित्सा प्रणालीले निको नभए आयुर्वेद वा अन्य प्रणालीमा जान सकिन्छ । एलोपैथी लगायत अन्य प्रणाली पनि विज्ञानकै देन हुन् । उपचारले रोग निको पार्छ तर एकदिन हुने मृत्युलाई कसैले निको पार्न सक्दैन । त्यत्रो चमत्कार गर्ने विज्ञानले खै मानिसलाई अजम्बरी बनाउन सकेन त! भन्ने ब्यङ्ग्योक्ति शैलीमा विज्ञानको अवमूल्यन गर्न खोज्नु निराशाभाव वा कृतघ्नशैली हो ।

निराशावादी निष्कर्षमा पुगेपछि साहित्यकारले सोच्नुपर्छ मैले दिने कुरा अब सकिएछ । किनभने आध्यात्म र साहित्यमा भिन्नता हुन्छ । आध्यात्म धर्मनिकट छ, साहित्य भावनानिकट । धर्मले मृत्युपछिको एउटा काल्पनिक मार्गचित्र देखाउँछ ।

जुन कुरा विज्ञानले गर्दैन, किनकि जुन कुरा प्रमाणित गर्न वा सिद्ध गर्न सकिदैन । प्रमाणित गर्न नसकिने कुरा विज्ञानले ज्ञानजस्तो दावी पनि गर्दैन । अवश्य, साहित्यिक मनबाट आध्यात्मिक विचार आउनु अस्वभाविक हैन । त्यसैले कुनै वस्तुगत कारणवस मनमा उत्पन्न निराशा र कुण्ठालाई मनोपरामर्श र आध्यात्मिक चिन्तनले सम्बोधन गर्नु राम्रो कुरा हो । साहित्यकारले आफ्नो अवस्था जानेर बुझेर सामान्य अवस्थामा आफू नफर्कुन्जेल संयमित रहनुपर्दछ । पाठकलाई निराशावादी सन्देश तथा नकारात्मक भाव सम्प्रेषण गरेर दिग्भ्रमित पार्नु हुँदैन । जीवन केही होइन रहेछ, सत्य कहीं छैन रहेछ जस्ता नकारात्मक सोंच वा शून्य वा हीन धारणाको विकास व्यक्तिको मानसिक स्वास्थ्यसित गाँसिन्छ ।

जसरी शरीरलाई अन्त्य गर्ने रोगको उत्पत्ति पनि शरीर भित्रै हुन्छ त्यसरी नै समाज बिगार्ने तत्व वा मानिसको जन्म पनि समाजमा नै हुन्छ । समाजले नै जन्माएको र सदा सम्मान दिएको साहित्यकारवर्गले सदा यही समाज र सामाजिक प्रणाली सफल होस् भनेर भरसक सर्वजनहिताय नभए बहुजनहिताय कर्म र सिर्जना गरी सकारात्मक सन्देश प्रवाह गर्नुपर्दछ न कि जीवनदेखि पलायन हुने निकासउन्मुख व्यक्तिवाद वा स्वार्थवादको पक्षपोषण । मानिस स्वभावैले बैगुनी जाति हो, भनिन्छ । चाहन्छु, मानिस मर्ने बेलामा कमसेकम पूर्वाग्राही नबनोस् ।

सभ्यताका प्रारम्भिक चरणमा पनि मानिसले ज्ञान आएर विज्ञानकै सहाराले ढुङ्गामा धार लगाएर हतियार बनायो, शिकार खेल्यो, विज्ञानको सहयोगमा आगो बाल्न जान्यो, आगोमा मासु पोल्यो वा खाना पकाउन जानेकाले नै मानिसको यात्रा आज यहाँसम्म संभव भयो । त्यसैले मानिसको अस्तित्वसित ज्ञानसितै विज्ञान पनि परापूर्वकालदेखि गाँसिएर आएको छ । यद्यपि यही हतियारले मानिसले जनावर मात्र मारेन पक्कै आफ्नै वंश पनि मार्‍यो । हुन त, युद्ध, र द्वन्द्व पनि जनसंख्या नियन्त्रणको प्राकृतिक नियम नै मानिन्छ । हाम्रो ध्यान त्यस्ता मानवनिर्मित मानवक्षति न्यूनतम् होस् भन्नेमा केन्द्रीत रहनुपर्दछ । त्यसैले ज्ञान र विज्ञानलाई विवेकको करेली लगाएर हाँक्न सके मात्र मानिसको अस्तित्व दीर्घकालीन हुनेछ । आज वैज्ञानिकहरूले मानिसको बस्ती पृथ्वीमा मात्र सीमित भएमा एकदिन मानवजातिको लोप हुने भएकाले अन्य ग्रहमा पनि मानव वसोवासको संभावनाको खोजी गरिरहेका छन् । फरक गुरूत्वाकर्षण र परिवेशयुक्त ग्रहमा मानिसको आयु १०० वर्षबाट बढाउन सकिने विज्ञानले दावी गरिरहेको छ ।

त्यसैले अनन्त ज्ञान, सटिक विज्ञान र आशावादी सोंचलाई सदा विवेकको करेलीले हाँके मात्र मानवजातिको अस्तित्व अनन्तकालसम्म सम्भव छ । अन्त्यमा,

हेर ! हाँसेको ज्ञान मर्ने बेलामा पनि
कत्ति रून्छ अज्ञान जाने बेला भो भनि ।।

# २९ अन्त्यमा

कुनै पुस्तक प्रकाशित गर्दा व्यवस्थापनका लागि सङ्केत नम्बर दिने चलन छ जसलाई आइएसबिएन भनिन्छ । यो अन्तर्राष्ट्रिय अभ्यास हो जुन नेपालमा पनि प्रचलित छ । यो सङ्केत नम्बर वितरण गर्ने काम नेपालमा त्रिभुवन विश्वविद्यालय केन्द्रीय पुस्तकालयले गर्दछ । त्यहाँबाट सङ्केत नम्बर लिएर पुस्तकमा राख्ने काम विभिन्न प्रकाशनले गर्दै आएका छन् । मैले पनि विभिन्न प्रकाशनबाट पुस्तक प्रकाशित गर्दा त्रिविवि केन्द्रीय पुस्तकालयबाट आइएसबिएन सङ्केत नम्बर लिएको छु ।

यो सङ्केत नम्बरको व्यवहारिक उपयोगितामा देखिदैन तापनि पुस्तक व्यवस्थापनका दृष्टिले महत्वपूर्ण छ । हामी पुस्तक परिचय दिंदा वा खरिद गर्दा पुस्तकको नाम लिने गर्दछौँ । त्यसैले यसको उपयोगिताबारे पाठकलाई जानकारी छैन ।

पुस्तक लेख्ने र छाप्ने क्रम निरन्तर जारी छ । कोरोना कोभिड–१९ महामारीको बेलामा आवतजावत सीमित भएका छन् । त्यस बेलामा मैले पनि लेखाइ अघि बढाएँ । एक दिन त्रिविवि केन्द्रीय पुस्तकालयको वेभसाइट चाहारें । त्यहाँ अध्ययन गर्दा थाहा भयो अनलाइनबाट पनि उक्त आइएसबिएन नम्बर लिन सकिने व्यवस्था गरिएको रहेछ । वेभसाइटमा दिइएको निर्देशन बमोजिम मैले आफूलाई दर्ता गरें । प्रकाशकको नाम, ठेगाना पनि दर्ता गरें । तीन हप्ता भयो चार हप्ता भयो कुनै जवाफ आएन, अर्थात् मेरो काम भएन । पुस्तकालयको फोन नम्बरमा फोन गरें तर फोन उठेन । महामारीले यातायात कठीन भएको बेलामा त्रिविवि पुस्तकालयले अनलाइनमार्फत् लेखकलाई सेवा दिन सकेको भए राम्रो हुनेथियो । यसमा पुस्तकालय व्यवस्थापन चुकेको छ ।

हाल नेपाल सरकारका विभिन्न मंत्रालय तथा निकायहरूले सूचना प्रविधिमा फड्को मारेका छन् । उदाहरणका लागि स्वास्थ्य मंत्रालयले अनलाइनबाट कोरोना कोभिड–१९ विरुद्धको खोप लिनेको नाम दर्ता गर्ने प्रणाली आरम्भ गरेको छ ।

राजश्व विभागले अनलाइनबाटै प्यान नम्बर दिने व्यवस्था गरेको छ । नेपाल सरकारले प्रचलनमा ल्याएको नागरिक एपद्वारा कार्यालयहरूको परिचयपत्र र विवरण देखाइदिने काम आरम्भ गरेको छ । खानेपानी, विद्युत कार्यालयमा अब लाइन लाग्न नपर्ने भएको छ । अब अनलाइनबाटै ग्राहकले आफ्नो महसुल तिर्ने व्यवस्थाले सहज तुल्याइदिएको छ ।

नेपालको निजी तथा आर्थिक क्षेत्रमा सूचना प्रविधिको अत्यधिक प्रयोग भएका छन् । बैंकहरूको मोबाइल एप सेवा लोकप्रिय भएको छ । नेपाल सरकारबाट स्वीकृतिप्राप्त कनेक्ट आइपीएस एपद्वारा ग्राहकले एक बैंकबाट अर्को बैंक वा व्यक्तिलाई रकम पठाउन सहज भएको छ । बैंकले दिएको एटिएम सेवा पनि उत्तिकै लोकप्रिय भएको छ । प्रविधिमा आधारित यस्ता सेवाले कोरोना कोभिड–१९ महामारीको प्रतिकूल अवस्थामा सहज सेवा प्रदान भएको छ । यसबाट जनतालाई महामारीमा सामाजिक दूरी कायम राख्न मद्दत पुगेको छ । मैले पनि उल्लेखित सेवाहरू लिएरहेको छु र सेवाबाट म सन्तुष्ट पनि छु ।

आजको व्यस्त समयमा सूचना प्रविधिले जनताका काम सहज र छरितो तुल्याइदिएको छ । यस्ता भरपर्दा अनलाइन सेवाले सूचना प्रणालीप्रति भरोसा जागेको छ । सूचनामैत्री सरकारी तथा निजी तथा गैरसरकारी निकायहररू धन्यवादका पात्र भएका छन् ।

आजको सूचना प्रविधिको युगमा सरकारलाई आँखा देखाउने विश्वविद्यालय, सरकार चलाउने विद्यार्थी उत्पादन गर्ने त्रिभुवन विश्वविद्यालयको केन्द्रीय पुस्तकालय सूचना प्रविधि उपयोगमा पछि परेको छ । आईएसबिएन दिने प्रणाली तथा व्यवस्थापनलाई मैले यसअघि धन्यवाद दिएको थिएँ । अहिले देखिएको कमजोरीलाई सुधार गर्न सकिन्छ । अतः सङ्केत नम्बर दिने अनलाइन सेवालाई चुस्त दुरुस्त राख्न त्रिविवि केन्द्रीय पुस्तकालयको अबिलम्ब ध्यान जाओस् ।

# लेखक परिचय



**नाम, थर:** डा. नवराज सुब्बा
**ठेगानाः** विराटनगर–५, मोरङ, कोशी, नेपाल ।
**मुख्य विधाः** कविता, निबन्ध, अनुसन्धान ।
**शिक्षाः** पि.एच.डी. (मनोविज्ञान), एम.ए. नेपाली), एम.पी.एच. (जनस्वास्थ्य), संस्कृति, मानवशास्त्र, समाजशास्त्र, जनसंख्या र मनोविज्ञान विषयको अध्ययन
**पेशागत अनुभवः** नेपाल सरकार स्वास्थ्य तथा जनसंख्या मंत्रालय, स्वास्थ्य सेवा विभाग अन्तर्गत जिल्ला जनस्वास्थ्य कार्यालयहरू सरकारी सेवामा तीन दशक बढी सेवा गरेको । मोरङ, झापा जिल्लामा कार्यालय प्रमुख पदमा एक दशक रही हाल सेवानिवृत्त भएको।

**कृति प्रकाशन:**

**साहित्य**

१. ‘जीवन मेरो शब्दकोशमा ’कवितासङ्ग्रह, २०६३, वाणी प्रकाशन, विराटनगर, नेपाल
२. ‘बीच बाटोमा ब्यूँझेर ’कवितासङ्ग्रह, २०६५, मोडर्न बुक्स, काठमाडौं ।
३. ‘यात्रा आधा शताब्दीको ’कवितासङ्ग्रह, २०६८, nrsubba.com.np
४. ‘चीत्कार ’मुक्तकसङ्ग्रह, २०६९, वाणी प्रकाशन, विराटनगर, नेपाल ।
५. ‘सहिदलाई सलाम ’गीतसङ्ग्रह (२०६७), साझा प्रकाशन, ललितपुर,
६. ‘मन र माटो ’गीतसङ्ग्रह (२०७३), https://nrsubba.com.np
७. ‘मनको मझेरी ’निबन्धसङ्ग्रह, २०६४, वाणी प्रकाशन, विराटनगर, नेपाल
८. ‘समयको स्वाद ’निबन्धसङ्ग्रह, २०७०, वाणी प्रकाशन, विराटनगर, नेपाल
9. Life in My Dictionary, Anthology of Poems, 2020
10. The Mind Canvas, Essay Collection, 2021
11. Self-Reflection at the Moment, Poems, 2022
12. Both Sides of Coin, Essays, 2022.

**गीत–सङ्गीत**

१. देशको माया, देशभक्ति एल्बम, सन् २०१०
२. हामी पहिले नेपाली, देशभक्ति एल्बम, सन् २०१३
३. लुकेको रहर, गजल एल्बम, सन् २०११
४. अमूल्य जीवन, आधुनिक गीत एल्बम, सन् २०१२
५. बहारसंग, आधुनिक गीत एल्बम, सन् २०१६
६. हिमालैमा हिउँ, लोकगीत एल्बम, सन् २०१४
७. भिडियो एल्बम प्रतिविम्ब ’भाग १–४

**संस्कृति**

१. किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना, २०७७, अजम्बरी प्रकाशन, काठमाडौं,

२. तुङदुङ्गे मुन्धुम समीक्षा, २०७७, हाम्रो आईडिया (प्रा.लि.), विराटनगर नेपाल

*3.* Tungdunge Mundhum Kirat Samba Myth Review, *2020*

**जनस्वास्थ्य**

१. *जनस्वास्थ्य पाटा, बाटा र अनुभूति,* लेखसङ्ग्रह, सन् २००६

२. *जनस्वास्थ्यका सवालहरू,* लेखसङ्ग्रह, सन् २००७

३. *जनस्वास्थ्यका अभ्यास र अनुभूति,* लेखसङ्ग्रह, सन् २०१७

४. *खोटाङको स्वास्थ्य,* पाश्वचित्र, सन् १९९८

5. Traditional and Modern Maternal and Child Health Care Practices and Effects in the Rajbanshi Community of Nepal, 2016.

6. Health Seeking Behaviour of Rajbanshi in Morang, Nepal, 2001.

7. Assessment of Health Improvement Program, 2003

**पुरस्कार तथा सम्मान:**

– नेपाल विद्याभूषण 'क' सन् २०१५
– पहिलो अनलाईन विश्व वेभक्याम कविता प्रतियोगितामा २००८ प्रथम
– व्यथित–काव्य वनिता पुरस्कार २०१४
– मोहन रेग्मी स्मृति वाणी पुरस्कार २००७
– बबरसिंह थापा स्मृति पुरस्कार, २००८
– गोरखादक्षिणबाहु, १९९१

**अध्ययन, अनुसन्धान:** जनस्वास्थ्य, संस्कृति विषयमा विभिन्न लेखहरू अन्तराष्ट्रिय जर्नलहरूमा प्रकाशित गरेको ।

ORCID https://orcid.org/0000-0001-5700-2179

Google Scholar https://scholar.google.com/citations?user=S6MniUYAAAAJ&hl=en

Academia.edu https://independent.academia.edu/DrNawaRajSubba

ResearchGate https://www.researchgate.net/profile/Nawa-Subba

**व्यक्तिगत वेभसाइट:** https://nrsubba.com.np

**र सम्पर्क ई–मेल ठेगाना**: dr.nawarajsubba@gmail.com




HAMRO iDEA
Implimenting Ideas...